# भाषा विज्ञानका

## सम्प्रदाय र सिद्धान्त

भाषिक चिन्तनको पूर्वीय परम्परा

युरोपेली भाषिक चिन्तन परम्परा र ऐतिहासिक भाषाविज्ञान

व्यवस्थापक/प्रकार्यपरक व्याकरणको भाषिक विश्लेषण पद्धति

रूपान्तरण व्याकरणका भाषिक विश्लेषण पद्धति

प्रकरणार्थ विज्ञान | प्रयोगार्थ विज्ञान


डा. अच्युतशरण अर्याल

डा. विश्वनाथ भण्डारी

डा. धनप्रसाद सुवेदी

यादेवी ढकाल






# भाषाविज्ञानका सम्प्रदाय र सिद्धान्त


प्रकाशक : अक्सफोर्ड इन्टरनेसनल पब्लिकेसन प्रा. लि.
अनामनगर, काठमाडौं
फोनः ०१-४७७०६१३,४७७०२५३, ४७७१०२३
फ्याक्स : ०१-४७७१०२२

वितरकः अक्सफोर्ड इन्टरनेसनल एकेडेमी
प्रदर्शनी मार्ग, काठमाडौं
फोन नं. : ०१-४२४६०२१, ४२१९६३६

प्रथम संस्करण : २०७०



मूल्य : रू.१९९
आवरण/सेटिङ : राजन गुरुङ ९८४३६२६७९३
मुद्रक : शमी सम मुद्रणालय

ISBN No. : 978-9937-568-45-6

# विषयक्रम

परिच्छेद ४

## भाषिक चिन्तनको पूर्वीय परम्परा



परिच्छेद ५

## भाषिक चिन्तनको पूर्वीय परम्परा

परिच्छेद ६

## भाषिक चिन्तनको पूर्वीय परम्परा





# परिच्छेद १ भाषिक चिन्तनको पूर्वीय परम्परा

## १.१. वैदिक भाषिक चिन्तन

संस्कृत भाषाको प्राचीन रूपलाई वैदिक संस्कृत भनिन्छ । वेद र वेदसम्बद्ध ग्रन्थहरूमा प्रयोग भएको हुनाले यसलाई वैदिक (वेद+इक) संस्कृत भनिन्छ । सबैभन्दा पुरानो वेद 'ऋग्वेद' हो र यो इ.पू. १५०० देखि २५०० सम्मको मानिन्छ । ऋग्वेददेखि वाल्मीकिको 'रामायण' (इ.पू.५०० तिर) लेखनपूर्वको संस्कृत भाषाको सर्वप्राचीन रूप नै वैदिक संस्कृतका रूपमा चिनिन्छ भने वाल्मीकि रामायणदेखि पछिको संस्कृत भाषालाई लौकिक संस्कृत भनिन्छ । वैदिक संस्कृतमा रहेका वाङ्मय ग्रन्थहरूमा वेद, ब्राह्मण, आरण्यक, उपनिषद् आदि पर्दछन् । यी वैदिक वाङ्मयमा रहेका भाषिक चिन्तनबारे तलका उपशीर्षकहरूमा चर्चा गरिएको छ :

### १.१.१ वेद, ब्राह्मण र उपनिषद्मा भाषा सम्बन्धी चर्चा

वेदको अर्थ ज्ञानको राशि भन्ने हुन्छ । संस्कृत वाङ्मयमा वेद सबैभन्दा पुराना ग्रन्थ हुन् । वेदहरू चार वटा छन् : (क) ऋग्वेद, (ख) यजुर्वेद, (ग) सामवेद, (घ) अथर्ववेद । वेदका शिक्षा, कल्प, ज्योतिष, निरुक्त, छन्द र व्याकरण गरी ६ वटा अङ्ग छन् । यी अङ्गहरूको 'ज्योतिष' र 'कल्प' बाहेक अरु ४ वटा अङ्ग भाषासँग सम्बद्ध छन् (बन्धु, २०५७: ११) । ऋग्वेदमा भाषाका चार प्रकारका वाणी-परा, पश्यन्ती, मध्यमा र वैखरी छन् र वैखरी चाहिँ मानिसले बोल्छन् भन्ने उल्लेख पाइन्छ (न्यौपाने, २०५१:१) । वेदमा वाणीको व्यापकताको चर्चा गर्दै भाषा अथर्ात् वाणी आकाश, पृथ्वी सबैतिर व्यापक भएको उल्लेख गरिएको छ । यसैगरी वेदहरूमा अक्षर र विभक्तिको धारणा, भाषाको व्यापकताको सन्दर्भ, भाषिक तत्त्वको विश्लेषण, अक्षर ज्ञानको महत्त्व, पद ज्ञानको महत्त्व, वाक्य तत्त्वको सूक्ष्मता, निर्वचनको प्रारम्भ जस्ता भाषिक चिन्तन भएको पाइन्छ (न्यौपाने र पराजुली, २०६९: १५-१७) ।

ब्राह्मण ग्रन्थहरूमा पनि भाषिक चिन्तन पाइन्छ । यज्ञको प्रतिपादन गर्ने र त्यसको व्याख्या गर्ने विषयमा ब्राह्मण ग्रन्थहरू आधारित छन् । ब्राह्मण ग्रन्थले वेदमा

रहेको कर्मकाण्डसम्बन्धी विषयलाई व्याख्या गरेका छन्। यसरी हेर्दा ब्राह्मण ग्रन्थहरू वेदकै परिपूरक देखिन्छन्। वेद संहिताका आ-आफ्ना ब्राह्मण ग्रन्थहरू छन्, जस्तै : ऐतरेय, कौषितकी (ऋग्वेद), शतपथ, तैत्तिरीय, काठक, मैत्रायणी (यजुर्वेद), ताण्डव, आर्षेय, तलवकार (सामवेद), गोपथ (अथर्ववेद) आदि। ब्राह्मण ग्रन्थहरूमा केही मात्रामा भाषिक चिन्तन पाइन्छ। भाषिक चिन्तनका दृष्टिले ऐतरेय, मैत्रायणी, गोपथ आदि ब्राह्मण ग्रन्थहरू उल्लेख्य छन्। ब्राह्मण ग्रन्थहरूमा संज्ञा, धातु, प्रातिपदिक, लिङ्ग, वचन, विभक्ति, प्रत्यय, स्वर, उपसर्ग, व्याकरण, निपात, वर्ण, अक्षर, मात्रा, नाद, स्थान आदि भाषा-व्याकरणसँग सम्बद्ध पारिभाषिक शब्दहरूको प्रयोग भएको पाइन्छ। साथै संज्ञाको प्रकार उल्लेख हुनु, वाणीका मानसिक र भौतिक रूपको सन्दर्भ उल्लेख हुनु र व्याकरणिक पारिभाषिक शब्दहरूको प्रयोग हुनु नै ब्राह्मण ग्रन्थको भाषिक चर्चाको मुख्य विषय देखिन्छ।

वैदिक भाषा चिन्तन परम्पराका सन्दर्भमा उपनिषद्मा रहेको भाषिक चिन्तनको विषयलाई बिर्सन मिल्दैन। वेद, ब्राह्मण र आरण्यकपछि उपनिषद्हरूको रचना भएको मानिन्छ। उपनिषद्लाई गुरु वा परमब्रह्मका नजिक रहेर ज्ञान प्राप्त गर्ने अथवा अज्ञानको नाश गराउने अर्थमा लिइन्छ। उपनिषद्हरू दुई सयभन्दा बढी भएको र तीमध्ये कम्तीमा १२ वटा प्रमुख रहेको बताइन्छ (न्यौपाने र पराजुली, २०६९: १९)। उपनिषद्हरू वेद, ब्राह्मण, आरण्यकहरूकै निरन्तरतामा आएका वैदिक वाङ्मयका पछिल्ला रचनाहरू हुन्। उपनिषद्हरूमा आत्मा र मोक्ष अर्थात् परम्ब्रह्मको विषयको चर्चा भएको पाइन्छ।

उपनिषद्मा भाषासम्बन्धी त्यस्तो गहन र विशिष्ट चिन्तन भएको पाइँदैन। अक्षरलाई ब्रह्म स्वरूप मान्दै त्यसबाट विश्वको उत्पत्ति भएको मान्नु, ब्रह्मलाई अक्षरका रूपमा अथवा ब्रह्म र अक्षरलाई उही अर्थमा प्रयोग गरिनु उपनिषद्को भाषा सम्बन्धी चिन्तनको मुख्य विषय हो।

निष्कर्षमा हेर्दा वेद, ब्राह्मण र उपनिषद्मा भाषासम्बन्धी चिन्तनको प्रारम्भ भएको तर त्यसले निश्चित आकार नलिइसकिएको देखिन्छ। यी वैदिक ग्रन्थहरूमा वाणी वा भाषालाई महत्त्व दिँदै भाषाको शक्तिलाई महत्त्वपूर्ण (परमब्रह्म स्वरूप) मानिएको देखिन्छ। भाषाको मानसिक र भौतिक रूप हुन्छ भन्ने विषय, केही व्याकरणिक पारिभाषिक शब्दको प्रयोग र वाणीको महत्त्वबोध नै वेद, ब्राह्मण र उपनिषद्मा पाइने भाषिक चिन्तन हो भन्न सकिन्छ।

### १.१.२ निघन्टु र यास्कको निरुक्त

'निघन्टु' भनेको एक प्रकारको शब्दकोश हो। 'निरुक्त' भनेको शब्दको व्युत्पत्तिका साथै अर्थ निर्धारण गर्ने शास्त्र हो। वैदिक भाषाको अध्ययनका क्रममा यस्ता निघन्टु र निरुक्तहरू निर्माण भएको पाइन्छ। यास्कले ५ वटा निघन्टुको चर्चा गरेका छन् र उनले 'निरुक्त' को रचना पनि गरेका छन्। यास्कको निरुक्त संस्कृत भाषाको पहिलो उपलब्ध निरुक्त ग्रन्थका रूपमा रहेको छ।

वेद आदि वैदिक ग्रन्थका कठिन शब्दहरूको सङ्ग्रह गरिएको ग्रन्थ निघन्टु हो। यस्ता निघन्टु १५-२० वटा रहेको बताइन्छ। निघन्टुमा रहेका शब्दहरूको व्युत्पत्ति ग्रन्थ चाहिँ निरुक्त हो । विभिन्न विद्वान्हरूले यस्ता निरुक्त लेखेको बताइन्छ । यी मध्ये यास्कको निरुक्त विशेष चर्चा योग्य रहेको छ।

यास्क इ.पू. ७-८ शताब्दीका मानिन्छन् । उनले निघन्टुका साथै निरुक्त ग्रन्थ तयार पारेका थिए। उनको निघन्टु ३ काण्ड र ५ अध्यायमा विभक्त भएको र त्यही निघन्टुको चौथो अध्यायको निरुक्त तयार पारेको बताइन्छ (बन्धु, २०५७ : १२) । उनको निरुक्तमा तिन काण्ड र १२ अध्याय छन् । यसमा १२९८ शब्दको व्युत्पत्ति दिइएको छ।

यास्कको निरुक्तमा रहेको भाषिक चिन्तन सम्बन्धी मुख्य विशेषता निम्न लिखित बुँदामा उल्लेख गर्न सकिन्छ :

१. यास्कले शब्दको व्युत्पत्ति र अर्थको विषयलाई अगाडि सारे। आधुनिक भाषा चिन्तनको संरचनावादी भाषिक चिन्तन तथा अर्थविज्ञान जस्तो भाषाविज्ञानको शाखाको प्रारम्भिक अवस्था यसलाई मान्न सकिन्छ।

२. यास्कले आफ्नो 'निरुक्त' मा स्वरविकार, वर्णपरिवर्तन, वर्ण लोप प्रक्रिया ( जस्तै आदि स्वर लोप, मध्य स्वर लोप), वर्ण आगमन प्रक्रिया, विपर्यास, समीभवन, अल्पप्राणी भवन, महाप्राणी भवन, स्वर विकार जस्ता ध्वनि परिवर्तनका प्रक्रियाहरू चर्चा गरेका छन् । यास्कको यस्तो विश्लेषण आधुनिक भाषा विज्ञानको नजिक देखिन्छ।

३. यास्कले विभक्तिहरूको विश्लेषण गर्नाका साथै तिन वटा पुरुष, कृत् तथा तद्धित् प्रक्रिया आदिका बारेमा उल्लेख गरेका छन् । यसबाट यास्कले आधुनिक भाषाविज्ञान अनुरूप रूपविज्ञानका कतिपय अभिलक्षणहरूको बारेमा अध्ययन गरेको देखिन्छ। उनको यो विश्लेषणबाट उनका उत्तरवर्ती पाणिनि र पछिल्ला भाषाशास्त्रीहरूलाई सहयोग पुगेको देखिन्छ।

४. यास्कले सबै शब्द धातुबाट बनेका हुन्छन् भन्ने मन्यता प्रस्तुत गरेका छन्।

५. यास्कले अर्थ परिवर्तनको चर्चा गरेका छन्।

६. शब्द रूपायन बारे चर्चा गर्दै यास्कले व्यय र अव्यय शब्दको अवधारणा प्रस्तुत गरेका छन्।

### १.१.३ शिक्षा ग्रन्थहरूमा प्रतिपादित वर्णोच्चारण प्रक्रिया

वेदका ६ वटा अङ्ग मानिन्छन् : शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष । वेदको शुद्ध उच्चारण, त्यसको अर्थ, मन्त्रहरूको सही प्रयोग आदि प्रयोजनका लागि वेदका उपर्युक्त ६ वटा अङ्गको विकास भएको मानिन्छ। वेदका यी ६ अङ्गमध्ये शिक्षा महत्त्वपूर्ण अङ्ग हो । वेदको अङ्गका रूपमा शिक्षा ग्रन्थहरूको विकास भएको पाइन्छ।

शिक्षा ग्रन्थ वैदिक मन्त्रहरूको शुद्ध उच्चारणसँग सम्बन्धित छन्। शिक्षा ग्रन्थहरूमा ध्वनि सम्बन्धी विस्तृत चर्चा गरिएको पाइन्छ। शिक्षा ग्रन्थ स्वर, व्यञ्जन आदि वर्णको उच्चारण सम्बन्धी ज्ञान दिने शास्त्रका रूपमा रहेको छ। यसरी शिक्षा ग्रन्थले वेदका ऋचाहरूका साथै वैदिक संस्कृत भाषाका स्वर व्यञ्जन वर्णहरूको ठिक ठिक उच्चारण प्रक्रियाहरूको शिक्षण गरेको पाइन्छ।

**शिक्षा ग्रन्थहरूमा वर्ण उच्चारणका प्रक्रियाहरूमा मुख्यतः निम्नानुसार उल्लेख गरिएको पाइन्छ :**

१. शिक्षा ग्रन्थमा वर्ण उच्चारणका लागि कुन कुन अङ्ग-प्रत्यङ्गको के-कस्तो भूमिका हुन्छ भन्ने बारेमा बताइएको छ। यस अनुसार वर्ण उच्चारणमा पहिले आत्माले बुद्धिलाई समेटेर मनलाई बोल्न अराउँछ। मनले शरीरबाट प्रकट हुने अग्निको प्रयोग गरेर हावा (सास) उत्पन्न गर्छ। त्यो सासले विभिन्न अङ्गमा ठोक्किएर ध्वनिको उत्पादन हुन्छ।

२. शिक्षा ग्रन्थमा वर्णको उच्चारण गर्दा निम्नलिखित विषयमा ध्यान दिनुपर्ने उल्लेख पाइन्छ :

(क) वर्णोच्चारण गर्दा सन्तुलन बिग्रनु हुँदैन। अलिकति पनि सन्तुलन खल्बलिएमा सही रूपमा उच्चारण कार्य पुरा हुन सक्दैन।

(ख) वर्णको उच्चारण शुद्ध र सार्थक हुनुपर्छ भन्ने मान्यता पाइन्छ। यस अनुसार शुद्ध र सार्थक उच्चारण नभएमा अथवा सामञ्जस्य नभएमा अर्थको अनर्थ हुन्छ भनिएको छ।

(ग) अति छिटो र अति ढिलोबाट बचेर ठिक लयमा उच्चारण गरिनुपर्ने मान्यता शिक्षा ग्रन्थहरूमा उल्लेख गरिएको छ। यसै आधारमा उत्तम र अधम पाठको पनि चर्चा गरिएको छ। उत्तम पाठका ६ वटा गुण र अधम पाठका ६ वटा दोष बारे पनि शिक्षा ग्रन्थहरूमा चर्चा गरिएको छ। दोषलाई हटाएर उत्तम पाठ गर्नुपर्ने मान्यता प्रस्तुत गरिएको छ।

३. शिक्षा ग्रन्थहरूमा वर्णहरूको वर्गीकरण बारे पनि उल्लेख गरिएको छ। यस अनुसार उच्चारण स्थान र उच्चारण प्रयत्नका आधारमा वर्णहरूको वर्गीकरण गरिएको पाइन्छ। उच्चारण स्थानका आधारमा स्वर र व्यञ्जन दुबैको वर्गीकरण गर्न सकिने उल्लेख गरिएको छ। त्यस्तै प्रयत्नका आधारमा पनि वर्णको वर्गीकरण गर्न सकिने उल्लेख गर्दै प्रयत्नहरू (क) आभ्यान्तर र (ख) बाह्य गरी दुई प्रकारका हुने उल्लेख गरिएको छ। आभ्यन्तर भन्नाले मुखभित्रको क्रियाकलाप भन्ने बुझिन्छ। यस अनुसार खण्डीय ध्वनिलाई स्वर, व्यञ्जन र अन्तस्थ गरी वर्गीकरण गरिएको पाइन्छ। बाह्य प्रयत्न भनेको घाँटी र त्यसभन्दा मुनिबाट हुने क्रियाकलाप हो। यस अनुसार घोष र अघोष तथा अल्पप्राण र महाप्राण ध्वनिहरूको चर्चा गरिएको छ। यसरी नै शिक्षा ग्रन्थहरूमा वर्णको विभिन्न अभिलक्षणका बारेमा चर्चा गरिएको छ।

४. मात्रा, सुर, सन्तान आदिको विश्लेषण पाइन्छ। शिक्षा ग्रन्थहरूमा ह्रस्व, दीर्घ र प्लुत गरी क्रमशः १,२ र ३ मात्राको उल्लेख गरिएको छ। स्वरका आरोह-अवरोहलाई सुर भनिएको छ। यस्ता सुर-उदात्त (मात्राको आरोह), अनुदात्त (मात्राको शिथिलता), स्वरित (उदात्तपछि अनुदात्त) र प्रथम (स्वरितपछि आउने अनुदात्त स्वरमा एकैसाथ शिथिलता आउने) गरी चार प्रकारका बताइएको छ। सन्धि नियमको प्रयोगलाई सन्तान भनिन्छ। दीर्घसन्धि, गुण सन्धि, वृद्धि सन्धि, यण् सन्धिहरूका बारेमा उल्लेख पाइन्छ।

५. अक्षरबारे चर्चा गरिएको छ। त्यहाँ चर्चा गरिएको अक्षरको अभिलक्षण आधुनिक भाषाविज्ञान अनुसारको अक्षरको अभिलक्षणसँग मिल्दोजुल्दो देखिन्छ।

६. शिक्षा ग्रन्थहरूमा यम, अभिनिहित, सवर्ण जस्ता वर्णको विभिन्न अभिलक्षणहरूका बारेमा चर्चा गरिएको छ।

### १.१.४ पूर्व पाणिनीय व्याकरण परम्परा

संस्कृत भाषा चिन्तन परम्परामा पाणिनिको नाम प्रख्यात छ। पाणिनिको व्याकरण संस्कृत भाषाको मात्र नभएर संसारकै पुराना व्याकरणहरूमध्येको एक उत्कृष्ट व्याकरण मानिन्छ। पाणिनिको समयका बारेमा विद्वान्हरूका बिचमा मत-मतान्तर छन्। अधिकांशले मानेको उनको समय इ.पु. ५००-६०० को अवधि हो। यिनै पाणिनिलाई केन्द्र मानेर संस्कृत भाषिक चिन्तन परम्परामा पूर्व पाणिनि, पाणिनि र उत्तर पाणिनि युग गरी वर्गीकरण गरिएको पाइन्छ।

पूर्व पाणिनि काल भन्नाले पाणिनिको युग अर्थात् इ.पू. ५०० भन्दा अगाडिको काल अर्थात् पाणिनि पूर्वको समय हो। पाणिनिपूर्व शिव/महेश्वर, ब्रह्मा, ईशान, इन्द्र, प्रजापति, बृहस्पति, त्वाष्ट्र, आपिशल, वायु, भरद्वाज, भागुरि, पौष्करसादि, चारायण, काशकृत्स्न, शन्तनु, वैयाध्रपद, माध्यन्दिनि, रौढि, शौनकि, गौतम, व्याडि जस्ता भाषा चिन्तकहरू भएको बताइन्छ। पाणिनिको अष्टाध्यायीमा आपिशली, काश्यप, गार्ग्य, गालव, चाक्रवर्मण, भारद्वाज, शाकटायन, शाकल्य, सेनक र स्फोटायन गरी १० जना व्याकरणकारको नाम उल्लेख गरिएको छ (न्यौपाने र पराजुली, २०६९:४१-४२)।

पाणिनिले आफ्नो कृतिमा दिएको सूचना र अन्य पुराना ग्रन्थहरूका आधारमा हेर्दा पाणिनि पूर्व पनि व्याकरण चिन्तनको परम्परा रहेको पुष्टि हुन्छ। पाणिनिको व्याकरणको महत्त्व र उनले स्थापना गरेका नियमहरू, सूत्रहरूको निर्माणमा उनी पूर्वका विद्वान्हरूको मत-मान्यताहरूले पृष्ठभूमिका रूपमा काम गरेको मान्न सकिन्छ। भाषिक ध्वनिहरूको उच्चारण प्रक्रिया, प्रकृति-प्रत्ययको पहिचान, शब्दार्थ सम्बन्धी धारणा, व्याकरण सूत्रपाठ, फिट्सूत्र, उणादि पाठ, पदपाठ, रूपसिद्धि प्रक्रिया जस्ता व्याकरणिक चिन्तनको थालनी पाणिनिपूर्ण नै भएको पाइन्छ।

## १.२. पाणिनीय भाषिक चिन्तन

संस्कृत भाषिक चिन्तन परम्परामा पाणिनिको महत्त्वपूर्ण योगदान रहेको छ। पाणिनिको भाषिक चिन्तन वैज्ञानिक र आधुनिक भाषाविज्ञानलाई समेत चुनौती दिने प्रकारको रहेको छ। आजभन्दा २६-२७ सय वर्षअघि पाणिनिले जुन स्तरमा भाषिक चिन्तन गरेका छन्, त्यो अत्यन्त महत्त्वपूर्ण रहेको पाइन्छ।

### १.२.१ व्याकरणकार पाणिनि र उनका व्याकरण ग्रन्थ

पाणिनिको जन्म समयका बारेमा विद्वान्हरू बिच मतभेद छ। यिनको जन्म समय इ.पू. ४५०-४००, इ.पू. सातौँ शताब्दी, इ.पू. चौथो शताब्दी भनी विभिन्न मत छन्। विभिन्न विद्वान्हरूका मतका आधारमा उनको समय इ.पू. ६००-५०० बिचको मानिएको छ। पाणिनिको नाम पाणिनिका अतिरिक्त दाक्षीपुत्र, शालातुरीय, पाणिन, शालङ्कि, पाणिनेय, पाणिपुत्र, आहिक आदि नाम उल्लेख भएको पाइन्छ (न्यौपाने र पराजुली, २०६९:४८)। पाणिनिका निम्न लिखित व्याकरण ग्रन्थहरू रहेका थिए :

१. अष्टाध्यायी
२. द्विरूपकोश
३. धातुपाठ
४. गणपाठ
५. पाणिनीय शिक्षा
६. लिङ्गानुशासन र
७. अष्टाध्यामीको स्नोपज्ञवृत्ति (टीका)

पाणिनिले 'जाम्बवतीविजय' नामक व्याकरणेतर ग्रन्थ (महाकाव्य) पनि लेखेको बताइन्छ। 'अष्टाध्यायी' पाणिनिको महत्त्वपूर्ण व्याकरण ग्रन्थ हो। अष्टाध्यायी सूत्रपाठका लागि प्रसिद्ध छ। उनका अन्य व्याकरणिक कृतिहरू महत्त्वपूर्ण हुँदाहुँदै पनि उनको अष्टाध्यायी अत्यन्तै महत्त्वपूर्ण र लोकप्रिय रहेको छ। यसमा आठ अध्याय छन् र प्रत्येक अध्यायमा चार पाउ छन्। यसमा करिब चारहजार सूत्र (अध्यायगत सूत्र सङ्ख्या क्रमशः ३५१, २६८, ६३१, ६३५, ५५५, ७३५, ४३८ र ३६९) रहेका छन्। अष्टाध्यायीको पहिलो अध्यायमा परिभाषा, परस्मैपद, आत्मनेपद, कारकका विषयमा चर्चा गरिएको छ। दोस्रो अध्यायमा कारकका बारेमा थप चर्चा गर्नाका साथै समासका बारेमा चर्चा गरिएको छ। तेस्रो अध्यायमा कृत् प्रत्ययको अनि चौथो र पाँचौँ अध्यायमा तद्धित् प्रत्ययको चर्चा गरिएको छ। यसै गरी छैटौँ अध्यायमा तिङन्त तथा सन्धि प्रक्रियाका बारेमा चर्चा गरिएको छ भने आठौँ अध्यायमा स्वर सन्धि, द्विरुक्त आदिका बारेमा चर्चा गरिएको छ।

पाणिनिका सूत्रहरूले लौकिक संस्कृतका नियमलाई सङ्क्षिप्त रूपमा प्रस्तुत गरेका छन्। पदहरूको सङ्कलन, तिनका प्रकृति-प्रत्ययको अवस्था, सन्धि प्रक्रियाद्वारा शब्द निर्माण जस्ता विषयहरू समेटिएको अष्टाध्यायी संस्कृत व्याकरण परम्पराको महत्त्वपूर्ण कृति मानिन्छ। पाणिनिले सन्धि प्रक्रिया, धातु पाठ, गणपाठ

जस्ता विषयमा महत्त्वपूर्ण सूत्र प्रतिपादन गरेका छन्। उनले सन्धि प्रक्रियालाई १४ सूत्रमा र धातु पाठलाई १० सूत्रमा समेटेर संस्कृत भाषाको अध्ययनलाई व्यवस्थित गरेका छन्।

पाणिनिको व्याकरण सूत्रात्मक र सङ्क्षिप्त छ। पाणिनिको व्याकरणमा विभिन्न सूत्रहरूको व्यवस्था पाइन्छ। सूत्रात्मक र सङ्क्षिप्त भए पनि आफैमा पूर्ण र भाषाका समग्र पक्षको अध्ययन गर्न समर्थ छ। पाणिनिको व्याकरण प्रस्तावित नभएर वर्णनात्मक छ। उनको व्याकरणका सूत्र र नियम संस्कृत भाषानिष्ठ छन्। यसर्थ पाणिनीय व्याकरण वर्णनात्मक छ। उनको व्याकरण आन्तरिक रूपमा सुसम्बद्धता र अन्तर्निहित प्रकारको छ।

## १.२.२ पाणिनिको व्याकरणमा सूत्र शैली, प्रत्याहार र संज्ञाकरण

पाणिनिको व्याकरणमा सूत्रहरूको प्रस्तुति पाइन्छ। उनको अष्टाध्यायीमा ३९९५ जति सूत्रहरू छन्। पाणिनिको अष्टाध्यायीमा १४ वटा महेश्वर सूत्रहरूको उल्लेख गरेका छन्। 'अइउण्, ऋलृक्, एओङ, ऐऔच्, हयवरट्, लण्, ञमङणनम्, झभञ्, घढधष्, जबगडदश्, खफछठथचटतव्, कपय्, शषसर्' र 'हल्' यी १४ वटा सूत्रमा संस्कृतका सम्पूर्ण वर्णहरू समेटिएको छ (वरदराजाचार्य, २०१६ : १३-१४)। यसमा क्रमशः स्वर (एकस्वर, द्विस्वर), अन्तःस्थ, नासिक्य (मुखनासिका), घोष महाप्राण, घोष अल्पप्राण, अघोष महाप्राण, अघोष अल्पप्राण र ऊष्मको क्रम मिलाइएको छ। यस प्रकार सूत्रात्मक रूपमा भाषिक वर्णहरूको प्रस्तुति पाणिनिको महत्त्वपूर्ण कार्य ठहरिन्छ।

पाणिनिले आफ्ना व्याकरणमा संस्कृतका शब्दहरूको निर्माण प्रक्रिया र तिनको शुद्ध रूपको निरूपणका लागि सूत्रहरूको रचना गरेका छन्। उनको अष्टाध्यायी सूत्रपाठका दृष्टिले महत्त्वपूर्ण छ। पाणिनिले सङ्क्षिप्त सूत्रहरू सिर्जना गरेर संस्कृतका सबैजसो शब्दलाई समेटेका छन्। उनले संज्ञा, परिभाषा, विधि, नियम, अतिदेश र अधिकारी गरी ६ प्रकारका सूत्र लक्षण बताएका छन्। पारिभाषिक नाम बुझाउने सूत्रलाई संज्ञा र संज्ञा सूत्रमा अस्पष्ट भएका कुराको परिभाषा गर्ने सूत्रलाई परिभाषा सूत्र भनिन्छ। ध्वनि परिवर्तनको विधि बताउने सूत्र विधिसूत्र हो। एकै ठाउँमा दुई सूत्रहरू लगाउनु पर्ने अवस्थामा कुन सूत्र लगाउने भन्ने नियमलाई नियम सूत्र भनिन्छ। अविद्यमान धर्मको आरोपद्वारा विद्यमान बनाउने सूत्र अतिदेश सूत्र हो भने सुरुमा सूत्रको नाम उल्लेख गरेपछि त्यसको अर्थ स्पष्ट पार्ने सूत्र अधिकार सूत्र हो।

### प्रत्याहार

पाणिनिको व्याकरणको अर्को महत्त्वपूर्ण विशेषता प्रत्याहार व्यवस्था पनि हो। पाणिनिका सूत्रहरूको अन्त्यमा व्यञ्जन वर्ण आउँछन् तर वर्ण सूचीमा भने पर्दैनन् र त्यो व्यञ्जनभन्दा पहिलेका अक्षरलाई लिएर प्रत्याहार हुन्छ भन्ने मानिएको छ। अर्थात्

ती व्यञ्जन नभएको भए प्रत्याहार नबन्ने हुनाले वर्ण सूचीमा नपरे पनि ती व्यञ्जनको प्रयोजन देखाइएको छ।

प्रत्याहार व्यवस्था अनुसार माहेश्वर सूत्रमा सम्बद्ध सबै पूर्व वर्णलाई सूत्रको अन्त्यमा हलन्त उच्चारण हुने व्यञ्जन वर्णसँग जोडेर प्रत्यहारा बन्न सक्छ। यसरी प्रत्याहार बनाउने हो भने सैद्धान्तिक रूपमा ३०५ वटा प्रत्यहार बन्न सक्ने देखिए पनि पाणिनिको अष्टाध्यायीमा एउटा वर्णमात्र हुने प्रत्याहारको प्रयोग गरेको पाईंदैन। उनले ४२ वटा प्रत्याहारको मात्र उपयोग गरेका छन्। पाणिनिले उपयोग गरेका प्रत्याहारहरू निम्न लिखित छन् :

(१) अक्, (२) अच्, (३) अट्, (४) अम्, (५) अल्, (६) अश्, (७) अण्[१] (८) अण्[२], (९) इण्, (१०) इक्, (११) इच्, (१२) उक्, (१३) एङ्, (१४) एच्, (१५) ऐच् (१६) खर्, (१७) खय्, (१८) ङम्, (१९) चर्, (२०) चय्, (२१) छव्, (२२) जश्, (२३) झय्, (२४) झर्, (२५) झल्, (२६) झश्, (२७) झष्, (२८) बश्, (२९) भष्, (३०) मय्, (३१) यञ्, (३२) यण्, (३३) यम्, (३४) यय्, (३५) यर्, (३६) रल्, (३७) वल्, ( ३८) वश्, (३९) शर्, (४०) शल्, (४१) हल्, (४२) हश्।

यसरी हेर्दा प्रत्याहार भनेको माहेश्वर सूत्रमा रहेका इत्संज्ञक (अन्तिममा ल्याइएको व्यञ्जन वर्ण) र अघिल्ला हरेक वर्णहरू मिलेर अलग-अलग सूत्र बन्ने अवस्था हो। माहेश्वर सूत्रमा रहेको अन्तिम व्यञ्जन वर्णको आवश्यकता यही प्रत्याहारको प्रयोजनका लागि मात्र हुने गरेको देखिन्छ। यसरी हेर्दा ३०५ वटा प्रत्याहार बन्न सक्ने देखिए पनि एउटा वर्णका लागि मात्र प्रत्याहारको उपयोग नगरिने भएकाले बढीमा ४२ वटा प्रत्याहार मात्र प्रयोगमा रहेका छन्।

## संज्ञाकरण

संज्ञाकरण भनेको नामकरण हो। पाणिनिको व्याकरणमा हरेक शब्दमा प्रयुक्त व्याकरणिक सन्दर्भको नामकरण वा संज्ञाकरण गरिएको छ। पाणिनिको व्याकरणमा गुण, वृद्धि, सम्प्रसारण, इत्, धातु, प्रातिपादिक, पद, उपधा, नदी, घि, संहिता, उदात्त, अनुदात्त, स्वरित, ह्रस्व, दीर्घ, प्लुत, अनुनासिक, संवर्ण, संहिता, संयोग, पद, निष्ठा, सार्वधातुक, आर्द्धधातुक जस्ता संज्ञाकरण गरिएको पाइन्छ ( न्यौपाने र पराजुली, २०६९:५६)।

संज्ञाकरणको प्रक्रिया पाणिनिभन्दा अगाडिदेखि नै हुने गरेको पाइन्छ। यसलाई पाणिनिले अरु व्यवस्थित गरेका हुन्। पाणिनिले व्यवस्थित गरेको संज्ञाकरणले अहिलेसम्म पनि प्रभाव पारेको देखिन्छ। उनको संज्ञाकरणका कतिपय परिभाषिक संज्ञाहरू आधुनिक आर्य भाषाहरूमा अहिले पनि प्रचलित छन्।

संज्ञाकरणले भाषा-व्याकरणका क्षेत्रमा आवश्यक पारिभाषिक शब्दहरूको निर्माण गरेको छ। यसबाट संस्कृत भाषा चिन्तन परम्परा व्यवस्थित रूपमा अगाडि बढ्न सहयोग पुगेको देखिन्छ। पाणिनिको संज्ञाकरण व्यवस्थाबाट संस्कृतबाट

विकसित भएर बनेका नेपाली लगायतका भाषाको व्याकरणमा महत्त्वपूर्ण योगदान पुगेको देखिन्छ।

### १.२.२ पाणिनिको व्याकरण : अधिकार र अन्तरालम्बन

एक ठाउँमा पढिएका सूत्रहरूको खास निश्चित प्रकरण, प्रसङ्ग वा अध्यायसम्म पुग्ने प्रवृत्तिलाई अधिकार भनिन्छ (न्यौपाने र पराजुली, २०६९: ५७)। कुनै एउटा सूत्र कुनै अध्यायमा सुरु भई त्यस अन्तर्गतको व्याख्या, प्रकरण विभिन्न अध्यायमा समेटिएको अवस्थामा त्यो सूत्रले समेट्ने क्षेत्रलाई अधिकार भनिन्छ। उदाहरणका लागि व्याकरणको कुनै सूत्रलाई पाँच अध्यायमा प्रस्तुत गरियो र त्यसको सन्दर्भ सात अध्यायसम्म रह्यो भने ५-७ अध्याय त्यस सूत्रको अधिकार भित्र पर्दछ। पाणिनिको व्याकरणमा यस प्रकारको अधिकार व्यवस्था रहेको पाइन्छ।

एउटा सूत्र वा नियमको अर्को सूत्र वा नियमसँगको सम्बन्धलाई अन्तरालम्बन भनिन्छ (न्यौपाने र पराजुली, २०६९:५७)। एउटा व्याकरणिक सूत्र वा नियम अन्य विभिन्न नियम वा सूत्रसँग अन्तर्सम्बन्धित हुन्छ। भाषा-व्याकरणलाई एउटै मात्र नियम वा सूत्रले व्याख्या-विश्लेषण गर्न सकिँदैन। यस प्रकार व्याकरणका सूत्र वा नियमहरूका बिचको आपसी सम्बन्धलाई अन्तरालम्बन भनिन्छ। पाणिनिका सूत्रहरू पनि आफैँमा पूर्ण नभएर एक-अर्कामा अन्तनिर्भर छन्। यस प्रकारको अन्तर्सम्बन्ध वा अन्तरालम्बनको अवस्था पाणिनिका सूत्रहरूमा फेला पर्दछ।

अधिकार र अन्तरालम्बन बिच घनिष्ट सम्बन्ध हुन्छ। एउटा नियम वा सूत्रको क्षेत्र अधिकार हो तर त्यो सूत्र वा नियम आफैँमा पूर्ण नभएर त्यसले अन्य नियमको सहायता लिनु पर्दछ। यस प्रकार अधिकार अन्तरालम्बनसँग पनि सम्बन्धित भएर आउने देखिन्छ। पाणिनिको व्याकरणमा अधिकार र अन्तरालम्बनको अवस्था देखिन्छ।

### १.२.३ पाणिनीय व्याकरण : वर्ण व्यवस्था, सन्धि प्रक्रिया, पदरचना र कारक प्रक्रिया

पाणिनिको व्याकरणमा वर्ण व्यवस्था, सन्धिप्रक्रिया, पदरचना र कारक बारेमा गहन अध्ययन गरिएको छ। यी विषयमा पाणिनिको अध्ययन उत्तरवर्ती भाषाशास्त्रीका लागि आधार बनेका छन्। पाणिनिको अध्ययन आधुनिक भाषाविज्ञानका दृष्टिले पनि उत्तिकै महत्त्वपूर्ण छ।

#### १.२.३.१ वर्णव्यवस्था

पाणिनिको व्याकरणमा वर्णव्यवस्था बारे विस्तृत चर्चा गरिएको छ। उनको अष्टाध्यायी र कौमुदी परम्परामा वर्णव्यवस्था बारे चर्चा गरिएको छ। पाणिनिको व्याकरणमा वर्णहरूको निर्धारण र वर्गीकरण गरिएको छ। पाणिनिले माहेश्वर सूत्र

अनुसार वर्णलाई स्वर (अच्) र व्यञ्जन (हल्) गरी वर्गीकरण गरिएको छ। उनका अनुसार लौकिक संस्कृतका वर्णहरू निम्नानुसार छन् :

(अ) **अच् (स्वर) वर्णहरू ९ वटा छन् :**

अ, इ, उ, ऋ, लृ, ए, ओ, ऐ, औ

यी ९ वटा अच्लाई बढाएर संस्कृत व्याकरण परम्परामा १४ वटा अच् (स्वर) वर्ण प्रचलनमा ल्याइएको पाइन्छ : अ, आ, इ, ई, उ, ऊ, ऋ, ॠ, लृ, लृ, ए, ऐ, ओ, औ।

(आ) **हल् (व्यञ्जन) वर्णहरू ३३ वटा छन् :**

क, ख, ग, घ, ङ, च, छ, ज, झ, ञ, ट, ठ, ड, ढ, ण, त, थ, द, ध, न, प, फ, ब, भ, म, य, र, ल, व, श, ष, स, ह (अनुस्वार र विसर्गलाई पनि हल् मानिएको छ)

## वर्णको वर्गीकरण

पाणिनिले वर्णहरूलाई निम्नलिखित आधारमा वर्गीकरण गरेका छन् :

(i) श्वासमार्ग (ii) उच्चारण स्थान, (iii) आभ्यन्तर प्रयत्न, (iv) बाह्य प्रयत्न

**(i) श्वास मार्गका आधारमा**

पाणिनिका अनुसार श्वास मार्गका आधारमा संस्कृत वर्णहरू मौखिक र मुखनासिक दुई प्रकार छन् :

**मौखिक :** ङ, ञ, ण, न, म बाहेक सबै

**मुख नासिक :** ङ, ञ, ण, न, म

**(ii) उच्चारण स्थान**

उच्चारण स्थानका आधारमा संस्कृत वर्णहरूलाई निम्नलिखित प्रकारमा वर्गीकरण गरिएको छ :

| क्र.सं. | वर्गीकरण | वर्णहरू | |
|---|---|---|---|
| | | स्वर | व्यञ्जन |
| १. | कण्ठ्य | अ, आ | क, ख, ग, घ, ङ, ह |
| २. | तालव्य | इ, ई | च, छ, ज, झ, ञ, य, श |
| ३. | मूर्धन्य | ऋ | ट, ठ, ड, ढ, ण, र, ष |
| ४. | दन्त्य | लृ | त, थ, द, ध, न, ल, स |
| ५. | ओष्ठ्य | उ, ऊ | प, फ, ब, भ, म |
| ६. | दन्त्योष्ठ्य | – | व |
| ७. | कण्ठतालव्य | ए, ऐ | – |
| ८. | कण्ठोष्ठ्य | ओ, औ | – |

**(iii) आभ्यान्तर प्रयत्न**

ओठदेखि कण्ठ (घाँटी) सम्मको औच्चारिक क्रियाकलापहरूलाई संस्कृतमा आभ्यन्तर प्रयत्न भनिन्छ । यस आधारमा संस्कृतका वर्णलाई निम्नानुसार वर्गीकरण गरिएको पाइन्छ :

| क्र.सं. | प्रकार | वर्ण |
|---|---|---|
| १. | स्पृष्ट (स्पर्शी) | क, ख, ग, घ, ङ, च, छ, ज, झ, ञ, ट, ठ, ड, ढ, ण, त, थ, द, ध, न, प, फ, ब, भ, म |
| २. | ईषत्स्पृष्ट (अन्तः स्थ) | य, र, ल, व |
| ३. | ईषद्विवृत (ऊष्म) | श, ष, स, ह |
| ४. | विवृत (स्वर) | अ, इ, उ, ऋ, लृ, ए, ऐ, ओ, औ |

**(iv) बाह्य प्रयत्न**

ओठदेखि कण्ठसम्मको प्रयत्न बाहेक कलनासो (लिगलिगे) देखि तल फोक्सोसम्मको उच्चारण प्रयत्नलाई बाह्य प्रयत्न भनिएको छ । यस अनुसार संस्कृतका वर्णलाई निम्नानुसार वर्गीकरण गरिएको छ :

| क्र.सं. | प्रकार | वर्ण |
|---|---|---|
| १. | अघोष (विवार/श्वास) | क, च, ट, त, प, ख, छ, ठ, थ, फ, श, ष, स |
| २. | घोष (संवार/नाद) | ग, ज, ड, द, ब, घ, झ, ढ, ध, भ, ङ, ञ, ण, न, म, य, र, ल, व, ह |
| ३. | अल्पप्राण | क, च, ट, त, प, ग, ज, ड, द, ब, ङ, ञ, ण, न, म, य, र, ल, व |
| ४. | महाप्राण | ख, छ, ठ, थ, फ, घ, झ, ढ, ध, भ, श, ष, स, ह |
| ५. | स्वरित (उदात्त–अनुदात्त) | अ, इ, उ, ऋ, लृ, ए, ओ, ऐ, औ |

(वरदराजाचार्य, २०१६ : १९)

## १.२.३.२ सन्धि प्रक्रिया

सन्धि प्रक्रिया संस्कृत व्याकरणको एउटा महत्त्वपूर्ण विषय हो । दुई वटा रूपको मेल हुँदा अघिल्लो रूपको अन्तिम वर्ण र पछिल्लो रूपको सुरुको वर्णका बिचमा आउने फेरबदललाई संस्कृतमा सन्धि भनिन्छ । पाणिनिको व्याकरणबाटै संस्कृत भाषाको सन्धि व्यवस्थाबारे चर्चा भएको पाइन्छ। संस्कृतमा सन्धिका विभिन्न प्रकार छन् । तीमध्ये ध्वनिको प्रकृतिका आधारमा संस्कृत सन्धिलाई निम्नलिखित प्रकारमा वर्गीकरण गरिएको पाइन्छ :

१. स्वर सन्धि (अच् सन्धि)

२. व्यञ्जन सन्धि (हल् सन्धि)

३. विसर्ग सन्धि

## १. स्वर सन्धि

सन्धि प्रक्रियामा अघिल्लो रूप वा एकाइको स्वर वर्गसँग हुने सन्धिलाई स्वर सन्धि भनिन्छ। जस्तै : उप + अध्यक्ष = उपाध्यक्ष (यहाँ सुरुको रूप 'उप' को अन्त्यमा रहेको 'अ' स्वरसँग पछिल्लो रूपको सुरु वर्ण 'अ' सन्धि भई 'आ' मा बदलिएको छ।

स्वर सन्धिलाई मुख्यतः निम्न लिखित प्रकारमा वर्गीकरण गरिएको छ :

### (i) दीर्घ सन्धि

संस्कृतमा ह्रस्व र दीर्घ स्वर अर्थात् अ–आ, इ–ई, उ–ऊ र ऋ–ॠ समान वर्ण आएमा सन्धि प्रक्रियामा सँगै आएका वर्णहरू दीर्घ वर्णमा रूपान्तरण हुने सन्धिलाई दीर्घ सन्धि भनिन्छ। जस्तै :

| | | |
|---|---|---|
| उप | + अध्यक्ष | = उपाध्यक्ष |
| सु | + उक्ति | = सूक्ति |
| कार्य | + आलय | = कार्यालय |
| अभि | + इष्ट | = अभीष्ट |
| भानु | + उदय | = भानूदय |

### (ii) गुण सन्धि

दुई स्वर मिलेर तेस्रो स्वर बन्ने प्रक्रियालाई गुण सन्धि भनिन्छ। यसमा अ/आ + इ/ई = ए, अ/ आ + उ/ऊ = ओ र अ/ आ + ऋ, = अर् हुने गर्दछ। जस्तै : सुर + इन्द्र = सुरेन्द्र, रमा + ईश = रमेश, चन्द्र + उदय = चन्द्रोदय, महा + उत्सव = महोत्सव, देव + ऋषि = देवर्षि, महा + ऋषि = महर्षि आदि।

### (iii) वृद्धि सन्धि

दुई वटा अलग–अलग स्वरहरू मिलेर एउटै द्विस्वर हुने प्रक्रियालाई वृद्धि सन्धि भनिन्छ। अ/आ + ए/ऐ = ऐ, अ/आ + ओ/औ = औ हुने सन्धि वृद्धि सन्धि हो। जस्तै :

मत + एक = मतैक्य, सदा + एव = सदैव, परम+ औषधि = परमौषधि आदि।

### (iv) यण् सन्धि

दुई वटा स्वर मिलेर सन्धि हुँदा एउटा स्वर संस्कृतका 'यण्' प्रत्याहार अर्थात् 'य, व, र, ल' मा बदलिने प्रक्रियालाई यण् सन्धि भनिन्छ। यसमा इ + उ = य, इ + ए = य, उ + अ = व आदि प्रक्रिया हुने गर्दछ। जस्तै :

| | | |
|---|---|---|
| अति | + अन्त | = अत्यन्त |
| इति | + आदि | = इत्यादि |

प्रति + उपकार = प्रत्युपकार
प्रति + एक = प्रत्येक
सु + आगत = स्वागत

(v) अयादि सन्धि

ए, ऐ, ओ, औ स्वर 'अय्, अव्, आय्, आव्' मा परिवर्तन हुने प्रक्रियालाई अयादि सन्धि भनिन्छ। जस्तै :

ने + अयन = नयन
नौ + अक = नायक
गो + एषणा = गवेषण आदि।

२. व्यञ्जन सन्धि

सन्धि प्रक्रियामा संलग्न पहिलो रूप वा एकाइको अन्तिम व्यञ्जन वर्णसँग सन्धि हुने प्रक्रिया व्यञ्जन सन्धि हो । व्यञ्जन सन्धिका केही उदाहरण निम्नानुसार छन् :

जगत् + नाथ = जगन्नाथ
अच् + अन्त = अजन्त
सम् + सार = संसार
वाक् + मय = वाङ्मय
दिक् + गज = दिग्गज
सम् + कल्प = सङ्कल्प
शम् + कर = शङ्कर

३. विसर्ग सन्धि

विसर्गसँग स्वर वा व्यञ्जन मिलेर हुने सन्धिलाई विसर्ग सन्धि भनिन्छ। विसर्ग सन्धि हुँदा विसर्गका सट्टामा प्रायः 'र, श, ष, ओ' हुने गर्दछ । जस्तै :

र – दुः दशा = दुर्दशा, पुनः योग = पुनर्योग, पुनः उक्ति = पुनरुक्ति
श – निः छल = निश्छल,
स – यशः कर = यशस्कर, श्रेयः कर = श्रेयस्कर
ओ = वयः वृद्ध = वयोवृद्ध, अन्धः गति = अधोगति

### १.२.३.३ पदरचना

पाणिनिको व्याकरणमा पदरचनाका बारेमा चर्चा गरिएको छ । पदरचना अन्तर्गत व्युत्पादन र रूपायनको चर्चा गरिएको पाइन्छ।

पाणिनिका व्याकरणमा उपसर्ग प्रक्रिया, कृत् प्रक्रिया, तद्धित् प्रक्रिया, समास, द्विरुक्त, उणादि आदि प्रक्रियाबाट शब्द निर्माण (व्युत्पादन) हुने उल्लेख पाइन्छ। व्युत्पादन प्रक्रियामा आधार र आधेय दुईवटा तत्त्व हुने गर्दछन्। आधार तत्त्वमा आधेय (जोडिन आउने) तत्त्व मिलेर शब्द निर्माण हुने गर्दछ। प्रचलित व्याकरणमा उल्लेख

हुने गरेका उपसर्ग प्रक्रिया, कृत प्रक्रिया, तद्धित् प्रक्रिया, समास प्रक्रिया पाणिनीय व्याकरण परम्पराकै निरन्तरतामा आएको देखिन्छ।

**उपसर्ग प्रक्रिया :** आधर तत्त्वको अघिल्तिर सर्ग जोडिएर शब्द व्युत्पादन हुने प्रक्रिया हो, जस्तै : उप + अध्यक्ष = उपाध्यक्ष,

सम + योग = संयोग,

उत् + ज्वल = उज्जवल आदि।

**कृत् प्रक्रिया :** धातुमा प्रत्यय लागेर शब्द निर्माण हुने प्रक्रिया, जस्तै :

कृ + ता = कर्ता,

भू + त = भूत

रच् + इत = रचित

**तद्धित् प्रक्रिया :** धातु बाहेकका अन्य शब्दमा प्रत्यय लागेर शब्द निर्माण हुने प्रक्रिया जस्तै : सुन्दर + य = सौन्दर्य

**समास :** दुई वा सोभन्दा बढी स्वतन्त्र शब्दहरू मिलेर एउटै शब्द बन्ने प्रक्रियालाई समास भनिन्छ।

जस्तै : रक्त + पुष्पम् = रक्तपुष्पम्, नौ वटा रसको मेल = नवरस, सम्भव भएसम्म = यथासम्भव

**उणादि :** व्युत्पादन नभएको तर सिद्धान्ततः व्युत्पादन भएको मानिने प्रक्रियालाई संस्कृतमा उणादि भनिन्छ।

**द्विरुक्त :** एउटै आधार दोहोरिएको अवस्थालाई द्विरुक्त भनिन्छ।

पाणिनीय व्याकरणमा रूपायन प्रक्रियाको बारेमा पनि चर्चा गरिएको पाइन्छ। शब्दलाई पद बनाइने प्रक्रियालाई नै पाणिनीय व्याकरणमा रूपायन भनिन्छ । यस अनुसार भाषाको रूप वा आधार पदलाई शब्द र रूपायन भइसकेको शब्दलाई पद भनिएको पाइन्छ । पाणिनीय व्याकरणमा रूपायनका आधार पदका रूपमा धातु र प्रातिपदिकको चर्चा गरिएको पाइन्छ। धातु भनेको क्रियाको मूल रूप हो जसमा कुनै रूपायन तत्त्व लागेको हुँदैन । धातुलाई भ्वादि, अदादि, जुहोत्यादि, दिवादि, स्वादि, तुदादि, रुधादि, तनादि, ऋयादि, चुरादि नामधातु र कण्ड्वादि जस्ता रूपायनयोग्य धातुको उल्लेख पाइन्छ। प्रातिपदिक भनेको धातु बाहेकका अन्य शब्दको रूपायन प्रत्यय नजोडिएको रूप हो। नेपालीका घर, वन, रस, बाटो आदि प्रातिपदिक हुन्।

### १.२.३.४ कारक प्रक्रिया

पाणिनीय व्याकरणमा कारक प्रक्रिया बारे चर्चा गरिएको पाइन्छ। पाणिनिकै समयदेखि व्याकरणमा कारकको मान्यता स्थापित भएको हो । वर्तमानमा कारक व्याकरण एउटा अलग्गै व्याकरणिक सिद्धान्तका रूपमा स्थापित छ। कारकको अर्थ काम गर्ने भन्ने हुन्छ। वाक्यमा क्रियासँग सम्बन्धित नामिक पदलाई कारक भनिन्छ। पाणिनीय व्याकरणमा क्रियाको जनकता वा क्रिया उत्पादन गर्ने अर्थमा कारकको परिभाषा गरिएको पाइन्छ।

पाणिनीय व्याकरणमा कारक र विभक्तिका बिचमा सम्बन्ध रहने देखाइएको छ। विभक्तिले कारकलाई चिनाउने काम गर्दछ। विभक्ति भनेको कारकसँग जोडिएर आउने रूप वा प्रत्यय हो । संस्कृत व्याकरणमा कारक अनुसार जोडिन आउने विभक्तिका अलग–अलग नाम छन्।

पाणिनीय व्याकरणमा कारकका निम्न लिखित प्रकार बताइएको छ :

| क्र.सं. | कारक | मुख्य अभिलक्षण |
|---|---|---|
| १. | कर्ता | क्रियाको सम्पादन गर्ने नामिक पद। |
| २. | कर्म | कर्ताले जुन वस्तुमाथि काम गर्छ। |
| ३. | करण | क्रियाको कार्यसिद्धिका लागि कर्ताले प्रयोग गर्ने साधन |
| ४. | सम्प्रदान | कर्ताका निम्ति प्रदान गरिने/उपयोग गरिने अप्रत्यक्ष कर्म |
| ५. | अपदान | कसैबाट छुट्टिने वा अलग हुने वस्तु |
| ६. | अधिकरण | कुनै वस्तु रहने वा अडिने आधार |

संस्कृत व्याकरण परम्परामा निम्नलिखित कारक र विभक्ति प्रचलनमा रहेको पाइन्छ :

| क्र.सं. | कारक | विभक्ति |
|---|---|---|
| १. | कर्ता | प्रथमा |
| २. | कर्म | द्वितीया |
| ३. | करण | तृतीया |
| ४. | सम्प्रदान | चतुर्थी |
| ५. | अपदान | पञ्चमी |
| ६. | अधिकरण | षष्टी |
| ७. | | सप्तमी |
| ८ | | सम्बोधन |

## १.२.४ पाणिनीय व्याकरण परम्परामा कात्यायन र पतञ्जतिको योगदान

पाणिनिको व्याकरणलाई अरु परिष्कृत बनाउँदै त्यसलाई सम्मृद्ध बनाउने काम कात्यायन र पतञ्जलिबाट भएको पाइन्छ । पाणिनिका समकक्षी मानिएका कात्यायनले पाणिनिका सूत्रहरूलाई पूर्ण बनाउनका लागि 'वार्तिक' बनाएका थिए। उनले 'स्वर्गारोहण' शीर्षक काव्य (अप्राप्य) लेखेको चर्चा पाइन्छ । कात्यायनको वार्तिक कृति पनि उपलब्ध छैन तर कौमुदीकारहरूले उल्लेख गरेका आधारमा वार्तिकले प्रसिद्धी पाएको देखिन्छ। वार्तिक भन्नाले व्याख्यान सूत्र वा भाष्यसूत्रका रूपमा बुझिन्छ। कात्यायनका वार्तिक वा त्यस्ता भाष्यसूत्र के कति थिए भन्ने बारेमा यकिन छैन। पाणिनिका सूत्रकै सङ्ख्यामा कात्यायनका वार्तिकहरू (भाष्यसूत्र) थिए भन्ने अनुमान गरिएको पाइन्छ । संस्कृत परम्परामा कुनै सूत्रहरूको व्याख्या गरी तिनमा रहेका सन्देह हटाउने, व्याख्या गर्ने, समस्याको समाधान गर्ने गरी बताइएको

सूत्रको व्याख्या वा भाष्यलाई वार्तिक भनिने गरिएको छ। यसरी पाणिनिका सूत्रको व्याख्याका लागि कात्यायनद्वारा बनाइएको भाष्य नै वार्तिकका नाममा परिचित रहेको देखिन्छ।

कात्यायनले पाणिनिको सूत्रको व्याख्या गरी पाणिनिका कार्यलाई विस्तार गरेका छन्। उनले पाणिनिका सूत्रमा भएका कतिपय अस्पष्ट विषयलाई स्पष्ट पारेका छन्। उनले पाणिनिको अष्टाध्यायीमा रूपसिद्धि नभएका अकर्मक धातुलाई रूपसिद्धि गरी दिए। उनले पाणिनिको मान्यता अनुसार शब्द र अर्थको नित्य सम्बन्धमा जोड दिएर त्यस परम्परालाई स्थापित गर्दै अगाडि बढाउने काम गरे। उनले शब्दको प्रयोग लोकले गर्ने हुँदा लोकव्यवहारलाई महत्त्व दिएर भाषाको प्रयोगलाई लोकव्यवहारसँग जोड्दै पाणिनिको व्याकरणलाई अरु विकास र विस्तार गर्न योगदान दिएका छन्।

पाणिनीय व्याकरणलाई मलजल गरी अगाडि बढाउने काममा पतञ्जलिको महत्त्वपूर्ण योगदान रहेको छ। पतञ्जलि विशेषतः योग सूत्रका आविष्कारक मानिन्छन् र वर्तमान विश्व दुनियाँमा उनी एकजना योग प्रवर्तकका रूपमा चिनिन्छन्। यद्यपि उनको योगदान भाषा व्याकरणका क्षेत्रमा पनि उत्तिकै महत्त्वपूर्ण रहेको छ। उनको 'पातञ्जल योगसूत्र' कृति योग दर्शनका लागि प्रख्यात छ। त्यस्तै पाणिनिको अष्टाध्यायीको व्याख्या गरिएको 'महाभाष्य' पनि प्रख्यात छ। यिनका अतिरिक्त पतञ्जलिका 'सामवेदीय निदान सूत्र', 'चरकसंहिताको परिष्कार' कृति पनि छन्।

पतञ्जलिले आफ्नो व्याकरण कृति 'महाभाष्य' मा पाणिनिका सूत्रको व्याख्या गरेका छन्। यसमा पाणिनिका सूत्रका साथै तिनमाथि कात्यायनको वार्तिकका व्याख्या समेत माथि थप व्याख्या गरिएको छ। यसमा स्फोट र ध्वनि सिद्धान्तको व्याख्या र विश्लेषण गरिएको छ। व्याकरणका जटिल सूत्र र नियमलाई सरल गद्यशैलीमा प्रस्तुत गरेर पतञ्जलिले पाणिनिका कार्यलाई सरल ढङ्गमा विस्तार गरेका छन्। शब्द र अर्थको स्वरूप निर्धारण, शब्दको नित्य र अनित्य पक्षको विवेचना, भाषाहरूको स्थानीय अर्थभेदको सन्दर्भ उल्लेख, लोक प्रयोगको अथवा कथ्य भाषालाई प्रामाणिक मान्ने अवधारणाको प्रस्तुति, वर्णविश्लेषण सिद्धान्तको स्थापना आदि पतञ्जलिका भाषा व्याकरणिक क्षेत्रका महत्त्वपूर्ण योगदान हुन्।

### १.२.६ पाणिनीय व्याकरण परम्पराका टीका, वृत्ति र कौमुदी परम्परा

पाणिनीय व्याकरण परम्परालाई अगाडि बढाउने क्रममा टीका, वृत्ति र कौमुदी परम्पराको महत्त्वपूर्ण योगदान रहेको छ। यी परम्परा बारेमा तल सङ्क्षेपमा चर्चा गरिएको छ :

**(क) टीका**

टीका भनेको अर्थ स्पष्ट पार्ने काम हो। अर्थात् कुनै सूत्रको थप व्याख्या, विश्लेषण गरी त्यसलाई स्पष्ट पार्ने काम नै टीका हो। पाणिनिका व्याकरणका सूत्रलाई व्याख्या-विश्लेषण गर्ने विभिन्न टीकाहरू लेखिएका छन्। त्यस्ता टीकाहरूले पाणिनीय व्याकरण परम्परालाई निरन्तरता दिलाउन महत्त्वपूर्ण

योगदान पुऱ्याएका छन् । पाणिनिको 'अष्टाध्यायी' को व्याख्या गर्ने सन्दर्भमा स्वयम् पाणिनिबाट 'स्वोपज्ञ' नामक टीका लेखिएको थियो । त्यस्तै कात्यायनका वार्तिकले पनि टीकाको काम गरेको देखिन्छ। यस परम्परामा पतञ्जलिको 'महाभाष्य', भर्तृहरिको 'वाक्यपदीय स्वोपज्ञ टीका', अन्नम्भट्टका 'पाणिनीय मिताक्षरा', वासुदेव वाजपेयीको सिद्धान्त कौमुदीमाथिको 'बालमनोरमा' टीका, ज्ञानेन्द्र सरस्वतीको सिद्धान्त कौमुदीमाथिको 'तत्त्वबोधिनी टीका', कैयटका 'महाभाष्यको टीका' (प्रदीप) र यस टीका माथिका विभिन्न विद्वान्का टीकाहरू । त्यस्तै अन्य विभिन्न विद्वान्हरूले विभिन्न टीकामाथि लेखेका टीकाहरू महत्त्वपूर्ण छन् ।

**(ख) वृत्ति**

व्याकरण वा कुनै सूत्रलाई एक वाक्यमा गरिएको व्याख्यालाई वृत्ति भनिन्छ। सूत्रमा सामान्य सूचना हुन्छ। त्यसलाई अरु स्पष्ट पार्ने काम वृत्तिले गर्दछ। वृत्तिलाई सूत्रको पूर्ण अर्थ मान्न सकिन्छ। टीका भनेको वृत्तिको पनि व्याख्या हो। पाणिनिको अष्टाध्यामीको व्याख्यामा आधारित पतञ्जलिको 'महाभाष्य' एक प्रकारले भन्दा अष्टाध्यायीको वृत्ति हो भन्न सकिन्छ । पाणिनिको 'अष्टाध्यायी' र पतञ्जलिको 'महाभाष्य' सूत्रको भर्तृहरि, भट्टोजि दीक्षित, नागेश भट्ट, कैयट आदि विद्वान्हरूले व्याख्या गरेका छन् । वामन तथा जायदित्यले पाणिनिको 'अष्टाध्यायी'को वृत्ति लेखेका छन्। यसमा वामनले अष्टाध्यायीको छैटौं, सातौं र आठौं अध्यायको व्याख्या गरेका छन् भने जयादित्यले पहिलोदेखि पाँचौं अध्यायसम्मको व्याख्या गरेका छन् । यस प्रकार पाणिनीय व्याकरणको विस्तार र प्रचारमा वृत्ति परम्पराको महत्त्व बिर्सन मिल्दैन।

**(ग) कौमुदी परम्परा**

'कौमुदी' शब्दको अर्थ चन्द्रमाको किरण वा प्रकाशयुक्त किरण भन्ने हुन्छ। संस्कृत परम्परामा शब्दहरूको रूपसिद्धि प्रक्रियासहित लेखिएको व्याकरणलाई कौमुदी भन्ने गरिएको पाइन्छ । यस प्रकार पाणिनिको अष्टाध्यायी लगायतका संस्कृतका व्याकरणलाई सरल ढङ्गमा सिकाउन र त्यसको विस्तार र विकास गर्न सहयोग पुऱ्यायो । कौमुदी परम्पराको सुरुवातसँगै देखापरेको व्याकरण परम्परालाई नव्यव्याकरण भनिन थालियो। यस परम्परामा धर्मकीर्तिको 'रूपावतार', विमल, सवस्वतीको 'रूपमाला', रामचन्द्रको 'प्रक्रिया कौमुदी', भट्टोजिदीक्षितको 'शब्दकौस्तुभ', नागेश भट्टको 'शब्देन्दुशेखर' जस्ता व्याकरण तथा कौमुदीहरू देखा परे । यसरी कौमुदी परम्पराले पाणिनीय व्याकरण परम्परालाई विस्तार गर्नका साथै समयानुकूल परिष्कार, परिमार्जन गर्न समेत महत्त्वपूर्ण योगदान पुऱ्याएको देखिन्छ।

## १.३. उत्तर पाणिनीय व्याकरण चिन्तन

पाणिनी, कात्यायन र पतञ्जलिलाई त्रिमुनि पनि भनिन्छ। यी त्रिमुनिको युग पाणिनीय युगका नामले चिनिन्छ । पाणिनिको समय इ.पू. पाँचौ शताब्दीका मानिन्छन्। कात्यायन इ.पू. ४५० देखि ३०० बिचको समयावधिका र पतञ्जलि इ.पू. तेस्रोदेखि पहिलो शताब्दी बिचका मानिन्छन्। यसरी हेर्दा इ.पू. ५०० देखि इ.पू. १०० का बिचको ४-५ सय वर्षको अवधिलाई संस्कृत भाषा-व्याकरणका क्षेत्रमा पाणिनीय युग मानिन्छ।

त्रिमुनिको समयपछि पनि पाणिनीय भाषा-व्याकरण चिन्तनको परम्परालाई विभिन्न विद्वान्हरूले अगाडि बढाउने काम गरे । यस परम्परामा भर्तृहरि (सातौँ शताब्दी), भट्टोजिदीक्षित (सातौँ शताब्दी), वामन र जयादित्य (सातौँ शताब्दी), कैयट (११ औँ १३ औँ शताब्दी बिचका), नागेश भट्ट (१७-१८ औँ शताब्दी) आदि विद्वान्हरूले पाणिनीय व्याकरण परम्परालाई अगाडि बढाएको पाइन्छ।

यसैगरी पूर्वीय संस्कृत भाषा-व्याकरण चिन्तनमा पाणिनिको सम्प्रदायका अतिरिक्त अन्य सम्प्रदायहरू पनि देखा परेका छन्। यस्ता सम्प्रदायहरू ऐन्द्र, चान्द्र, जैनेन्द्र, शाकटायन, कातन्त्र, हेमचन्द्र, सारस्वत तथा बोपदेव छन् (बन्धु २०५७ : १५)। ऐन्द्र सम्प्रदाय पाणिनिभन्दा पनि पहिले सुरु भएको मानिन्छ। देवताहरूले स्वर्गका राजा इन्द्रलाई शब्दको अर्थबोध सहज बनाउन अनुरोध गरेपछि इन्द्रले प्रकृति र प्रत्ययको विभाजन गरी भाषिक अध्ययनको सुरुवात गरेको मानिन्छ (बन्धु, २०५७ : १३)। यही सम्प्रदायलाई ऐन्द्र सम्प्रदाय मानिन्छ। बौद्ध विद्वान् चन्द्रगोमिन् (इ.४७०) द्वारा स्थापित चान्द्र सम्प्रदाय, आचार्य देवानन्दीद्वारा स्थापित जैनेन्द्र सम्प्रदाय, शाकटायनद्वारा स्थापित सम्प्रदाय शाकटायन, लोकभाषाको व्याकरण अध्ययन गर्ने कातन्त्र सम्प्रदाय, हेमचन्द्रद्वारा स्थापित हेमचन्द्र सम्प्रदाय, पुञ्जराज, अमृत भारती, क्षेमचन्द्र, चन्द्रकीर्ति, माधव, वासुदेव भट्ट मदन, मेघरत्न, धनेश्वर, जगन्नाथ, रामभट्ट आदिले चलाएको सारस्वत सम्प्रदाय, बोपदेवद्वारा स्थापित बोपदेव सम्प्रदाय आदि भाषिक सम्प्रदायहरू पाणिनीय परम्पराभन्दा अलगै देखिन्छन् (बन्धु, २०५७ : १५-१६)। यसरी पाणिनीय परम्परा तथा अन्य सम्प्रदायबाट संस्कृत र भाषा-व्याकरण चिन्तन परम्परा अगाडि बढेको पाइन्छ।

उत्तर पाणिनी युगमा पाणिनीय व्याकरण चिन्तन परम्पराको साथै मौलिक व्याकरण लेखनको परम्परा पनि सुरु भएको पाइन्छ। भर्तृहरिले आफ्नो व्याकरणमा पद तथा वाक्य सम्बन्धी मान्यताहरूको विकास गरे। प्राकृत र अपभ्रंश भाषाहरूका बारेमा अध्ययन हुन थाल्यो। हेमचन्द्रले वर्ण परिवर्तन सम्बन्धी अध्ययन गरे। यसरी भाषा-व्याकरण चिन्तनको पूर्वीय परम्परा अरु समृद्ध बन्दै अगाडि बढेको पाइन्छ।

### १.३.१ मौलिक व्याकरण ग्रन्थ परम्परा

संस्कृत भाषा-व्याकरण चिन्तन परम्परामा उत्तर पाणिनि युग मौलिक व्याकरण ग्रन्थ लेखन परम्पराका दृष्टिले पनि उपलब्धिपूर्ण देखिन्छ । उत्तर

पाणिनियुगमा मूलतः दुई प्रकारका भाषिक चिन्तन परम्परा पाइन्छन् : (क) पाणिनीय सम्प्रदाय र (ख) पाणिनिभन्दा भिन्न सम्प्रदाय (न्यौपाने र पराजुली, २०६९ : ८६)। यी दुबै सम्प्रदायबाट व्याकरणका क्षेत्रमा मौलिक चिन्तन गर्ने र व्याकरण ग्रन्थहरू तयार पार्ने कार्यको थालनी एवम् विकास भएको पाइन्छ।

मौलिक व्याकरण ग्रन्थ परम्परामा पाणिनीय सम्प्रदायका विद्वान्हरूका टीकाग्रन्थ, वृत्ति ग्रन्थ, कौमुदी आदि देखा परेका छन्। तिनमा प्रशस्त मौलिकता समेत देखा परेको पाइन्छ। त्यस्ता ग्रन्थहरूको सूची तल दिइएको छ :

| | |
|---|---|
| धर्मकीर्ति | : रूपावतार |
| विमल सरस्वती | : रूपमाला |
| रामचन्द्र | : प्रक्रिया कौमुदी |
| भट्टोजिदीक्षित | : सिद्धान्त कौमुदी, शब्द कौस्तुभ |
| वरदराज भट्टाचार्य | : मध्य सिद्धान्त कौमुदी, लघु सिद्धान्त कौमुदी |
| नागेश भट्ट | :शब्देन्दुशेखर, वैयाकरण सिद्धान्त मञ्जूषा, लघुशब्देन्दुशेखर, उद्योत, परमलघुमञ्जूषा |
| भर्तृहरि | : महाभाष्यदीपिका, वाक्यपदीय |
| कौण्ड भट्ट | : वैयाकरणभूषणसार |
| मण्डन मिश्र | : स्फोटसिद्धि (द्विवेदी, १९८७ : ४९४)। |

पाणिनिभन्दा अलग सम्प्रदायका विद्वान्हरूको पनि व्याकरणका विषयमा चिन्तन गरी ग्रन्थहरू बनाएको पाइन्छ। ऐन्द्र, चान्द्र, जैनेन्द्र, शाकटायन, हेमचन्द्र, सारस्वत, बोपदेव आदि सम्प्रदायका विद्वान्हरूले भाषा–व्याकरणका विषयमा अध्ययन-चिन्तन गरेका थिए भन्ने विषयमा माथि नै चर्चा गरिसकिएको छ। त्यस परम्परामा इन्द्रयोगी र बाग्भट्ट, चन्द्रगोमिनको 'चान्द्र व्याकरण', जैनेन्द्र सम्प्रदायका देवनन्दीको व्याकरण, हेमचन्द्रको 'स्वोपज्ञशब्दानुशासन', अनुभूति स्वरूपाचार्यको 'सारस्वत व्याकरण', बोपदेवको 'मुग्धबोध' व्याकरण आदि उत्तर पाणिनि युगका व्याकरण कृतिहरू हुन्।

### १.३.२ भर्तृहरिको व्याकरणमा पद तथा वाक्य सम्बन्धी मान्यता

उत्तर पाणिनि युगका भाषा-चिन्तन भर्तृहरिको 'वाक्यपदीय' ग्रन्थ उल्लेख्य मानिन्छ। यस ग्रन्थमा पद तथा वाक्य सम्बन्धी चर्चा गरिएको छ। पद्यात्मक शैलीमा पद तथा वाक्य सम्बन्धी चर्चा गरिएको यो कृति संस्कृत व्याकरण चिन्तन परम्परामा महत्त्वपूर्ण मानिन्छ। उनको व्याकरणको पद तथा वाक्य सम्बन्धी मान्यता तल प्रस्तुत गरिएको छ :

**पद सम्बन्धी मान्यता**

- पदको स्वतन्त्र अस्तित्व हुँदैन। पदले वाक्यको तहमा काम गर्छ।
- वर्णभन्दा भिन्न पदको सत्ता हुँदैन। त्यसैगरी पदभन्दा भिन्न वाक्यको सत्ता हुँदैन। अर्थात् पदविना वाक्य बन्न सक्दैन।

- पद कल्पित एकाइ हुन्, वाक्य पूर्ण र सत्य एकाइ हो।

**वाक्य सम्बन्धी मान्यता**

- वाक्य अविभाज्य र क्रमरहित हुन्छ।
- वाक्यभन्दा बाहिर रहेर पदको अर्थ पुष्टि हुँदैन। वाक्य बाहिर पदको सत्ता बाँकी रहँदैन। पदको उच्चारण हुनासाथ त्यसमा वाक्यको अस्तित्व देखापर्छ। जस्तै : 'पानी' भन्नासाथ पानी परेको हो कि ? पानी चाहिएको हो कि ? पानी मागेको हो कि ? पानी दिन लागिएको हो कि ? आदि विभिन्न वाक्य संरचनामध्ये कुनै न कुनै एउटाको अर्थ सङ्केत गर्दछ।
- वाक्य यथार्थ हो, वाक्य अर्थपूर्ण हुन्छ।
- वाक्यमा एकार्थवक्ता हुन्छ। वाक्यमा पदहरू हुन्छन् र पदहरूमा वर्ण हुन्छन् भन्नु भ्रम मात्र हो। वाक्यभन्दा अलग गरेर पद र वर्णको सत्ता कल्पना मात्र हो।

यस प्रकार भर्तृहरिले वाक्यलाई जोड दिएर भाषा–व्याकरणमा वाक्यको महत्त्वलाई स्थापित गरेका छन्। उनका अनुसार पद र वाक्य एक–अर्कामा अभिन्न विषय छन् भन्ने उनको मान्यता देखिन्छ।

### १.३.३ प्राकृत र अपभ्रंश भाषाको विकास प्रक्रिया

संस्कृत भाषाको कथ्य भेदलाई प्राकृत भाषा भनिन्छ। प्राकृत भाषाबाट विकसित भएका भाषालाई अपभ्रंश भाषा भनिन्छ। संस्कृत भाषामा लेख्य र शिष्ट भाषाभन्दा कथ्य भाषामा धेरै भेद देखा पर्दै जाँदा त्यस कथ्य भाषामा पनि अनेक भेद देखापरे। ती भेदहरू अपभ्रंश भाषाका नाममा चिनिन पुगे। अपभ्रंश भाषाको जन्म भएपछि ती भाषाहरूमा लेख्य परम्पराको समेत सुरु भयो। कालान्तरमा एउटा अपभ्रंश भाषाबाट अनेक भाषाहरू जन्मिए। संस्कृत–प्राकृतबाट अपभ्रंश हुँदै बनेका आधुनिक भाषाहरूलाई आधुनिक आर्य भाषा अथवा आधुनिक भारतीय आर्य भाषा भनिन्छ।

शिष्ट संस्कृत भाषाबाट प्राकृत हुँदै अपभ्रंश भाषा बन्ने क्रममा भाषामा विभिन्न प्रकारको परिवर्तन भएको पाइन्छ। यस्ता मुख्य–मुख्य परिवर्तन यस प्रकार छन् :

(क) तिन वचनबाट दुई बचनमा परिवर्तन।
(ख) तिन लिङ्ग (पुलिङ्ग, स्त्रीलिङ्ग र नपुंसक) बाट दुई वटा लिङ्ग ( पुलिङ्ग र स्त्रीलिङ्ग) मा परिवर्तन।
(ग) शिलष्ट योगात्मकबाट वियोगात्मकतातर्फ उन्मुख।
(घ) ऋ, लृ जस्ता स्वर वर्णको लोप हुँदै जानु।
(ङ) दीर्घ मात्रा हराउँदै जानु,
(च) मूर्धन्य व्यञ्जन दन्तमूलीय व्यञ्जनमा रूपान्तरण हुँदै जानु।

(छ) 'श' र 'ष', 'स' मा रूपान्तरण हुँदै जानु।
(ज) तद्भव र आगन्तुक शब्दको सङ्ख्यामा वृद्धि हुनु।
(झ) विसर्गको प्रयोग हट्दै जानु आदि।

शिष्ट संस्कृतबाट प्राकृत हुँदै अपभ्रंश भाषाहरूको विकास हुने क्रममा विभिन्न अपभ्रंश भेदहरू देखा परेका थिए। प्राकृत भाषाको विकास प्रक्रियालाई निम्नानुसार ३ चरणमा विभाजित गरिएको पाइन्छ :

**(क) प्रथम प्राकृत काल (इ.पू. ५००–इस्वीको आरम्भ) :** यस कालमा पाली भाषाको विकास भएको मानिन्छ। यस कालमा बुद्ध साहित्यको विकास भएको पाइन्छ। अशोकको शिलालेख लगायत बौद्ध शिलालेख/अभिलेख, अश्वघोषका नाटक, बुद्धको धम्मपद आदिमा पाली भाषा (प्रथम प्राकृत भाषा) को प्रयोग भएको पाइन्छ।

**(ख) द्वितीय प्राकृत काल (इस्वीको सुरुदेखि ५००) :** यस कालमा अपभ्रंश भाषाहरूको जन्म हुन थालेको तर तिनले स्पष्ट भेद देखाइ नसकिएको पाइन्छ। बाल्टिन, ढकी, चाण्डाली, शाकारी, शावरी, ब्राचड जस्ता प्राकृत भाषाका उपभेदहरू यस कालमा देखा परेको पाइन्छ।

**(ग) तृतीय प्राकृत काल (सन् ५००–१०००) :** यस कालमा अपभ्रंश भाषाहरूको विकास भएको मानिन्छ। यस कालको अन्त्यसम्म आइपुग्दा प्राकृत भाषाबाट शौरसेनी, महाराष्ट्री, मागधी, पैशाची, खस जस्ता अपभ्रंश भाषाको विकास भएको पाइन्छ। ती अपभ्रंशहरूबाट विभिन्न आधुनिक आर्य भाषाहरू विकसित हुन पुगेको देखिन्छ।

**मुख्य मुख्य अपभ्रंश भाषाहरू यस प्रकार छन्**

**१. शौरसेनी**

भारतको शूरसेन र आसपासमा बोलिने भएकाले यसलाई शौरसेनी भनिएको हो। यो भारतको मथुरा र आसपासको क्षेत्रमा बोलिन्थ्यो। साहित्यको प्रयोगका दृष्टिले यो भाषा निकै उर्वर मानिन्छ। यसबाट पश्चिमी, हिन्दी, अवधी, ब्रज, हरियाणी, बुन्देली आदि भाषाको विकास भएको हो। अश्वघोषका नाटकमा यस भाषाको प्रभाव पाइन्छ।

**२. महाराष्ट्री**

भारतको महाराष्ट्र क्षेत्रमा बोलिने प्राकृत भाषाको भेद वा अपभ्रश भाषालाई महाराष्ट्री भनिन्छ। यस भाषामा पनि प्रशस्त मात्रामा साहित्य लेखिएको पाइन्छ। यसबाट मराठी, कोंकणी आदि भाषाहरू विकास भएका हुन्। कालिदास र श्रीहर्षका नाटकहरू, जैन र बौद्ध ग्रन्थहरू महाराष्ट्री भाषामा लेखिएका छन्।

**३. मागधी**

मागधी प्राकृतलाई पूर्वी र पश्चिमी (अर्धमागधी) गरी दुई भेदमा वर्गीकरण गर्न सकिन्छ। पूर्वी मागधीबाट मैथिली, अङ्गिका, उडिया, बङ्गला,

आसामिया आदि भाषाहरूको जन्म भएको पाइन्छ । अर्ध मागधीबाट हिन्दी, भोजपुरी, मगही, नागपुरी, छत्तिसगढी आदि भाषाको विकास भएको मानिन्छ।

४. **पैशाची :** कास्मिर नजिक पिशाच जातिका मानिसले बोल्ने भाषिक भेदलाई पैशाची भनिन्छ । यसबाट कास्मिरी, ताजाकी, उज्वेकी, सिन्धी, पञ्जावी, मुल्तावी, मालवी, गुजराती, मारवाडी आदि भाषाहरू जन्मिएको मानिन्छ।

५. **खस :** पहाडी अपभ्रंश भाषाका रूपमा डा. सुनीतिकुमार चटर्जीले खस अपभ्रंशको चर्चा गरेका छन् । यस अन्तर्गत गढवाली, कुमाउनी, नेपाली आदि भाषा जन्मिएको मानिन्छ।

यस प्रकार विभिन्न अपभ्रंश भाषाबाट आधुनिक भारतीय आर्य भाषाहरूको विकास भएको मानिन्छ । आधुनिक आर्य भाषाहरू इस्वीको एघारौं शताब्दीमा विकसित भएका मानिन्छन् । अपभ्रंश भाषा तथा तिनबाट विकसित मुख्य आर्यभाषाहरूको सूची तलको तालिकामा हेर्न सकिन्छ :

| क्र.सं. | अपभ्रंश भाषा | आधुनिक आर्यभाषा |
|---|---|---|
| १ | शौरसेनी | पश्चिमी हिन्दी (खडिबोली, कन्नौजी, बुन्देली), राजस्तानी, गुजराती |
| २. | पैशाची<br>(क) केयक<br>(ख) टक्क<br>(ग) ब्राचड | <br>लहन्दा<br>पञ्जावी<br>सिन्धी |
| ३. | महाराष्ट्री | मराठी, कोङ्कणी |
| ४. | मागधी<br>(क) अर्धमागधी<br>(ख) मागधी | पूर्वी हिन्दी, बधेली, अवधी, बिहारी, बङ्गाली, उडिया, असामिया |
| ५. | खस<br>(क) पश्चिमी पहाडी<br>(ख) मध्य महाडी<br>(ग) पूर्वी पहाडी | चम्बाली, शिरमोर, जोक्तर, कुमाउनी, गढवाली, नेपाली |

### १.३.४. हेमचन्द्रको शब्दानुशासनमा वर्णपरिवर्तन सम्बन्धी व्यवस्था

हेमचन्द्रको समय सन् १०८८-११७२ मानिएको छ। यिनी जैन धर्मावलम्बी हुन् । यिनको 'हैमशब्दानुशासन' त्यतिबेलाको प्रसिद्ध व्याकरण कृति हो । जम्मा ८ अध्याय, ३२ पाउ र ४५०० सूत्र रहेको यो व्याकरण कृतिमा प्राकृत तथा अपभ्रंश भाषाहरूको वर्णन पाइन्छ । हेमचन्द्रको प्रस्तुत व्याकरणमा पनि कौमुदी र टीकाहरू लेखिएको पाइन्छ। प्राकृत, शैरसेनी, मागधी, पैशाची, चुलिका आदि अपभ्रंश भाषाको

शब्द अनुशासनका विषयमा केन्द्रित हेमचन्द्रको यो व्याकरण ग्रन्थ प्राकृत र अपभ्रंश भाषाहरूको विश्लेषण गरिएको प्रथम व्याकरण ग्रन्थ मानिन्छ (न्यौपाने र पराजुली, २०६९:९८)।

शब्दानुशासन वर्ण व्यवस्थाको अध्ययनका लागि महत्त्वपूर्ण छ। यसमा मुख्यतः वर्ण निर्धारण र वर्णपरिवर्तन बारे चर्चा गरिएको छ। यसमा स्वर, व्यञ्जन, ह्रस्व, दीर्घ, प्लुत, सन्ध्यक्षर, अनुस्वर, विसर्ग, वर्ण, अघोष, घोष, अन्तस्थ, स्वरसंज्ञा आदिका बारेमा चर्चा गरी वर्णहरूको अध्ययन गरिएको छ।

हेमचन्द्रको शब्दानुशासन वर्णपरिवर्तन सबन्धी व्यवस्थाका लागि उल्लेख्य रहेको छ। यसमा वर्ण परिवर्तनका निम्नलिखित प्रक्रिया बताइएको छ :

१. लोपप्रक्रिया
२. आगम प्रक्रिया
३. विपर्यय प्रक्रिया
४. समीभवन
५. घोषीभवन
६. महाप्राणी भवन

**१. लोप प्रक्रिया**

हेमचन्द्रको शब्दानुशासानमा लोप प्रक्रिया बारे चर्चा गरिएको छ। लोप प्रक्रिया अन्तर्गत (क) स्वर लोप र व्यञ्जन लोपमा वर्गीकरण गरिएको छ। स्वर लोपलाई आदि स्वर लोप र मध्य स्वर लोप तथा व्यञ्जन लोपलाई आदि व्यञ्जन लोप, मध्य व्यञ्जन लोप र अन्त्य व्यञ्जनको लोप गरी वर्गीकरण गरिएको पाइन्छ।

**२. आगम प्रक्रिया**

वर्ण परिवर्तन हुँदा केही वर्णको आगमन हुने प्रक्रियालाई आगम प्रक्रिया मानिएको छ। यसमा पनि स्वरको आगम-स्वरागम र व्यञ्जनको आगाम-व्यञ्जनागमको चर्चा गरिएको छ। स्वरागमलाई आदि स्वरागम, मध्य स्वरागम तथा व्यञ्जनागमलाई आदिव्यजनागम, मध्य व्यञ्जनागम र अन्त्य व्यञ्जनागम गरी वर्गीकरण गरिएको पाइन्छ।

**३. विपर्यय**

हेमचन्द्रको शब्दानुशासनमा वर्णपरिवर्तन प्रक्रिया अन्तर्गत विपर्ययको पनि चर्चा गरिएको छ। विपर्यय भनेको वर्ण परिवर्तन हुँदा वर्णहरूको स्थान परिवर्तन हुने वा ठाउँ सारिने अवस्था हो।

**४. समीभवन**

शब्दानुशासनमा वर्णपरिवर्तन प्रक्रिया अन्तर्गत समीभवनको चर्चा गरिएको छ। समीभवन भनेको एउटा वर्णको प्रभावमा अर्को वर्ण पनि अघिल्लो वा पछिल्लो वर्णजस्तै भई परिवर्तन हुने प्रक्रिया हो। 'जन्म' बाट जम्म, 'चक्र' बाट 'चक्क' कर्मबाट 'कम्म' हुनु समीभवनको उदाहरण हुन्।

५. **घोषीभवन**

अघोष वर्ण घोषमा परिवर्तन हुने प्रक्रिया घोषीभवन हो । घोषीभवन प्रक्रियाबाट वर्णको परिवर्तन हुने गर्दछ। जस्तै :

काक – काग

एकादश – इगारह

६. **महाप्राणीभवन**

अल्पप्राण वर्ण महाप्राण वर्णमा परिवर्तन हुने प्रक्रियालाई महाप्राणी भवन भनिन्छ। जस्तै :

हस्त – हाथ

## १.४ पूर्वीय अर्थ चिन्तन

पूर्वीय भाषिक चिन्तन परम्परामा मुख्यतः वर्ण सम्बन्धी र केही मात्रामा वाक्य सम्बन्धी चिन्तन–अध्ययन भएको थियो भन्ने बारे यस अघि चर्चा गरिएको छ। यस बाहेक अर्थ सम्बन्धी पनि पूर्वीय भाषाशास्त्रीहरूले चर्चा गरेका छन्। पूर्वीय चिन्तकहरूले शब्दार्थ तथा वाक्यार्थका बारेमा चिन्तन गरेका छन् । शब्दार्थका सन्दर्भमा स्फोटवादी र अपोहवादी मान्यता विशेष उल्लेख छ । त्यस्तै वाक्यार्थ सम्बन्धी अभिहितान्वयवादी र अन्विताभिधानवादी मान्यता उल्लेख्य छन् । शब्दार्थ तथा वाक्यार्थ सम्बन्धी पूर्वीय मान्यतालाई तलका उपशीर्षकहरूमा चर्चा गरिएको छ :

### १.४.१ शब्दार्थ : स्फोटवाद तथा अपोहवाद

संस्कृतका विद्वान्हरूले अभिधा, लक्षणा र व्यञ्जना गरी ३ प्रकारका अर्थ बारे चर्चा गरेका छन् । विभिन्न भाषा चिन्तकहरूले अर्थको विभिन्न प्रकारको उल्लेख गरेका छन् । यसैगरी संस्कृत परम्परामा अर्थ सम्बन्धी चिन्तनका केही सिद्धान्तहरू प्रसिद्ध छन् । स्फोटवाद, नित्यतावाद, अनित्यतावाद, अपोहवाद जस्ता शब्दार्थ सम्बन्धी सिद्धान्तहरू पूर्वीय अर्थ चिन्तन परम्परामा उल्लेख्य छन् । यस सन्दर्भमा स्फोटवाद र अपोहवाद बारे चर्चा गरिएको छ।

**(क) स्फोटवाद**

'स्फोट' शब्दको प्रयोग सर्वप्रथम पाणिनिको सूत्र 'अवङ्' मा उल्लेख भएको पाइन्छ। उनले स्फोटायन ऋषिको उल्लेख गरेका छन्। पतञ्जलिको 'महाभाष्य', भर्तृहरिको 'वाक्यपदीय' कृतिमा 'स्फोट' बारेमा थप चर्चा गरिएको छ । यसैगरी भट्टोजिदीक्षित, नागेश भट्ट, मण्डन मिश्र, कौण्ड भट्ट आदिले 'स्फोट' लाई अर्थ सिद्धान्तका रूपमा स्थापित गर्न सहयोग पुऱ्याएको देखिन्छ।

जे जसबाट अर्थको प्रस्फुटन हुन्छ त्यही प्रस्फुटिट अर्थलाई स्फोट भनिन्छ (बन्धु, २०५७:२१) । ऋग्वेद र अन्य व्याकरणशास्त्रका अनुसार वाणीका चार प्रकार छन् : परा, पश्यन्ती, मध्यमा र वैखरी । पराशक्तिका रूपमा सुषुप्त रहेको वाणीलाई 'परा' भनिन्छ। परावाणीलाई अव्याकृत वाणी

मानिन्छ। परा वाणी मूलाधिष्ठान चक्रबाट उत्पन्न हुने र मेरुदण्डको तल्लो भागमा सुषुप्त अवस्थामा रहने बताइन्छ। मूलाधिष्ठानचक्रबाट नाभिचक्रसम्म पुगेको र योगसाधनाबाट प्राप्त हुने प्रकाशरूपी वाणीलाई पश्यन्ती भनिन्छ। ध्यान अथवा विचारको अवस्थामा जोसुकैले अनुभव गर्न सक्ने नाभिचक्रबाट हृदयमा पुगेको वाणीलाई मध्यमा भनिन्छ र कण्ठ, तालु आदि स्थानबाट उच्चरित हुने वाणीलाई बैखरी भनिन्छ। आधुनिक भाषाविज्ञानले बैखरीको मात्र अध्ययन-विश्लेषण गर्दछ (बन्धु, २०५७: २२) स्फोट यीमध्ये अघिल्ला ३ वाणीको समष्टि हो। अर्थपूर्ण शब्द नै स्फोट हो।

स्फोटवादको पृष्ठभूमिका रूपमा माथि उल्लेख भए अनुसारका वाणीका चार भेदलाई लिइन्छ। स्फोटवादका अनुसार हृदयमा रहने वाणी स्फोट हो, त्यो ध्वनिका रूपमा प्रकट हुन्छ। स्फोट शब्दले अर्थ प्रकाशित गर्ने वा अर्थ अभिव्यक्ति गर्ने तत्त्व भन्ने अर्थ दिन्छ। संस्कृत परम्परामा शब्दलाई ब्रह्मस्वरूप भनिन्छ। त्यही ब्रह्म स्वरूपको शब्द ब्रह्मबाट अर्थको प्रस्फुटन हुन्छ। त्यस्तो प्रस्फुटन नै स्फोट भनिन्छ। स्फोटवादले शब्द र अर्थलाई अभिन्न मान्छ र शब्दबाट अर्थ फुटाउने वा शब्दमा निहित अर्थलाई प्रकाश पार्ने तत्त्वलाई स्फोट मान्दछ। स्फोटवादले बुद्धिमा अन्तर्निहित रहेको ब्रह्म स्वरूपको स्फोट ध्वनिका रूपमा अभिव्यक्त हुने मान्दछ। जसरी अण्डबाट जीवको विकास हुन्छ, त्यसैगरी स्फोटबाट ध्वनि, पद, वाक्य आदि भाषिक अवयवको विकास हुन्छ।

यसरी हेर्दा स्फोट भनेको मानिसको मन-मस्तिष्कमा रहेको शब्द ब्रह्म हो। यसमा अर्थ निहित हुन्छ। त्यो ध्वनिका रूपमा बाहिर प्रकट हुन्छ। यही मान्यता नै स्फोटवाद हो। स्फोटवादले शब्द र अर्थ एक-अर्कामा अन्तर्निहित हुन्छन् भन्ने मान्दछ। सूर्य र किरण एक अर्कामा अभिन्न भए जस्तै शब्द र अर्थका बिचमा पनि त्यस्तै अन्तर्सम्बन्ध हुन्छ भन्ने स्फोटवादी मान्यता छ।

स्फोटका विभिन्न प्रकार बताइएको छ। भट्टोजिदीक्षितले ८ वटा स्फोटको चर्चा गरेका छन् र धेरै विद्वान्हरूले यसलाई स्वीकारेका छन्। ती आठ प्रकार निम्न अनुसार छन् (बन्धु, २०५७ :२३-२४) :

१. **वर्ण स्फोट :** प्रत्येक वर्ण अर्थपूर्ण हुन्छ। प्रकृति सार्थक हुन्छ।
२. **पदस्फोट :** प्रत्येक पद सार्थक वा अर्थपूर्ण हुन्छ भन्ने अर्थमा प्रत्येक जीव सार्थक हुन्छ भन्ने अर्थमा।
३. **वाक्य स्फोट :** प्रत्येक वाक्य सार्थक हुन्छ। यसले ब्रह्म सार्थक छ भन्ने बताउँछ।
४. **अखण्ड पदस्फोट :** यस अनुसार पद अखण्ड हुन्छ र त्यो सार्थक हुन्छ, त्यसैगरी जीवात्मा पनि अखण्ड र सार्थक हुन्छ।

५. **अखण्ड वाक्यस्फोट :** वाक्य अखण्ड र सार्थक हुन्छ। यस अनुसार ब्रह्म अखण्ड छ, एक मात्र छ र सार्थक छ।

६. **वर्ण-जाति स्फोट :** वर्ण व्यक्तिका रूपमा होइन जातिका रूपमा सार्थक हुन्छ। त्यसैगरी अनित्य प्रकृति सार्थक होइन, नित्य स्वरूपको प्रकृति सार्थक छ।

७. **पद जाति स्फोट :** पद व्यक्तिका रूपमा होइन, जातिका रूपमा सार्थक छ। अनित्य जीवात्मा सार्थक होइन, नित्य कारणभूत जीवात्मा सार्थक हुन्छ।

८. **वाक्य जातिस्फोट :** व्यक्तिरूपी वाक्य सार्थक होइन, जातिरूपी वाक्य सार्थक हो । निर्वचनीय ब्रह्म सार्थक होइन, अनिर्वचनीय नित्य अखण्ड ब्रह्म सार्थक हो।

निष्कर्षमा हेर्दा स्फोटलाई परम् ब्रह्म स्वरूपको शब्द ब्रह्मका रूपमा लिइन्छ, जुन अर्थपूर्ण हुन्छ। यसरी शब्द र अर्थ एक अर्कामा अन्तर्निहित छन् र यो नै स्फोट हो भन्ने सिद्धान्त नै स्फोटवाद हो। यस वादले शब्दब्रह्मका रूपमा रहेको स्फोट ध्वनिका रूपमा बाहिर प्रकट हुन्छ। यो वर्ण, पद, वाक्य आदि प्रकारमा विस्तारित हुन्छ भन्ने मान्छ। यसप्रकार स्फोटवादले शब्द र अर्थको सम्बन्धलाई अभिन्न र नित्य मान्दछ।

निष्कर्षमा हेर्दा स्फोटवाद अनुसार ब्रह्मस्वरूप शब्द जसमा अर्थ निहित हुन्छ, त्यसैलाई स्फोट भनिन्छ। स्फोटका अभावमा अर्थात् शब्द र अर्थको उचित तालमेलका अभावमा अर्थबोध हुँदैन। यसप्रकार शब्द र अर्थ एक अर्कामा अन्तर्निहित छन्। त्यसरी अर्थले पूर्ण भएको शब्द ब्रह्म स्वरूपको हुन्छ, जसलाई शब्द ब्रह्म भनिन्छ। त्यो शब्द ब्रह्म नै स्फोट हो। स्फोटले गर्दा नै शब्दको अर्थ खुल्दछ। यो मान्यतालाई स्वीकार गर्ने सिद्धान्तलाई स्फोटवाद भनिन्छ।

(ख) अपोहवाद

शब्दार्थ सम्बन्धी अपोहवादी सिद्धान्त बौद्ध दार्शनिक दिङ्नाग ( इ.४५) ले स्थापना गरेका हुन्। उनको 'प्रमाण-समुच्चय' को पाँचौं परिच्छेदमा 'अपोह परीक्षा'को चर्चा गरिएको छ (बन्धु २०५७ : २५)। यस सिद्धान्तले शब्द र अर्थका बिचमा कुनै सम्बन्ध छैन भन्दछ। अपोहले जातिलाई मान्दैन र यसले अन्यको निषेध गर्दछ। जस्तै : भेडा शब्दले बाखो, खच्चड, घोडा आदि शब्दको निषेध गर्दछ। यस्तै अन्यको निषेधबाट अर्थ स्पष्ट हुन्छ भन्ने मान्यता राख्दछ। यस प्रकार एउटाको अर्थबोध हुन त्यस भिन्न अन्यको अर्थ निषेध गर्दछ। यस्तै निषेध विना स्वीकृति हुँदैन र अर्थ ज्ञान हुन सक्दैन भन्ने यसको मान्यता हो। 'बाखो' भन्दा एकैसाथ बाखोको स्वीकृति र बाखोइतरका जस्तै भेडा, च्याङ्ग्रा आदिको निषेध हुन्छ र अर्थ स्पष्ट हुने गर्छ भन्ने सिद्धान्त नै अपोहवाद हो।

बौद्ध दर्शन अनुसार जाति अमूर्त तत्त्व वा कल्पना मात्र हो। शब्दको अर्थ जाति हुन सक्दैन। त्यसैगरी व्यक्तिको गुण र सत्ता पनि अनित्य छ। यसरी जाति र व्यक्तिको गुण वा सत्ता अनित्य हुने हुँदा शब्दको अर्थ पनि नित्य, स्थिर र विकल्परहित हुन सक्दैन। शब्दको अर्थ कल्पनामा मात्र सीमित हुन्छ (न्यौपाने र पराजुली, २०६९: १२५)। बौद्ध धर्मको शून्यवादी मान्यता अनुसार शब्दको नित्य र विकल्पहीन अर्थ अर्थात् स्फोटवादीले भनेजस्तै शब्द ब्रह्मका रूपमा रहने शब्द र अर्थको अन्तर्सम्बन्ध (स्फोट) को अवस्था रहँदैन। शब्दले एउटा वस्तुको अर्थलाई स्वीकार गर्छ र अरुलाई निषेध गर्छ, त्यसैबाट शब्दार्थ बोध हुन्छ। शब्दार्थ सम्बन्धी यही सिद्धान्त अपोहवादका नामले स्थापित रहेको छ।

### १.४.२ वाक्यार्थ : अभिहितान्वयवाद र अन्विताभिधानवाद

पूर्वीय अर्थ चिन्तन परम्परामा वाक्यार्थलाई जोड दिने मान्यता पनि छ। यस सम्बन्धी अभिहितान्वयवाद र अन्विताभिधानवाद दुई वटा सिद्धान्त प्रचलित छन्।

**(क) अभिहितान्वयवाद**

उच्चरित पदका अर्थहरूको परस्परमा अन्वय भएपछि वाक्यको अर्थ बोध हुन्छ भन्ने सिद्धान्तलाई अभिहितान्वयवाद भनिन्छ। स्फोटवादको खण्डन गर्दै यो सिद्धान्त जन्मिएको हो। यस सिद्धान्तले पदहरूको समष्टिलाई वाक्य मान्दछ र पदहरूको अर्थको समष्टिले वाक्यले वाक्यको अर्थ बोध हुन्छ भन्ने मान्यता राख्दछ। जैमिनी, कुमारिल आदि मीमांशकहरूले यस सिद्धान्तलाई स्थापित गरेका हुन्।

अभिहितान्वयवादले वाक्यको अलग्गै अर्थ हुँदैन, पदहरूको अर्थको समष्टि नै वाक्यको अर्थ हो भन्ने मान्यता राख्ने हुनाले यस सिद्धान्तलाई पदवादी सिद्धान्त पनि भनिन्छ। सारमा भन्नु पर्दा वाक्यमा भएका पदहरूको अर्थको समष्टिबाट वाक्यको अर्थ प्रकट हुन्छ भन्ने अर्थ सम्बन्धी सिद्धान्त नै अभिहितान्वयवाद हो।

**(ख) अन्विताभिधानवाद**

प्रत्येक पदले आफ्नो अर्थका साथै अन्वित पदार्थको अर्थ पनि बोध गराउँछ भन्ने सिद्धान्त अन्विताभिधानवाद हो। यस सिद्धान्तका प्रतिपादक छैटौं शताब्दीका प्रभाकर भट्ट हुन्। भट्ट र उनका अनुयायीले यस सिद्धान्तलाई अगाडि बढाएका हुन्। यस सिद्धान्तले पदहरूको अर्थ वाक्यको प्रसङ्गद्वारा निर्धारित हुन्छ भन्ने मान्यता राख्दछ। यस मान्यताले पद वा शब्दको अर्थलाई नभएर वाक्यको अर्थलाई जोड दिन्छ। यस मान्यता अनुसार वाक्यबाट अखण्डित रूपमा अर्थ प्रकट हुने गर्दछ। यस सिद्धान्त अनुसार पदमा अर्थबोधक शक्ति र पारस्परिक सम्बन्धको शक्ति दुवै रहेको हुन्छ।



**परिच्छेद २**

# युरोपेली भाषिक चिन्तन परम्परा र ऐतिहासिक भाषाविज्ञान

## २.१ ग्रिसेली भाषिक चिन्तन परम्परा र उपलब्धि

युरोपेली भाषिक चिन्तन परम्पराको सुरुवात युनान वा ग्रिसबाट भएको हो। प्राचीन ग्रिस पश्चिमा दर्शनको आधारभूमि हो। ग्रिसेली दार्शनिकहरू सोक्रेटस, प्लेटो र एरिस्टोटलको दार्शनिक चिन्तन ज्ञान विज्ञानका हरेक विषयमा उत्तिकै महत्त्वपूर्ण मानिन्छन् । भाषिक चिन्तनका सन्दर्भमा पनि ग्रिसेली दार्शनिकहरूको योगदान महत्त्वपूर्ण रहेको छ।

ग्रिसेली भाषिक चिन्तनको आधार दर्शन थियो। ग्रिसेली दार्शनिक प्रोटागोरस (Protagoras) (इ.पू. पाँचौं शताब्दीका) ले दार्शनिक सन्दर्भमा तिन लिङ्गको चर्चा गरेका थिए (पुलिङ्ग, स्त्रीलिङ्ग र नपुङ्सक लिङ्ग)। यसले भाषिक लिङ्ग व्यवस्थाको चिन्तनमा आधारको काम गरेको छ। यसपछि सोक्रेटस (इ.पू. ४६९-३९९), प्लेटो (इ.पू. ४२७-३४७), एरिस्टोटल (इ.पू. ३८४-३२२) लगायतका ग्रिसेली दार्शनिकहरूले भाषिक चिन्तन गरेका छन् । यसै परम्परामा डायोनिसस थ्राक्सको 'व्याकरण कला' (Techne Grammatike) नाम व्याकरण कृति (इ.पू. दोस्रो शताब्दी) लेखिएको छ। यो पश्चिमा जगत्कै पहिलो व्याकरण कृति मानिन्छ।

ग्रिसेली भाषिक चिन्तन परम्परामा सोक्रेटस पहिलो चिन्तक मानिन्छन् । सोक्रेटसले शब्द र अर्थको सम्बन्ध बारे चर्चा गरेका छन् । उनका अनुसार शब्द र अर्थका बिचमा यादृच्छिक सम्बन्ध हुन्छ अर्थात् शब्द र अर्थ बिचको सम्बन्ध प्राकृतिक वा नैसर्गिक हुँदैन, त्यो यादृच्छिक हुन्छ। उनका अनुसार हेर्दा एउटै विषय बुझाउन अलग-अलग भाषामा अलग-अलग शब्दको प्रयोग गरिन्छ । त्यो नै यादृच्छिकता हो। एउटै लेख्ने साधनका लागि नेपालीमा 'कलम', संस्कृतमा 'लेखनी', अङ्ग्रेजीमा 'पेन' भन्नु यादृच्छिकता हो । यदि शब्द र अर्थका बिचमा नैसर्गिक सम्बन्ध हुँदो हो त 'कलम' को अर्थका लागि सबै भाषामा एउटै शब्दको प्रयोग गर्नु पर्दथ्यो।

सोक्रेटसका चेला प्लेटोले भाषालाई प्रकृति प्रदत्त विषयका रूपमा अर्थ्याए। प्लेटोको क्रेटिलस (Cratylus, इ.पू. ३५८) कृतिमा भाषाका बारेमा चर्चा गरिएको छ। उनले सघोष, अघोष, महाप्राण ध्वनिका बारेमा पनि चर्चा गरेका छन्। भाषाको व्युत्पत्तितर्फ चासो राख्ने र शब्दलाई संज्ञा र क्रियामा विभाजित गर्ने काम प्लेटोले गरेका छन्। प्लेटोलाई प्रकृतिवादी भाषा चिन्तकका रूपमा लिइन्छ (बन्धु, २०५७ : २७)।

एरिस्टोटलले भाषा आन्तरिक नियमहरूद्वारा सञ्चालित हुन्छ भन्ने मान्यता अगाडि सारे। उनले वाक्यका उद्देश्य र विधेय बारे चर्चा गरे। एरिस्टोटलले कलालाई प्रकृतिको अनुकरण भनेका छन् र भाषालाई पनि यही मान्यता अर्थात् प्रकृतिको अनुकरणका रूपमा लिएका छन्।

ग्रिसेली भाषिक चिन्तन परम्परामा अलेक्जेन्ड्रिया मुख्य केन्द्रका रूपमा देखा पर्‍यो र अलेक्जेन्ड्रिया सम्प्रदायकै विकास हुन पुग्यो। यस सम्प्रदायमा ऐरिस्तार्कस, दाइस्कोलस, हेरोदिअन आदि भाषाशास्त्रीहरू संलग्न थिए। त्यसैगरी परगामन, तार्सस आदि स्थान पनि भाषिक चिन्तनका केन्द्र बन्न पुगे। यस प्रकार ग्रिसमा भाषिक चिन्तनले धेरै प्रश्रय पाएको थियो भन्न सकिन्छ।

ग्रिसेली भाषिक चिन्तनको उपलब्धिका रूपमा ग्रिक भाषाको व्याकरणको लेखनलाई लिन सकिन्छ। इ.पू. दोस्रो शताब्दीका डायोनासियस थ्राक्स (Dionysius Thorax) को ग्रिक भाषाको व्याकरण यस परम्पराको महत्त्वपूर्ण उपलब्धि हो। यहाँ सम्म आइपुग्दा भाषाका ध्वनितत्त्व, व्याकरण तथा अर्थका बारेमा अध्ययन भएको पाइन्छ। थ्राक्सको व्याकरणले शब्दलाई नाम, सर्वनाम, क्रिया, कृदन्त, क्रियाविशेषण, उपसर्ग, संयोजक र उपपद गरी ८ प्रकारमा वर्गीकरण गरेको पाइन्छ। यसै परम्परामा इस्वीको दोस्रो शताब्दीका अपोलोनिय डिस्कोलस (Appolonius Dyskolos) लगायतका भाषाशास्त्रीहरू देखा परेको पाइन्छ।

ग्रिसेली भाषिक चिन्तन परम्परालाई प्रकृतिवादी र परम्परावादी त्यस्तै नियमवादी र अनियमवादी गरी वर्गीकरण गरिएको पाइन्छ। प्लेटोको समयमा परम्परावादी र प्रकृतिवादी मान्यताको बहस चलेको पाइन्छ। प्लेटोले साहित्यकलालाई प्रकृतिको अनुकरणको पनि अनुकरण भनेका र एरिस्टोटलले प्लेटोको यस मतलाई परिमार्जन गरी साहित्य-कलालाई प्रकृतिको अनुकरण भनेकाले प्लेटो र एरिस्टोटलको मतलाई प्रकृतिवादी मानिन्छ। प्रकृतिवादी विचारको खण्डन गर्दै पदार्थ र शब्द बिचको सम्बन्ध यादृच्छिक हुन्छ, ध्वनि र अर्थ बिच आन्तरिक सम्बन्ध हुँदैन भन्ने मान्यता अगाडि सारिएको पाइन्छ। यसमा पछिल्लो मतलाई परम्परावादी मान्यताका रूपमा लिइएको पाइन्छ।

ग्रिसेली भाषिक चिन्तन परम्परामा एरिस्टोटल र सोफिस्ट दार्शनिकहरूले नियमवादी र अनियमवादीको धारणा पनि अगाडि सारेको पाइन्छ। भाषामा निश्चित व्यवस्था वा नियमहरू हुन्छन् भन्ने मान्यता नियमवादी मान्यता हो। भाषा आफ्नै आन्तरिक नियमहरूद्वारा सञ्चालित हुन्छ भन्ने मान्यता नै नियमवादी मान्यता हो।

नियमवादी मान्यताको वकालत मुख्यतः एरिस्टोटलबाट भएको हो । नियमवादले भाषिक व्यवस्थामा सादृश्य तथा सङ्गति हुन्छ भन्छ । यसले वाक्यका उद्देश्य र विधेय बिचमा भेद देखाउने, शब्दको वर्गीकरण गर्ने जस्ता काम गरेको छ।

अनियमवादी मान्यतालाई आत्म नियन्त्रणवादी दार्शनिकहरूले अगाडि बढाएको पाइन्छ। भाषा नियममा होइन, तर्कमा आधारित हुन्छ भन्ने यसको मान्यता रहेको छ। यसले दर्शनका आधारमा भाषाको अध्ययन गर्ने मान्यता राख्छद ।

यस प्रकार ग्रिसेली भाषिक चिन्तन परम्परा निकै समृद्ध देखिन्छ।

**उपलब्धि**

ग्रिसेली भाषिक चिन्तन परम्पराका उपलब्धिलाई निम्न लिखित बुँदामा प्रस्तुत गर्न सकिन्छ :

१. ग्रिसेली भाषिक चिन्तन परम्परा युरोप सहित पाश्चात्य जगत्को पहिलो व्यवस्थित भाषिक चिन्तन परम्परा हो । यसले पाश्चात्य जगत्मा भाषिक चिन्तनको जग बसालिदियो।

२. प्रोटागोरसको ३ लिङ्गको दार्शनिक अवधारणाले भाषा–व्याकरणका क्षेत्रमा प्रश्रय पायो।

३. सोक्रेटसको शब्द र अर्थको यादृच्छिक सम्बन्धको मान्यताले भाषिक अर्थ चिन्तनमा एउटा अवधारणा् प्रस्तुत गरिदियो।

४. एरिस्टोटलले भाषालाई नियम वा व्यवस्थामा आधारित माने । यसले व्यवस्थापरक भाषाविज्ञान जस्ता भाषाविज्ञानका आधुनिक सिद्धान्तको प्रतिस्थापनमा केही प्रेरणा मिलेको मान्न सकिन्छ।

५. ग्रिसेली भाषिक चिन्तनमा भाषाका ध्वनि, वर्ण, शब्द, वाक्य, अर्थ, काल आदि भाषा–व्याकरणका क्षेत्रहरूबारे चिन्तन भएको पाइन्छ। यसले पाश्चात्य भाषिक चिन्तन परम्परामा आधारको काम गरेको मान्न सकिन्छ।

६. इ.पू. दोस्रो शताब्दीमा डायोनिसस थ्राक्सको 'व्याकरण कला' कृति प्रकाशनमा आयो । यसले पाश्चात्य जगत्मा व्याकरण लेखनको सुरुवात गरिदियो। यो ग्रिसेली भाषिक चिन्तन परम्पराको महत्त्वपूर्ण उपलब्धि हो।

## २.२ रोमेली भाषिक चिन्तन परम्परा

ग्रिसेली भाषिक चिन्तन परम्पराकै प्रभावमा रोमेली भाषिक चिन्तन परम्परा सुरु भएको मानिन्छ। इ.पू. दोस्रो शताब्दीतिर रोमेली सभ्यता उत्कर्षमा थियो। रोमेली सभ्यतामा ल्याटिन भाषाको विकास भयो जुन भाषा ग्रिक भाषाबाट विकसित भएको मानिन्छ । यसर्थ ग्रिसेली भाषिक चिन्तनको प्रभाव ल्याटिन भाषामा पऱ्यो । रोममा ग्रिसेली सभ्यताको प्रभाव परेकाले गर्दा ग्रिसेली भाषिक चिन्तनको प्रभाव रोममा पर्नु स्वाभाविक थियो। ल्याटिन भाषामा ग्रिक भाषाको व्याकरणको प्रत्यक्ष प्रभाव थियो।

अर्को ढङ्गले भन्दा ल्याटिन भाषा ग्रिक भाषाकै निरन्तरतामा विकसित भएको थियो। अतः ल्याटिन भाषामा ग्रिसेली भाषिक चिन्तन परम्पराको प्रभाव परेको थियो भन्न सकिन्छ।

ग्रिसेली भाषा चिन्तनको प्रमुख र ग्रिसेली डायोनिसस थ्र्याक्सको व्याकरणका प्रभावमा रोमेली भाषाशास्त्री बारो (Varro) ले ल्याटिन भाषाको व्याकरण तयार पारेको पाइन्छ। त्यसैगरी डोनातुस (Donatus), प्रिस्किन (Priscian) जस्ता भाषाशास्त्रीले भाषिक विश्लेषणका क्षेत्रमा काम गरेका पाइन्छ। बारो (इ.पू. प्रथम शताब्दी) को ल्याटिन व्याकरणमा ४ प्रकारका शब्दवर्ग (नाम, क्रियापद, कृदन्त तथा संयोजक र क्रियायोगी) को उल्लेख गरेका छन्। यिनले रूपायन कोटिको पनि उल्लेख गरेका छन्।

रोमेली व्याकरण परम्परामा जुलियस सिजरले 'अन एनालोजी' (On Analogy) शीर्षकको व्याकरण कृति लेखेर सिसेरोलाई समर्पण गरेका थिए भनिन्छ। त्यस्तै दोनतस (सन् ४००), प्रिस्सिन (सन् ५००) का व्याकरण कृतिले ल्याटिन व्याकरणलाई समृद्ध बनाएको पाइन्छ। प्रिस्सियनको व्याकरणमा नाम, क्रिया, कृदन्त, सर्वनाम, उपसर्ग, क्रिया, विशेषण, संयोजक विस्मयादिबोधक गरी शब्दको वर्ग निर्धारण गरिएको छ। प्रिन्सियसको व्याकरण ल्याटिन भाषाको मानक व्याकरण मानिन्छ र यो शैक्षणिक प्रयोजनका लागि उपयोगी भएको पाइन्छ।

ल्याटिन भाषामा एलफ्रिक (Aelfric) ले अङ्ग्रेजी व्याकरणमा समावेश गर्न लायक भनी दाबी गरी व्याकरण लेखेको पाइन्छ। त्यस्तै अब्लेयार्द (Abaillard), लले (Lulle) लगायतले पनि भाषा-व्याकरण सम्बन्धी चिन्तन गरेको पाइन्छ। ल्याटिन व्याकरण चिन्तन परम्परामा सैद्धान्तिक तर्कमूलक व्याकरण (Grammatical Speculative) जस्ता नयाँ सिद्धान्तहरू जन्मिएको पाइन्छ। खास गरेर मध्ययुगीन भाषा-व्याकरण चिन्तन परम्परामा ल्याटिन व्याकरण-चिन्तन परम्पराको महत्त्वपूर्ण स्थान देखिन्छ।

## २.३ पोर्ट रोयल व्याकरण

व्याकरण परम्परामा सत्रौं शताब्दीमा पोर्ट रोयल सम्प्रदायको स्थापना भएको पाइन्छ। सार्वभौम व्याकरणको अवधारणा सहित जन्मिएको यो सम्प्रदायले व्याकरणलाई मस्तिष्कबाट बोध हुने विषय बनाए। एन्टन आर्नोल्ड, क्लाउड ल्यान्स्लट, जेम्स ह्यारिस लगायतका वैयाकरणहरूले सार्वभौम व्याकरणको अवधारणा प्रस्तुत गरे। उनीहरूको अवधारणाको प्रभावमा चम्स्कीले सार्वभौम व्याकरणको मान्यता अगाडि सारेका छन् भन्ने तर्क पनि पाइन्छ। यद्यपि चम्स्कीको मान्यता मनोविज्ञानमा आधारित छ भने पोर्ट रोयल वैयाकरणहरूको मान्यता दर्शनमा आधारित रहेको छ।

पोर्ट रोयल व्याकरणका साथै अङ्ग्रेजी, फ्रेन्च, अरबी, हिब्रु आदि युरोपेली तथा मध्यपूर्वका भाषा-व्याकरणमा ल्याटिन भाषा-व्याकरण चिन्तनको प्रभाव

पाइन्छ। खास गरेर मध्य युगीन भाषा चिन्तनमा ल्याटिन भाषा-व्याकरणको प्रभाव पाइन्छ। त्यसो त पुनर्जागरण पछिका व्याकरण लेखन परम्परामा समेत ल्याटिनको प्रभवाबाट मुक्त देखिँदैन। जेम्स ह्यारिसको सार्वभौम व्याकरणको दार्शनिक खोज (१७५१), जे.बि. प्रिस्टको 'अङ्ग्रेजी व्याकरणका मूल तत्त्वहरू', रर्बट लथको 'अङ्ग्रेजी व्याकरणको सङ्क्षिप्त परिचय', आलोन्जो रिड र ब्रेनर्ड केलोगका अङ्ग्रेजी व्याकरण र रचनाको अभ्यास आदिमा ल्याटिन भाषा-व्याकरण चिन्तनको प्रभाव पाइन्छ।

निष्कर्षमा हेर्दा मध्य युगमा युरोपभर ल्याटिन भाषा-व्याकरणको प्रभाव देखिन्छ भने पुनर्जागरणपछि अङ्ग्रेजी लगायतका भाषा-व्याकरण चिन्तनमा भएको विकासमा समेत ग्रिसेली तथा रोमेली परम्पराको प्रभाव पाइन्छ।

## २.४ ऐतिहासिक भाषाविज्ञान

भाषाको इतिहासपरक अध्ययनको विषयलाई ऐतिहासिक भाषाविज्ञान भनिन्छ। ऐतिहासिक भाषाविज्ञानले कुनै निश्चित समयावधिको भाषिक विकास एवम् परिवर्तनको अध्ययन गर्दछ। यस खण्डमा ऐतिहासिक भाषाविज्ञानको प्रवर्तन, विकास, मुख्य मान्यता, उपलब्धि आदि बारे चर्चा गरिएको छ।

### २.४.१ ऐतिहासिक भाषाविज्ञान : प्रवर्तन, विकास र प्रमुख अध्येता

भाषाको परम्परागत अध्ययनपछि ऐतिहासिक भाषाविज्ञानको सुरुवात भएको हो। भास्को डिगामाले भारत पत्ता लगाएपछि पूर्वीय जगत् र पाश्चात्य जगत् बिच प्रत्यक्ष सम्बन्ध स्थापना हुन पुग्यो। यस क्रममा पूर्वीय र पाश्चात्य ज्ञान विज्ञान, चिन्तन आदिका बिचमा पनि सम्पर्क र तुलना हुन थाल्यो। पच्छिमा विद्वान्हरूले संस्कृत भाषामा भएको अध्ययन र यस भाषाका विशेषताहरूको अध्ययन गरेपछि भाषिक चिन्तनका दृष्टिले पूर्वीय परम्परा र संस्कृत भाषाको श्रेष्ठता थाहा पाए। यसैक्रममा ब्रिटिस कालीन भारतको उच्च अदालतका न्यायाधीश सर विलियम जोन्स (सन् १७४६-१७९४) ले संस्कृत भाषा ग्रिक र ल्याटिन भन्दा उत्कृष्ट रहेको र यी भाषाका बिचमा समानता रहेको घोषणा गरे। कलकत्तामा रोयल एसोयाटिक सोसाइटीको स्थापना (सन् १७८६) का क्रममा उनले गरेको सो उद्घोषले ऐतिहासिक तथा तुलनात्मक भाषाविज्ञानको जग बसाएको मानिन्छ। हुन त जोन्सको घोषणा हुनुभन्दा २० वर्षअघि नै फ्रान्समा कुर्दोले सो कुरा बताइसकिएको तर त्यसको प्रचार नभएको बताइन्छ (बन्धु २०५७:२९)।

विलियम जोन्सको घोषणाबाट अगाडि बढेको ऐतिहासिक भाषाविज्ञानको परम्परालाई विभिन्न विद्वान्हरूले अगाडि बढाएको पाइन्छ। चार्ल्स विल्किन्सले भगवद् गीता तथा हितोपदेश, विलियम जोन्सले 'शकुन्तला', मानव धर्मशास्त्र,

गीतगोविन्द आदि संस्कृतका कृतिको अङ्ग्रेजी अनुवाद गरे। यसले ऐतिहासिक तथा तुलनात्मक भाषाशिक्षाको विकास र विस्तार हुन पुग्यो।

ऐतिहासिक भाषाविज्ञानको विकासका क्रममा थोमस कोलब्रुक, विलियम क्यारे, जे.ए.एटन, स्लेगल दाजुभाइ, राज्मस, रास्क, याकोब ग्रिम, फ्रान्ज बोप, के.एम.रेप, अगस्ट एफ पाठ, जे.एच. ब्रेड्स्यार्फ, अगस्ट स्लाइखर, गे ओर्ग कुर्टियस, फ्रेडरिख म्याक्समुलर, विलियम ड्वाइट ह्विट्नी आदि अध्येताहरूले ऐतिहासिक भाषाविज्ञानलाई अगाडि बढाएको पाइन्छ। यी विद्वान्हरूमा थोमस कोलब्रुकले संस्कृत, प्राकृत, फार्सेली र अर्बेली भाषाहरूको तुलनात्मक तथा ऐतिहासिक अध्ययन गरेका थिए। त्यस्तै विलियम क्यारेले बोलचालमा रहेका भारतीय भाषाहरूको अध्ययन गरे। जे.ए.एटनले नेपाली भाषाको पहिलो व्याकरण लेखे। स्लेगल दाजुभाइले संस्कृत भाषा र साहित्यको अध्ययन गरे। स्लेगल दाजुभाइको कर्म ऐतिहासिक भाषाविज्ञानका साथै तुलनात्मक भाषाविज्ञानका क्षेत्रमा महत्त्वपूर्ण मानिन्छ। राज्मस रास्कले प्राचीन नोर्स भाषाको व्याकरण लेखे। याकोब ग्रिमले जर्मन भाषाको व्याकरण लेख्नाका साथै ध्वनि परिवर्तनका नियमहरू उल्लेख गर्दै भाषिक परिवर्तन र भाषाको पारिवारिक वर्गीकरणका विषयमा चर्चा गरे। म्याक्समुलरले संस्कृत भाषा र वाङ्मयका बारेमा युरोपमा प्रचार गरे। विलियम ड्वाइट ह्विट्नीले संस्कृत भाषालाई अमेरिकामा पुऱ्याए। यस प्रकार विभिन्न विद्वान्हरूले ऐतिहासिक तथा तुलनात्मक भाषाविज्ञानको विकास र विस्तार गरेको पाइन्छ।

## २.४.२ ऐतिहासिक भाषा विज्ञानका प्रमुख मान्यता र उपलब्धि

ऐतिहासिक तथा तुलनात्मक भाषाशास्त्रीहरूले भाषाविज्ञानलाई विज्ञानका रूपमा प्रतिष्ठित गरेको दाबी गरेका छन्। नभन्दै ऐतिहासिक भाषाविज्ञानको विकाससँगै भाषाविज्ञान आधुनिक युग तर्फ अग्रसर भएको देखिन्छ। उन्नाइसौँ शताब्दीमा भाषाविज्ञानको संस्थाकरण भयो। ज्ञानका विषयका रूपमा यसको पठनपाठन हुन थाल्यो। बर्लिनको विश्वविद्यालयमा भाषाशास्त्रको पद स्थापना भयो। उन्नाइसौँ शताब्दीका अन्त्यसम्ममा जर्मनीका विभिन्न विश्वविद्यालयमा भाषाशास्त्र पढाउने कम्तीमा एउटा दरबन्दीको स्थापना भयो (बन्धु, २०५७ : ३४)। यस पछि संसारका भाषाहरूको खोजी गरी २००० को सङ्ख्यामा भाषाहरूको सर्वेक्षण गरियो साथै शब्दावलीहरूको तयारी, अनुवाद कार्यहरू भए, विभिन्न भाषामा बाइबलको अनुवाद आदिबाट भाषाको अध्ययनले गति पायो।

ऐतिहासिक तथा तुलनात्मक भाषाविज्ञानको विकाससँगै संस्कृत भाषाको अध्ययनले तीव्रता पायो। तुलनात्मक अध्ययनको कार्यले गति लियो। संसारका भाषाहरूको रूपतात्विक वर्गीकरण भयो। पुनर्निर्माण र व्युत्पत्तिशास्त्रका क्षेत्रमा पनि

कार्यहरू भए। साथै ध्वनि-परिवर्तन तथा सादृश्यजन्य परिवर्तन जस्ता भाषामा हुने परिवर्तन नै त्यस समयका अध्ययनका विषय हुन पुगे (बन्धु, २०५७ : ३४)।

ऐतिहासिक भाषाविज्ञानले भाषाको इतिहासपरक अध्ययनमा जोड दिन्छ। भाषाको उत्पत्ति र विकासको विषय ऐतिहासिक भाषाविज्ञानको प्रमुख मान्यता हो। ऐतिहासिक भाषाविज्ञानले भाषाको पारिवारिक वर्गीकरण गर्न सकिने मान्यता राख्दछ। यसले भाषाको परिवर्तनशील स्वभावलाई उजागर गर्छ। साथै भाषामा हुने परिवर्तन निश्चित नियममा अगाडि बढ्छ भन्ने मान्यता राख्दछ। यसले भाषाको ऐतिहासिक अध्ययनमा जोड दिन्छ। भाषा के, कसरी विकास र परिवर्तन हुँदै अगाडि बढेको छ भन्ने विषयको तथ्यपूर्ण अध्ययन नै ऐतिहासिक भाषाविज्ञानको मूलभूत मान्यता देखिन्छ। ऐतिहासिक भाषाविज्ञानको उपलब्धिलाई तलका बुँदामा उल्लेख गर्न सकिन्छ :

- यसले पूर्वीय तथा पाश्चात्य भाषिक चिन्तन परम्पराको अन्वेषण तथा तुलनात्मक अध्ययन गरी परम्परागत भाषिक अध्ययनको यथार्थ उजागर गरेको छ।
- यसले संसारभरका भाषाको सर्वेक्षण तथा तिनको अवस्थाको खोजी गरेको छ।
- संसारका भाषाको पारिवारिक वर्गीकरण गरी भाषाहरूका बिचको आपसी सम्बन्ध पहिल्याएको छ।
- भाषिक परिवर्तनका नियमहरूको खोजी गरेको छ र भाषिक परिवर्तनका कारणहरू पहिल्याएको छ।
- भाषाको संरक्षण, सम्वर्द्धन तथा विकासका उपायहरू पत्ता लगाउन सहयोग गरेको छ।
- तुलनात्मक तथा वर्णनात्मक भाषाविज्ञानमा सहयोग गरेको छ।

## २.४.३ नव्यवैयाकरणहरूको भाषिक चिन्तन : विकासवाद र इतिहासवाद

हेमेन स्टाइन्थाल, कार्ल बुगम्यान, हर्मन अस्टोफ, डेलब्रुक, रासम्यान, भर्नर, अस्कोली आदि वैयाकरणहरूले परम्परागत भाषा व्याकरण चिन्तनका क्षेत्रमा नवीन मान्यताहरू प्रस्तुत गरेकाले यी वैयाकरणहरूको सम्प्रदायलाई नव्यवैयाकरण भनिन्छ। यस सम्प्रदायले बोलचालको भाषाको अध्ययन, भाषाको समकालीन अध्ययन, भाषाको शारीरिक तथा मानसिक दुवै पक्षको अध्ययन, भाषिक परिवर्तनमा सादृश्यको भूमिका, भाषिक मिश्रण जस्ता विषयको अध्ययनमा जोड दिए। त्यसैगरी यस

सम्प्रदायको भाषिक चिन्तनमा विकासवाद र इतिहासवादको गहिरो प्रभाव परेको देखिन्छ।

मानव विकासको अध्ययनका क्रममा चार्ल्स डार्बिनले विकासवादी सिद्धान्तको प्रतिपादन गरेपछि त्यसको प्रभाव ज्ञानविज्ञानका हरेक क्षेत्रमा पऱ्यो । यसैको प्रभावस्वरूप भाषा पनि विकासशील—परिवर्तनशील वस्तु हो भन्ने मान्यता नव्य वैयाकरणहरूमा देखापऱ्यो । डार्बिनको सिद्धान्तका प्रभावमा स्लाइघारले भाषालाई विकासवादी मान्यतामा हेर्नु पर्ने अवधारणा अगाडि सारे। यस अवधारणाले भाषालाई अन्य जैविक वस्तुसरह विकासशील वस्तु मानी ध्वनिपरिवर्तनको नियमितताको अवधारणा अगाडि साऱ्यो । तर भाषा जैविक वस्तु होइन र यसको विकास यान्त्रिक रूपमा हुँदैन भन्दै भाषाको विकासलाई इतिहासवादी मान्यतामा हेर्नु पर्ने अर्को अवधारणा अगाडि सारियो। इतिहासवादी अवधारणा अनुसार भाषा क्रमशः परिवर्तन हुँदै जाने यान्त्रिक नियमलाई मान्दैन र भाषाको परिवर्तन आन्तरिक तथा बाह्य कारणले हुने गर्दछ भन्ने मान्यता राख्दछ।

□□

परिच्छेद ३

# आधुनिक भाषाविज्ञानको विकास प्रक्रिया र भाषा सम्बन्धी प्रमुख मान्यता

## ३.१ युरोपेली तथा अमेरिकाली संरचनावाद

संरचना शब्द अङ्ग्रेजीको structure शब्दको नेपाली रूपान्तरण हो । यसको शाब्दिक अर्थ बनाउनु हो तर व्यवहारमा यस शब्दले निमार्ण वा बनोटका आवश्यक अङ्ग-उपाङ्गहरूको सम्पूर्णता तथा त्यसको निर्माण गर्ने घटक /अवयवको कुलयोग भन्ने बुझाउँछ । भाषाको अध्ययनका सन्दर्भमा भाषिक व्यवस्था वा संरचना अर्थात् वर्ण, व्याकरण र अर्थका तहको वैज्ञानिक अध्ययन गर्ने सिद्धान्त संरचनावाद हो । संरचनावादका जन्मदाता फर्डिनान्ड डि ससुर हुन् । ससुरले बिसौँ शताब्दीको सुरुतिर युरोपमा भाषाको संरचनात्मक अध्ययनको सुरुवात गरे र संरचनावादको जन्म हुन पुग्यो । यो परम्परा युरोप तथा अमेरिकामा फैलियो र भाषाको वैज्ञानिक अध्ययनको सुरुवात यहीँबाट हुन पुग्यो ।

### ३.१.१ संरचनावादी भाषाविज्ञानको प्रवर्तन : ससुर

स्विटजरल्यान्डमा जन्मिएका फर्डिनान्ड डि ससुर (१८५७-१९१३) आधुनिक भाषाविज्ञानका जन्मदाता मानिन्छन् । उनी शैलीविज्ञानका जन्मदाता पनि मानिन्छन् । जर्मन, फ्रेन्च, अङ्ग्रेजी, ग्रिस, ल्याटिनजस्ता भाषा सिकेका ससुरले सुरुमा जेनेभा विश्वविद्यालयमा भौतिक विज्ञान र रसायन विज्ञानको अध्ययन गरेका थिए । पछि उनको रुचि भाषाको अध्ययनतर्फ केन्द्रित भयो । ससुर जेनेभा विश्वविद्यालयमा पढ्दै गरेको प्राकृतिक विज्ञान (भौतिक र रसायन) छाडेर भाषाको अध्ययनमा लागेका थिए । पछि उनी जर्मनीको लेपजिग (नव्यव्याकरणको केन्द्र) गए, जहाँ प्रसिद्ध भाषाशास्त्री ब्रुगम्यान पनि थिए । उनले २१ वर्षको उमेरमा लेखेको 'भारोपेली भाषाहरूको आधारभूत स्वर व्यवस्था' (Memoir on the primitive system of vowels ih indo-European Language) ले प्रसिद्धि कमायो । उनले 'संस्कृत भाषाका सम्बन्ध कारकको प्रयोग' (The use of gevetives in sansetit ) शीर्षकमा विद्यावारिधि गरे । उनी सन् १८८० मा फ्रान्स आए र १८९० सम्म

ऐतिहासिक तथा तुलनात्मक भाषाको अध्ययन गरे । सन् १८९१ मा जेनेभामा प्राध्यापक भई सुरुमा संस्कृत भाषा र ऐतिहासिक भाषाविज्ञान पढाए । उनले सन् १९०७, १९०९ र १९११ सत्रहरूमा पढाउँदा तयार पारेका सामान्य भाषाविज्ञानका व्याख्यान-टिपोटहरूलाई उनका सहयोगी चार्ल्स बेली (charles belly) र याल्बर्ट सेचेहाए (A. Sechehaye) ले सन् १९१६ मा पुस्तकको रूप दिए। त्यो पुस्तकको नाम **सामान्य भाषाविज्ञानको पाठ्यक्रम** (Cours de linguistique Generale) हो । यसको अङ्ग्रेजी अनुवाद सन् १९५९ मा भयो । पछि सन् १९६३ मा मारो (mauro) ले यसको पुनः संस्करण गरे। यसपछि यस कृतिका विभिन्न संस्करणहरू आएका छन् । यही कृतिले आधुनिक भाषाविज्ञानको जग बसालिदिएको र भाषाविज्ञानको प्रवर्तन गरेको मानिन्छ । यो कृति भाषाका साथै समाजशास्त्रका क्षेत्रमा समेत उल्लेख्य मानिन्छ। यस पुस्तकमा अगाडि सारिएका ससुरका मान्यता संरचनावादी भाषाविज्ञानको जग मानिन्छ । यसै आधारमा ससुरलाई आधुनिक भाषाविज्ञानका प्रवर्तक मानिन्छ।

## ३.१.२ युरोपेली संरचनावाद र यसका आधारभूत मान्यता

संरचनावादको जन्मदाता ससुरलाई मानेपछि यस वादको जन्मभूमि जेनेभालाई मान्नु पर्ने हुन्छ। संरचनावाद युरोपका विभिन्न देश र अमेरिकामा समेत प्रायः एकैसाथ अगाडि बढेको पाइन्छ। महादेशीय आधारमा हेर्दा संरचनावादका मुख्य क्षेत्र युरोप र अमेरिका देखिन्छन् । यसै आधारमा युरोपेली संरचनावाद र अमेरिकाली संरचनावादको नामकरण भएको पाइन्छ।

युरोप महादेशका विभिन्न देशमा संरचनावादी भाषा चिन्तनका सम्प्रदायहरू देखा परे। त्यस्ता मुख्य सम्प्रदायहरू निम्न लिखित छन् :

(क) जेनेभा सम्प्रदाय
(ख) रसियाली सम्प्रदाय
(ग) बेलायती सम्प्रदाय
(घ) फ्रान्सेली सम्प्रदाय
(ङ) डेनिस सम्प्रदाय/कोपेनहेगेन/ग्लासिम सम्प्रदाय
(च) प्राग सम्प्रदाय

### ३.१.२.१ जेनेभा सम्प्रदाय

जेनेभा सम्प्रदायका जनक ससुर हुन् । यस सम्प्रदायका चार्ल्स बेलीले शैलीविज्ञानका क्षेत्रमा महत्त्वपूर्ण योगदान दिएका छन् । उनले विकास गरेको शैलीविज्ञानलाई तर्कपरक शैलीविज्ञान (Rational stglistics) भनिन्छ । यस सम्प्रदायका अरु सहयोगी सेचेहाए ( A Sechehaye) र फ्रेइ (H. Frei) हुन् । उनीहरूको योगदान वाक्यतत्त्वका क्षेत्रमा उल्लेख्य रहेको छ।

आधुनिक भाषाविज्ञानको प्रारम्भका सन्दर्भमा, संरचनावादको जन्ममा र सङ्केतवाद (semiology) को प्रवर्तनका सन्दर्भमा जेनेभा सम्प्रदायलाई भुल्न सकिन्न । यस सम्प्रदायका बेलीले सौन्दर्यपरक (Aesthetic) र वैयक्तिक (Individual) भावनाको अभिव्यक्तिको अध्ययनमा जोड दिएका छन् । उनले मनोवेगात्मक भाषिक अभिव्यक्ति (Emotional linglistic expression) को सामान्य अध्ययन गरे। यस सम्प्रदायको मुख्य योगदान भने ससुरको भाषिक मान्यता नै हो।

**ससुरको भाषिक चिन्तनलाई निम्नलिखित बुँदामा हेर्न सकिन्छ :**

## १. भाषा एक सङ्केत व्यवस्था (Sign-System) हो

ससुरले भाषालाई सङ्केतको एउटा रूप र भाषाविज्ञानलाई सङ्केत विज्ञानको एउटा अङ्ग मानेका छन् । उनका अनुसार भाषाविज्ञानले सामाजिक जीवनमा भाषिक सङ्केतहरूको प्रकार्य र प्रयोगको अध्ययन गर्दछ।

ससुरले भाषालाई सङ्केत व्यवस्था मानेका छन् । उनका अनुसार सङ्केत व्यवस्था लाई प्रतीक-व्यवस्था पनि भन्न सकिन्छ । ससुरका अनुसार वक्ताका मस्तिष्कमा रहेको अमूर्त भावना वा विचार र त्यससँग सहचारी ध्वनि बिम्ब एकाकार भएर वक्ताको मुखबाट बाहिर निस्कन्छ र स्रोताको कानबाट उसको मस्तिष्कमा पुगेपछि त्यो विचार वा धारणाका रूपमा रूपान्तरित हुन्छ । यसरी वक्ताले बोलेको कुरा स्रोताले बुझ्नेसम्मको क्रियालाई वाक्क्रिया भन्न सकिन्छ, त्यही नै भाषा हो । यसैलाई ससुरले भाषा एउटा सङ्केत व्यवस्था भनेका हुन् । उनका विचारमा सङ्केतका तिन वटा विशेषता हुन्छन् :

(क) यादृच्छिकता : भाषिक सङ्केत परम्परागत रूपमा सहजतापूर्वक स्वीकार गरिन्छ। यसरी बिनासर्त स्वीकृति पाउनु यादृच्छिकता हो।

(ख) अपरिवर्तनीय : यादृच्छिकताका कारण भाषिक सङ्केतलाई परिवर्तनको प्रस्ताव गरिँदैन र अपरिवर्तनीय हुन्छ।

(ग) रैखिकता : सङ्केतहरू निश्चित शृङ्खलामा आउँछन्। यस्ता सङ्केत बोल्दा कालिक र लेख्दा स्थानिक हुन्छन्। यसैलाई रैखिकता भनिन्छ।

यस प्रकार भाषा विचारहरू अभिव्यक्त गर्ने सङ्केतहरूको व्यवस्था हो भन्ने ससुरको मान्यता रहेको छ।

## २. भाषा र वाक् (Langue and Parole)

ससुरले भाषा वाक्का बिचमा स्पष्ट विभेद गरेका छन्। उनका अनुसार भाषा संरचनात्मक व्यवस्था हो र वाक् भाषिक व्यवस्थाको प्रयोग हो। भाषा एउटा संस्था, अन्तर्वैयक्तिक वा आन्तरिक नियम, मानकहरूको समुच्चय र स्वयम्‌मा पूर्ण व्यवस्था हो। भाषा वाक्हरूको शृङ्खला हो, यो प्राकृतिक हुन्छ। भाषा सामाजिक र सम हुन्छ। वाक् वैयक्तिक र विषम हुन्छ। भाषा मानसिक र अमूर्त हुन्छ, वाक् मौलिक र

मूर्त हुन्छ। युरोपेली संरचनावादमा भाषा र वाक्का बिचको सम्बन्धको विश्लेषण पद्धतिलाई वैज्ञानिक प्रारूप मानी निम्न लिखित ढङ्गमा देखाएको पाइन्छ :

भाषा र वाक्का बिचको फरकलाई निम्नानुसार उल्लेख गर्न सकिन्छ :

| | भाषा | वाक् |
|---|---|---|
| १. | भाषा सङ्केतहरूको व्यवस्था हो। | वाक् उच्चरित बोली हो। |
| २. | भाषा सामाजिक, प्राकृतिक र अमूर्त हुन्छ। | वाक् वैयक्तिक, भौतिक र मूर्त हुन्छ। |
| ३. | भाषा वाक्द्वारा निर्मित हुन्छ। | भाषाको व्यष्टि र प्रयोगात्मक रूप नै वाक् हो। |
| ४. | वाक्लाई नियन्त्रण गर्ने अमूर्त नियम नै भाषा हो। | भाषिक नियमको मूर्तता वाक्मा हुन्छ। |

## ३. सङ्केत (Signifier) र सङ्केतिक (Signified)

भाषा सङ्केत व्यवस्था हो भन्ने कुरा माथि नै बताइसकियो। ध्वनि बिम्ब मनोवैज्ञानिक हुन्छन् र ती एकीकृत भएर मस्तिष्कमा बस्छन्। यसरी हेर्दा सङ्केत भनेको अवधारणा र ध्वनिबिम्बको संयोजन हो (तर आजकाल सङ्केत भन्नाले ध्वनिबिम्बलाई मात्र जनाउँछ)। शब्द वाक्यको ध्वनि बिम्ब सङ्केतक हो र त्यसको अवधारणा वा अर्थ सङ्केतित हो। यी दुवैको संयुक्त रूप चाहिँ सङ्केत हो। यसलाई यसरी प्रस्तुत गर्न सकिन्छ : सङ्केत = अवधारणा + ध्वनिबिम्ब। अर्थात्, सङ्केतित + सङ्केतक = भाषा।

ससुरका अनुसार भाषाको ध्वन्यात्मक अभिव्यक्ति सङ्केतक (singifier) हो र अभिव्यक्तिद्वारा व्यक्त अर्थ वा कथ्य सङ्केतित (singifier) हो। सङ्केतक र सङ्केतितका बिचको सम्बन्धलाई सङ्केत (sign) भनिन्छ। यही सङ्केत भाषा हो।

ससुरले सङ्केतका ३ प्रकार बताएका छन् :

१. प्रतीमापरक (Iconic)
२. सूचनापरक (Indexical)
३. सामान्य परक (sign proper)

प्रतिमापरक : सादृश्य, व्यक्तिको चित्र, स्थानको नक्सा

सूचनापरक : स्वभाविक एवम् कार्यकारण-धुँवाबाट आगो, बादलबाट वर्षा

सामान्य : यादृच्छिक र रुढि

भाषाको सङ्केत यादृच्छिक हुन्छ। सङ्केतक र सङ्केतित बिचको सम्बन्ध पनि यादृच्छिक हुन्छ। यसले अल्पावधिको प्रतिनिधित्व गर्छ र यो अल्पावधि एउटै आयाममा मापनीय हुन्छ।

## ४. वस्तु (substance) र रूप (from)

भाषा वा सङ्केतलाई चिनाउन ससुरले वस्तु र रूपको अवधारणालाई अगाडि सारेका छन् । उनका अनुसार भाषा वस्तु नभएर रूप हो । उनले ध्वन्यात्मक अभिव्यक्तिद्वारा बुझाउने मूर्त वस्तु वा पदार्थलाई 'वस्तु' भनेका छन् । भाषामा हुने अर्थ (सङ्केतित) ले वास्तविक वस्तुको अमूर्त, मानसिक अस्तित्वलाई मात्र सङ्केत गर्छ अनि ध्वनिबिम्बले त्यही मानसिक अस्तित्वको प्रकट गर्दछ। विचार र ध्वनिबिम्ब एक अर्काको सम्बन्धलाई एउटा सिक्काका दुई पाटा मानिन्छन् । विचार र ध्वनिबिम्बको संयुक्त सम्बन्ध नै ससुरको विचारमा रूप हो । यही रूप नै भाषा हो। रूप आफैँमा वस्तु होइन र वास्तविक वस्तुको मानसिक रूप नै भाषा हो।

**५. विन्यासक्रमिक / क्रमात्मक (syntagmatic) र सहचारी (ssociative) सम्बन्ध**

भाषाका एकाइहरूका बिचको सम्बन्धलाई ससुरले विन्यासक्रमिक सम्बन्ध भनेका छन्। उनका अनुसार भाषाका एकाइहरूका बिचमा हुने शृङ्खलाबद्ध सम्बन्ध विन्यासक्रमिक सम्बन्ध हो । जस्तै, राम भात खान्छ। यो वाक्यमा राम, भात र खान्छमा क्रमशः कर्ता, कर्म र क्रियाको शृङ्खला क्रम छ। यो विन्यासक्रमिक वा क्रमात्मक सम्बन्ध हो।

माथिको उदाहरणमा आएको 'राम भात खान्छ' का सट्टा समान वर्गका अरु शब्दलाई प्रतिस्थापन गर्दा प्रतिस्थापन हुन सक्ने शब्दहरूको बिचको सम्बन्धलाई सहचारी सम्बन्ध भनिन्छ। जस्तै : राम कर्ताका सट्टा श्याम, हरि वा सीता, 'भात' कर्मका सट्टामा 'घर, किताब, पानी' आदि अनि 'खान्छ' क्रियाको सट्टामा 'जान्छ, पढ्छ, पिउँछ' आदि प्रतिस्थापित हुन सक्ने शब्द बिचको सम्बन्धलाई सहचारी सम्बन्ध भनिन्छ। यो समान वर्ग बिचको सम्बन्ध भएकाले यसलाई वर्गात्मक सम्बन्ध मानिन्छ । यसरी हेर्दा तेर्सो क्रमको सम्बन्ध विन्यासक्रमिक हो भने ठाडो क्रमको सम्बन्ध सहचारी वा वर्गात्मक हो।

**उदाहरण**

| आधार | विन्यासक्रम | सहचारी | | |
|---|---|---|---|---|
| शब्द तह | अत्यधिक (अति+अधिक) | सुन्दर+ता, सुन्दर+पन | | |
| पदावली | कालो केटो, सेतो घर | कालो केटो, गोरी केटी | | |
| वाक्य | राम भात खान्छ । हरि किताब पढ्छ। | राम<br>हरि | भात<br>किताब | खान्छ<br>पढ्छ |

**६. भाषाको एककालीन र क्रालकमिक (बहुकालिक) अध्ययन**

ससुर कालक्रमिक वा ऐतिहासिक भाषाविज्ञानको अध्ययनबाट एककालीन भाषाको अध्ययन तर्फ लागेका हुन् । ससुरले नै सर्वप्रथम एककालीन अध्ययनको अवधारणा अगाडि सार्दै भाषाको वर्णनात्मक अध्ययन पद्धतिलाई स्थापित गराएका हुन्। यसर्थ ससुरको कार्यबाट भाषाको वर्णनात्मक अध्ययनको परम्परा स्थापित भई आधुनिक भाषाविज्ञानको उदय हुन पुगेको पाइन्छ।

### ३.१.२.२ रसियाली सम्प्रदाय

पूर्व सोभियत सङ्घ भित्र भएका विभिन्न भाषिक सम्प्रदायलाई समष्टिमा रसियाली सम्प्रदाय भनिन्छ। यो सिङ्गो सम्प्रदायभित्र अलग-अलग अस्तित्व भएका विभिन्न सम्प्रदायहरूले भाषाका क्षेत्रमा महत्त्वपूर्ण काम गरेका छन् । एसियाली सम्प्रदायभित्रका मुख्य-मुख्य सम्प्रदाय (उपसम्प्रदाय) हरू यस प्रकार छन् :

(क) कजान
(ख) सेन्ट पिटर्सवर्ग
(ग) मास्को
(घ) मार

(क) कजान सम्प्रदाय

सोभियत सङ्घको कजान विश्वविद्यालयलाई केन्द्र बनाइ भाषाविज्ञानको क्षेत्रमा काम गर्ने विद्वान्हरूको समूहलाई कजान सम्प्रदाय भनिन्छ। यस सम्प्रदायमा मुख्यतः २ जना विद्वान् क्रियाशील देखिन्छन्। कजान विश्वविद्यालयका प्राध्यापक बादविन द कुर्तने (Baudouin de Courtenay) र उनका शिष्य एम. क्रुजेवस्की (M. kruszewski) यी दुई पोलिस विद्वान्हरू नै यस सम्प्रदायका प्रमुख व्यक्ति हुन्। क्रुजेवस्कीको ३६ वर्षको अल्पायुमै निधन भएको र राजनीतिक कारणले कुर्तनेले पनि कजान छाडेर वार्सा जानुपरेकाले यो सम्प्रदायले राम्ररी विकास हुने अवसर नपाएको देखिन्छ।

कुर्तनेले ससुरभन्दा पहिले नै भाषा र वाकको अवधारणा प्रस्तुत गरेका थिए साथै भाषाको समकालीन अध्ययनलाई पनि यिनले जोड दिएका थिए। तर कुर्तनेका यी धारणा व्यवस्थित रूपमा प्रचारमा नआउनाले यी अवधारणाका प्रवर्तक ससुरलाई मानिएको पाइन्छ। केही विद्वान्हरू भने यी दुई वटा मान्यता कुर्तनेबाट ससुरले थाहा पाएको हो भन्छन्। केही विद्वान्हरू भने ससुरले कुर्तनेका धारणाहरूको अध्ययन गर्न नपाउँदै आफ्ना धारणाहरू अघि सारेका हुन पनि भन्छन् । जेभए पनि भाषा वा वाक्सम्बन्धी तथा भाषाको एककालीन अध्ययनको परम्परा भने ससुरभन्दा अघि नै कुर्तनेबाट भएको देखिन्छ । यसलाई कजान सम्प्रदायको महत्त्वपूर्ण उपलब्धि मानिन्छ।

यस सम्प्रदायका अर्का विद्वान् क्रुजेवस्कीले भाषाका वर्णहरूबारे गहिरो अनुसन्धान गरेका छन्। यस सम्बन्धी उनको सन् १८८१ मा प्रकाशित शोधप्रबन्धको भूमिकामा गहन विवेचना छ । यो विवेचना समकालीन भाषावैज्ञानिक पद्धतिबाट भएको देखिन्छ।

यस सम्प्रदायमा अगुवा कुर्तनेले सेन्टपिटर्सवर्ग विश्वविद्यालयमा पनि प्राध्यापन गरेका थिए। यनले त्यहाँ पढाउँदाका उनका शिष्य सेर्बा (L.V. sceba,) ले पछि सेन्टपिटर्सवर्ग सम्प्रदायको नेतृत्व गरे। मास्को सम्प्रदायमा

पनि यस सम्प्रदायको प्रभाव परेको पाइन्छ। यसरी हेर्दा रसियाली समुदायमा कजान सम्प्रदायको केन्द्रीय भूमिका देखिन्छ।

**(ख) सेन्टपिटर्सवर्ग सम्प्रदाय**

सुरुमा सेन्टपिटर्सवर्ग सम्प्रदायका नामले चिनिने यस सम्प्रदायलाई सेन्टपिटर्सवर्ग सहरको नाम लेनिनग्रादमा बदलिएपछि 'लेनिनग्राद सम्प्रदाय' भन्न थालिएको हो। यस सम्प्रदायका अगुवा एल.भि.सेर्बा (L.V. scervba) हुन् । यी बाहेक याकुबिन्स्की, पोलिवानभ आदि भाषाशास्त्रीहरू यस सम्प्रदायमा काम गरेको देखिन्छ । यी भाषाशास्त्रीहरूले सन् १९१६ मा भाषाविज्ञान र साहित्यको एकैसाथ अध्ययन गर्नका लागि ओपोयाज (Opoyaz /opojaz) नामक संस्थाको स्थापना गरे । 'ओपोयाज' काव्य भाषा अध्ययन समाजको छोटकरी नाम हो। यस समाजले मुख्यतः साहित्यको भाषाको अध्ययनमा जोड दियो । यस समाजले आफ्नो उद्देश्यमा अपेक्षित सफलता पाउन भने सकेन । यसलाई पछि प्राग सम्प्रदायका रोमन याकोब्सनले अगाडि बढाएको पाइन्छ । काव्यभाषाका अतिरिक्त ध्वनिविज्ञानका क्षेत्रमा यस सम्प्रदायले निकै काम गरेको पाइन्छ।

**(ग) मास्को सम्प्रदाय**

मास्को विश्वविद्यालयलाई केन्द्र बनाई भाषिक अध्ययनमा सक्रिय विद्वान्हरूको समूहलाई मास्को सम्प्रदाय भनिन्छ। सन् १९१५ मा मास्कोमा स्थापित **मास्को भाषिक मण्डली** अर्थात् **मास्को लिङग्विस्टिक सर्कल**ले काव्यभाषाको अध्ययनमा जोड दियो । तर यस सर्कलका अध्यक्ष रोमन याकोब्सन प्राग सम्प्रदायमा गई त्यही सम्प्रदायमा सक्रिय रहेकाले यस सर्कलले त्यही धेरै काम गर्न सकेन । मास्को सम्प्रदायका प्रमुख व्यक्ति मास्को विश्वविद्यालयका प्राध्यापक फर्तुनातोभ (F.F. Fortunatov) हुन् । यसैले मास्को सम्प्रदायलाई फर्तुनातोभ सम्प्रदाय पनि भनिन्छ । फर्तुनातोभ कुर्तनेका समकालीन हुन् । यिनले ऐतिहासिक तथा तुलनात्मक भाषाविज्ञानका क्षेत्रमा काम गरेका छन्। यिनी स्वयंले लेखेका सामग्री नपाए पनि यिनका शिष्यहरूमा यिनको गहिरो प्रभाव परेको मानिन्छ । प्रसिद्ध युगोस्लाभ भाषाशास्त्री ए. बेलिक (A. Belic ) आदिका कार्यमा फर्तुनातोभको गहिरो प्रभाव रहेको बताइन्छ । फर्तुनातोभ भाषालाई मनोविज्ञानसँग जोड्न चाहँदैन थिए। यिनको भाषिक अध्ययन पद्धति ठोस र वस्तुपरक थियो भनिन्छ।

मास्को सम्प्रदायका अन्य विद्वान्हरूमा रिफरमात्स्की, मार, अवानोसभ, हटकर साउमन आदि उल्लेखनीय छन् । यी विद्वान्हरूले रूप, वाक्य आदिका क्षेत्रमा काम गरेका छन् । यी विद्वान्हरूमध्ये परम्परावादी भाषाविज्ञानभन्दा माथि उठेर रूपान्तरणपरक व्याकरणको **एप्लिकेसनल ट्रान्सफर्मेसन ग्रामर** विकास गरे । चम्स्की भन्दा निकै अगाडि साउमनद्वारा

प्रस्तुत रूपान्तरणपरक व्याकरण त्यति चर्चामा आउन सकेन । साउमनद्वारा प्रस्तुत रूपान्तरणात्मक व्याकरण चम्स्कीको रूपान्तरण व्याकरणभन्दा भिन्न रहेको छ ।

**(घ) मार सम्प्रदाय**

सुरुमा मास्को सम्प्रदायमा रहेका मार (N.J.Marr) ले पछि छुटै सम्प्रदायको विकास गरे जसलाई मार सम्प्रदायका नामले चिनिन्छ । मारले सुरुमा ककेसियन भाषापरिवारका क्षेत्रमा काम गरे । उनका विचारमा संसारका सबै भाषाहरू कुनै एउटा मूलबाट जन्मिएका हुन् । सन् १९२४ पछि यिनी मार्क्सवादी दर्शनसँग जोडेर भाषाको अध्ययन गर्न थाले र आफूलाई मार्क्सवादी भाषाशास्त्री घोषणा गरी भाषाको अध्ययन गर्न थाले । सुरुमा नव्यव्याकरणको अध्ययन गर्दै ककेसीयाली भाषाहरूको अध्ययनमा केन्द्रित यस सम्प्रदायले संसारमा सबै भाषाको मूल एउटै हो भन्यो । यस सम्प्रदायलाई मार्क्सवादी सम्प्रदाय पनि भनिन्छ ।

मारका विचारमा सामाजिक-आर्थिक परिवर्तनसँगै भाषामा परिवर्तन हुन्छ । उनी भाषालाई सामाजिक तथा आर्थिक अवस्थाको अधिरचना (Social and economic superstructure) मान्दथे । उनले वक्तामा रहेका वर्ग (सामाजिक-आर्थिक वर्ग) अनुसार भाषामा पनि वर्ग हुने कुरा बताएका छन् ।

भाषासम्बन्धी मारको धारणा प्रमाणका अभावमा विश्वसनीय हुन सकेन । सन् १९३४ मा उनको मृत्युसँगै यो धारणा क्रमशः ओझेल पर्दै गयो । मारको मृत्यु पछि मेस्कानिनोभ (I.I Mescaninov) ले मारका मान्यतालाई अगाडि बढाउने प्रयत्न गरे । मेस्कानिनोभले वाक्य संरचनामा जोड दिएका छन् । तर मार सम्प्रदायका मान्यताले निरन्तरता पाउन सकेन । सन् १९५० तिर आइपुग्दा रुसी कम्युनिस्ट नेता स्टालिनले समेत मारको सिद्धान्तको आलोचना गर्दै 'प्रवदा' पत्रिकामा लेख लेखेका थिए । यसरी एक समयमा निकै चर्चामा रहेको मारको मान्यताले इतिहासको विषय बन्नु पर्‍यो । निष्कर्षमा रसियाली सम्प्रदायले आधुनिक भाषाविज्ञानका क्षेत्रमा केही नवीन मान्यताहरू अगाडि सार्नका साथै ध्वनि, वर्ण र वाक्यका साथै काव्यभाषाका क्षेत्रमा केही महत्त्वपूर्ण काम गरेको देखिन्छ । रसियाली सम्प्रदायबाट भएका भाषिक अध्ययन परम्पराले साहित्यमा रूपवादी समालोचनाको जगको काम गरेको मानिन्छ । पछि प्राग सम्प्रदायका अगुवा रोमन याकोब्सनले रसियाली सम्प्रदायमा रहेर काव्यभाषाको अध्ययनलाई अगाडि बढाएका थिए । काव्यभाषाको अध्ययनको यस सिद्धान्तलाई रसियाली रूपवाद पनि भनिन्छ । रसियाली रूपवादसँग देखापरेका भ्लादिमिर प्रोप (vladimir prop) ले लोकाख्यानको अध्ययनका क्रममा संरचनावादी पद्धतिको विकास गरे । यसले वाक्यको उद्देश्य र विधेयको आधारमा स्थापित गर्न सहयोग गरेको

मानिन्छ। उनको **मर्फोलोजी अफ फोकटेल्स** (Morphology of folktales, १९२८ अनुवाद १९५८) मा रसियाली परिकथाहरूको संरचनावादी विश्लेषण पाइन्छ। यसले वाक्य संरचनाको वर्गात्मक र विन्याक्रमगत संरचनाको नमुना प्रस्तुत गरेको छ । प्रोपको पद्धतिलाई संरचनावादी लोकवार्ता विज्ञान (Stracture folkloristics) भन्ने गरिएको पाइन्छ । यस्ता कार्यले भाषाविज्ञानका क्षेत्रमा रसियाली सम्प्रदायको योगदान रहेको मानिन्छ।

### ३.१.२.३ फ्रान्सेली सम्प्रदाय

फ्रान्समा (खास गरेर पेरिसमा) विकसित सम्प्रदायलाई फ्रान्सेली सम्प्रदाय मानिन्छ। फ्रान्स सुरुदेखि नै भाषाको अध्ययनको केन्द्र बन्दै आएको देखिन्छ। ससुरले सन् १८८१ देखि १८९१ सम्म फ्रान्समै भाषाको अध्यापन गरेको पाइन्छ। ससुरका चेलाहरू ग्रेमो (m.Grammot) र मेये (meillet) ले भाषालाई शरीरविज्ञान र मनोविज्ञानका परिप्रेक्ष्यबाट अध्ययन गरे । यस सम्प्रदायमा विश्वका प्रथम ध्वनिशास्त्री मानिने रुसेलो (Rousselot) ले ध्वनिविज्ञानका क्षेत्रमा महत्त्वपूर्ण काम गरे। पाल पासी (p. passy) ले पनि ध्वनिका क्षेत्रमा महत्त्वपूर्ण काम गरे। त्यसै गरी वेन्द्रिय (J.vendryes) ले मनोवैज्ञानिक दृष्टिबाट भाषाको अध्ययन गरे । एम.ब्रिल (M.Breal) ले अर्थविज्ञानका क्षेत्रमा काम गरे । ज्युल ब्लास (J.Blach) ले ऐतिहासिक तथा तुलनात्मक क्षेत्रमा काम गरेका छन् । उनले मराठी तथा भारतीय अर्थ भाषाको तुलनात्मक अध्ययन गरेको पाइन्छ । त्यसै गरी ग्रिमा (Greimmas) तथा रोलाँ बार्थले (R. Barthes) संरचनात्मक अर्थविज्ञानका क्षेत्रमा काम गरेको पाइन्छ।

फ्रान्सेली सम्प्रदायका प्रसिद्ध विद्वान् आन्द्रे मार्तिने (Andre martinet) हुन्। मार्तिनेका कार्य प्राग सम्प्रदायसँग मिल्दाजुल्दा छन्। भाषिक प्रकार्यमा जोड दिने भएकाले यिनलाई प्रकार्यवादी भाषाशास्त्री पनि भनिन्छ । जर्मनी भाषाविज्ञानमा विद्यावारिधि लिएका मार्तिनेले अमेरिकाको कोलम्बिया विश्वविद्यालयमा अध्यापन गरेका थिए। न्युयोर्क भाषाविज्ञान मण्डल र वर्ड नामक शोध विकाससँग पनि सम्बद्ध भएका मार्तिने फ्रान्सेली सम्प्रदायका आधारभूत विशेषता र योगदानको केन्द्रमा रहेका थिए। मार्तिनेका प्रमुख भाषिक मान्यता यस प्रकार छन् :

**१. भाषाको परिभाषा**

यिनले भाषालाई सञ्चारको माध्यम भनेका छन् । उनका अनुसार प्रत्येक समुदायमा बेग्लै किसिमले आर्थी तत्त्व र ध्वनि आकार भएका एकाइ (Moneme) हरूबाट मानवीय अनुभवहरूको विश्लेषण हुन्छ, त्यही नै भाषा हो । यो ध्वनिक आकार आफैँमा विभेदक र क्रमिक एकाइ (वर्णहरू) का रूपमा अभिव्यक्ति हुन्छ। यस्ता ध्वनिका आकारको सङ्ख्या भाषाविशेषमा निश्चित हुन्छ र यसको प्रकृति र सम्बन्ध पनि भाषैपिच्छे फरक हुन्छ।

मार्तिनेका अनुसार प्रत्येक समुदायमा बेग्लै किसिमको आर्थिक तत्त्व र ध्वनिको आकार भएका एकाइहरू (मोनेमहरू) मा मानवीय अनुभवहरूको विश्लेषण हुने सञ्चारको माध्यम भाषा हो । यो ध्वनिक आकार भएको आफैँमा परिच्छेदक ( विभेदक) र क्रमिक एकाइका रूपमा अभिव्यक्त हुन्छ । यस्ता ध्वनिका आधार, विभेदक र एकाइहरूको सङ्ख्या भाषा विशेषमा निश्चित हुन्छ र जसको प्रकृति र सम्बन्ध पनि भाषापिच्छे फरक हुन्छ।

## २. दोहोरो अभिव्यक्ति (Double articulation)

मार्तिनेका अनुसार भाषाको दोहोरो अभिव्यक्ति हुन्छ। उनका अनुसार भाषाको सर्वप्रथम लघुतम सार्थक एकाइका रूपमा हुन्छ । यसलाई उनले एकिम (Meneme) भनेका छन् । प्रत्येक एकिमको आफ्नै अर्थ हुन्छ र एकिमहरूलाई संयोजित ध्वनिहरू पनि सार्थक हुन्छन् । उनका अनुसार भाषिक उच्चारण भनेको अभिव्यक्ति हो । यो दुई तहमा हुने गर्दछ : (क) लघुतम सार्थक अभिव्यक्ति (ख) ध्वनि एकाइका रूपमा ।

(क) भाषाको अभिव्यक्ति प्रथमतः लघुतम सार्थक एकाइका रूपमा हुन्छ । उनका अनुसार सार्थक लघुतम एकाइ एकिम (moneme) हो । प्रत्येक एकिम को आफ्नो अर्थ हुन्छ । एकिमको स्वतन्त्र अर्थ हुने भएकाले हरेक एकिमलाई बेग्लाबेग्लै क्रममा संयोजन गरेर असीमित वाक्य बनाउन सकिन्छ । जस्तै– हरि पुस्तक पढ्छ, यस वाक्यमा हरि, पुस्तक र पढ्छ लाई अलग संरचनामा संयोजन गरेर असीमित वाक्य बनाउन सकिन्छ । त्यसै गरी 'ऊ घर जान्छ' भन्ने वाक्यमा प्रयोग भएका ऊ, घर र जान्छ यी तिनवटै एकिमको सार्थक अर्थ छ ।

(ख) मार्तिनेले दोस्रो अभिव्यक्ति ध्वनिका स्तरमा हुने बताएका छन् । भाषाका सीमित ध्वनिहरू निश्चित क्रममा आएर एकिमहरूको निमार्ण गदर्छन् । जस्तै : 'क' 'ल' 'म' ध्वनिलाई अलग-अलग संरचनामा संयोजन गर्दा अर्थमा भिन्नता आउँछ : कलम– लमक, कमल– मकल.....। यहा 'क', 'ल', 'म' तिनवटा ध्वनिको आफै अर्थ छ र यी ध्वनिले अलग–अलग संरचनामा अलग–अलग अर्थ दिन्छन् । यसर्थ भाषिक अभिव्यक्ति एकिमका तहमा मात्र नभएर ध्वनिका तहमा पनि हुने गर्दछ ।

यसरी भाषामा शाब्दिक एकिम र ध्वनिक एकिम गरी दुईवटा एकिमका रूपमा भाषिक अभिव्यक्ति हुन्छ भन्ने मार्तिनेको अवधारणा देखिन्छ ।

मार्तिनेले प्रकार्यपरक ध्वनिविज्ञान (Functional phonetics) र प्रकार्यपरक वाक्यतत्त्व (Functional syntax) जस्ता शब्दावलीको प्रयोग गरेका छन् । यसबाट उनी भाषाविज्ञान स्वतः प्रकार्यपरक हुन्छ भन्ने पुष्टि गर्दछन् । उनले भाषाका प्रकार्यलाई प्राग सम्प्रदायका शब्दावलीमा भैँ

भाषाको मुख्य प्रकार्य सम्प्रेषण हो भनेका छन् । साथै यिनले चिन्तनपरक, अभिव्यक्तिपरक, प्रभावपरक र सौन्दर्यपरक प्रकार्यको चर्चा गरेका छन्।

३. मोनेम (एकिम)

मार्तिनेले भाषाको लघुतम सार्थक एकाइलाई मोनेम भनेका छन्। यो अमेरिकी संरचनावादको रूपिम (Morpheme) जस्तै हो । यो पनि दुई प्रकारको छ। व्याकरणिक अर्थमात्र दिनेलाई मोर्फिम र कोशीय अर्थ हुनेलाई लेक्सिम भनेका छन्। जस्तै- घर+एलु मा 'एलु'- मोर्फिम मोनेम र 'घर' लेक्सिम मोनेम हुन् । त्यस्तै अज्ञानता शब्दमा अ+ज्ञान+ता गरी तिनवटा मेनेम छन्। यसमा ज्ञान लेक्सिम हो भने 'अ' र 'ता' मोर्फिम हुन्।

निष्कर्षमा फ्रान्सेली सम्प्रदायले ध्वनिविज्ञान, अर्थविज्ञान, भूगोल, मनोवैज्ञानिक, सामाजिक र शरीर वैज्ञानिक दृष्टिले भाषाको अध्ययन गर्न दिशामा महत्त्वपूर्ण कार्य गरेको छ।

## ३.१.२.४ ब्रिटिस/ बेलायती सम्प्रदाय

संयुक्त अधिराज्य वा ग्रेटब्रिटेनमा विकसित संरचनावादी भाषाविज्ञानको अध्ययन समूहलाई समष्टिमा बेलायती वा ब्रिटिस सम्प्रदाय भनिन्छ । यस सम्प्रदायभित्र पनि निम्नलिखित तिनवटा सम्प्रदाय प्रमुख रहेका छन् :

१. इङ्लिस सम्प्रदाय
२. लन्डन सम्प्रदाय
३. ह्यालिडे सम्प्रदाय

(क) इङ्लिस सम्प्रदाय

यस सम्प्रदायका प्रमुख विद्वान्हरू स्विट, डेनियल, जोन्स, गिम्सन, एन.सी स्कट, नर्थोप फ्राइ, वेस्टरमेन (westermen), वार्ड (ward) आदि हुन् । स्विटले भाषाको सैद्धान्तिक एवम् व्यावहारिक दुबै पक्षमा काम गरे । डेनियल जोन्सले ध्वनिविज्ञान र वर्णविज्ञानका क्षेत्रमा महत्त्वपूर्ण योगदान दिएका छन्। जोन्सका ध्वनि सम्बन्धी अवधारणालाई विभिन्न युरोपेली, अफ्रिकी र एसियाली भाषाहरूको अध्ययनमा लगाउने काममा गिम्सन, फ्रइ, स्कट, वार्ड आदि सक्रिय भएको पाइन्छ। इङ्लिस सम्प्रदायले मूलतः ध्वनिविज्ञान र वर्णविज्ञानका क्षेत्रमा महत्त्वपूर्ण काम गरेको छ। यस सम्प्रदायका अनुयायी फर्थले पछि लन्डन सम्प्रदायको अगुवाइ गरे।

(ख) लन्डन सम्प्रदाय

जोन रूपर्ट फर्थ (J.R. Firth) लन्डन सम्प्रदायका अगुवा हुन् । सन् १९२० देखि १९२८ सम्म भारतको लाहोरमा अङ्ग्रेजी विषयको प्राध्यापन कर्ममा संलग्न भई फर्केपछि भाषाका क्षेत्रमा नवीन मान्यता लिएर आफू संलग्न इङ्लिस सम्प्रदायबाट अलग भई छुट्टै सम्प्रदाय बनाए । सन् १९४१ मा स्थापित यस सम्प्रदायमा रबिन्स (Rabins), सार्प (sharp), हिवट्ली (Whitely), मिथेल (Mitchell) आदि

फर्थका शिष्य तथा अनुयायीहरूको संलग्नता रहेको देखिन्छ। यस सम्प्रदायको भाषिक कार्य मूलतः फर्थद्वारा प्रस्तुत अवधारणाको प्रचार-प्रसार हो। यस सम्प्रदायको अगुवा फर्थद्वारा प्रस्तुत भाषिक मान्यता तथा कार्यहरूलाई बुँदागत रूपमा उल्लेख गर्न सकिन्छ।

(क) फर्थले ध्वनिविज्ञानका क्षेत्रमा प्रस्तुत गरेको ध्वनिगुणिक अभिलक्षण (Prosodic features) को अवधारणा महत्त्वपूर्ण मानिन्छ। उनले भाषाको ध्वनिका दुई वटा एकाइ हुने बताएका छन्। उनका अनुसार भाषाको उच्चार्य ध्वनिमा (१) ध्वनिक एकाइ (Phonematic Unit) र (२) ध्वनिगुणिक एकाइ (Prosodic Unit) गरी दुई वटा एकाइ हुन्छन्। ध्वनिक एकाइ भाषाका खण्डीय ध्वनि (स्वर र व्यञ्जन) र ध्वनिक गुणिक एकाइ खण्डेतर ध्वनि (बलाघात आदि) हुन्। ध्वनिका तहमा मात्र नभएर वाक्य, शब्द, अक्षर आदिका क्षेत्रमा पनि यो भेद कायम हुने फर्थको धारणा छ, जस्तै : आगो, आगो ! ऊ घर जान्छ। ऊ घर जान्छ ? ऊ घर जान्छ !

(ख) फर्थले पाइकका वर्णसम्बन्धी एक व्यवस्थावादी मान्यताका विरोधमा बहुव्यवस्थावादी मान्यता (Multi-dimensional theory) अगाडि सारे। पाइकले नाम शब्दमा पाइने वर्णलाई नै सारा भाषामा लागु गर्न सकिन्छ भन्ने एक व्यवस्थावादी मान्यता अगाडि सारेका थिए। यसका विपरीत फर्थले नामका साथै क्रिया, विशेषण, अव्यय आदि शब्दवर्गमा प्रयुक्त वर्णलाई पनि अध्ययन गरेर भाषाका वर्णहरूको अध्ययन गर्नुपर्दछ भन्ने बहु व्यवस्थावादी मान्यता अगाडि ल्याए।

(ग) फर्थले व्याकरण र अर्थका क्षेत्रमा पनि कार्य गरेका छन्। अर्थविज्ञानका क्षेत्रमा उनमा मेलिनोभस्कीको प्रभाव देखिन्छ। संरचना (structure) तथा व्यवस्था (system) का आधुनिक ब्रिटिस प्रयोगको प्रथम रूप फर्थबाटै भएको मानिन्छ।

**(ग) ह्यालिडे सम्प्रदाय**

यस सम्प्रदायका संस्थापक ह्यालिडे फर्थकै शिष्य हुन्। ह्यालिडेले भाषाका चार पक्ष (कोटि) र चार आयामका बारेमा चर्चा गरेका छन्। यसमा चार पक्ष हुन् :

(१) एकाइ (Unit))
(२) वर्ग (class)
(३) संरचना (structure)
(४) व्यवस्था (system)।

उनले यी चार वटा पक्षसँगै भाषामा चार आयाम हुने पनि बताएका छन्, ती आयामहरू हुन् :

(१) श्रेणी (Rank)

(२) द्योतन (Exponence)
(३) सूक्ष्मता (Delicavy) र
(४) गहिराइ (Dwpth) – पछि थपिएको।

ह्यालिडे आफ्नो भाषिक सिद्धान्तलाई पहिले **मापन र कोटि व्याकरण** (Scale and category grammar) नाम दिएका थिए। पछि यसको नाम बदलेर **व्यवस्थापरक व्याकरण** (systemic grammar) राखे। उनको यस सिद्धान्तलाई केही विद्वान्हरूले **व्यवस्था विकल्प** (system-choice) सिद्धान्त भन्छन्। आजभोलि यसलाई व्यवस्थापरक व्याकरणका रूपमा स्थापित रहेको छ। ह्यालिडेका मान्यताहरूबारे छुट्टै सन्दर्भमा चर्चा गरिएको छ।

### ३.१.२.५ कोपेनहेगन सम्प्रदाय / डेनिस सम्प्रदाय/ ग्लासिम विज्ञान सम्प्रदाय

डेनमार्कको राजधानी कोपेनहेगनलाई केन्द्र बनाएर भाषिक अध्ययनमा संलग्न विद्वान्हरूको सम्प्रदायलाई कोपेनहेगेन सम्प्रदाय भनिन्छ। यसमा धेरैजसो विद्वान्हरू डेनिस भाषी भएकाले यसलाई डेनिस सम्प्रदाय पनि भनिन्छ। यस सम्प्रदायले ग्लासिम (Glassem) विज्ञानको आधारणा प्रस्तुत गरेकाले यसलाई ग्लासिमविज्ञान सम्प्रदाय पनि भनिएको हो। यो सम्प्रदाय ससुरबाट प्रभावित देखिन्छ।

ग्लासिमको अवधारणा जन्मिनु अगावै ऐतिहासिक भाषाविज्ञानका अध्येता डेनिस भाषाशास्त्री रास्मस रास्क (Rasmus rask) कोपेनहेगन विश्वविद्यालयका प्राध्यापक जेस्पर्सन (O.Jesperson) आदिले भाषिक चिन्तन परम्परालाई समृद्ध तुल्याएका थिए। यसै पृष्ठभूमिमा ब्रान्दल (V. Brondal), येल्मस्लेभ (L.Hjelmslev) र उल्डाल (H. Uldell) ले ग्लासिम विज्ञानको अवधारणा विकास गरे। यिनीहरूले कोपेनहेगेन भाषा मण्डलको स्थापना गरेर भाषिक अध्ययनलाई व्यवस्थित रूपमा अगाडि बढाए।

ऐतिहासिक भाषाविज्ञान उन्नाइसौँ शताब्दीको महत्त्वपूर्ण उपलब्धि मान्ने ब्रान्दलले भाषिक विश्लेषणमा गणित र तर्कशास्त्रका धारणाहरूको प्रयोग गर्नुपर्ने कुरामा जोड दिएका छन्। यसबाट भाषाको सूक्ष्म अध्ययन हुने उनको मान्यता रहेको देखिन्छ। यिनले येल्मस्लेभसँग मिलेर ग्लासिमम विज्ञानलाई अघि बढाए। ब्रान्दलले भाषा र वाक् भन्दा भिन्न रूपमा भाषाको विश्लेषण गर्नुपर्ने धारणा राख्दथे। यिनले भाषाको अर्थ पक्षमा पनि रुचि राखेको पाइन्छ। यिनले ग्लासिम विज्ञानलाई अघि बढाउने क्रममा येल्मस्लेभसँग मिलेर सन् १९३९ देखि 'आक्ता लिङ्ग्विष्टिक' नामक पत्रिकाको सम्पादन पनि गरेका थिए।

लुई येल्मस्लेभ कोपेनहेगन विश्वविद्यालयका कुलपति तथा गणितका प्राध्यापकका छोरा थिए। यिनी सानैदेखि भाषाको अध्ययनमा लागेका थिए। यिनले भारतीय भाषाविज्ञान, रोमेली भाषाहरू तथा लिथुवानीयाली भाषाको अध्ययन गरे। यिनले वाक्यविज्ञान र ध्वनितत्त्वका क्षेत्रमा समकालीन अध्ययन गरे। यिनले व्याकरणको सामान्य सिद्धान्तका बारेका पुस्तक पनि लेखेका थिए। यिनले फ्रान्स र

प्रागमा अध्ययन गरी समसामयिक भाषिक अध्ययन पद्धतिबारे जानकारी लिए। सन् १९३८ मा उल्डालसँग 'ग्लासेमेटिक्सको रूपरेखा' (An outline of Glossematics) लेखे। यस सिद्धान्तप्रति विद्वान्हरूको रुचि बढ्दै गए पछि सन् १९४३ मा आफ्नो पुस्तक prolegomena to a Theory of language (अङ्ग्रेजी अनुवाद, १९५३) निकाले। सन् १९४२ मा ब्रान्दलको मृत्यु भएपछि 'आक्ता लिङग्विस्टिक' को सम्पादन एक्लैले गरे। पछिल्ला चरणमा उल्लाडसँग विवाद भई यस सम्प्रदायबाट अलग भए।

उल्लाडले ग्लासिम विज्ञानका क्षेत्रमा महत्त्वपूर्ण काम गरे। येल्मस्लेभसँग मिलेर अभिव्यक्तिपरक र कथ्य रूपका धारणाका साथै प्रकार्यका धारणाको पनि व्याख्या गरे। यिनी भाषाका सिद्धान्तलाई मानविकीका अन्य विषयमा पनि लागु गर्न सकियोस् भन्ने उद्देश्यसाथ काम गर्न चाहन्थे।

**ग्लासिम विज्ञानका मूलभूत अवधारणाहरू**

**१. ग्लासिम**

ग्रिक भाषाको gloss (ग्लास) बाट ग्लासिम शब्द बनेको हो। ग्रिक भाषामा ग्लासको अर्थ 'भाषा' हो। यसर्थ ग्रिकको ग्लासिम (glassem) लाई नेपालीमा 'भाषिम' वा 'भाषिक' भन्न सकिन्छ। यस सम्प्रदायका अनुसार 'ग्लासिम भनेको सिद्धान्तद्वारा निर्धारित न्यूनतम भाषाका लघुतम अपरिवर्त्य रूप हो।' यसरी हेर्दा भाषाका अपरिवर्त्य एकाइलाई ग्लासिम भनिन्छ। ग्लासिम विज्ञानले भाषिक विश्लेषणका निम्ति व्याख्याको मूल आधार यसैलाई बनाएको छ।

**२. कथ्य र अभिव्यक्ति (Content and expression)**

ससुरले जस्तै येल्मस्लेभले पनि भाषालाई कथ्य र अभिव्यक्तिको मेलबाट बन्ने सङ्केतहरूको व्यवस्था मानेका छन्। तर ससुर र यिनको भनाइ र व्याख्यामा भिन्नता छ। भाषामा कथ्य भनेको अर्थ हो। यसैगरी अभिव्यक्ति भनेको उच्चरित ध्वनिहरूको रूप हो। यिनै कथ्य र अभिव्यक्तिको संयोगबाट हुने सङ्केत नै भाषा हो। भाषाका यस्ता कथ्य र अभिव्यक्तिलाई अझ सूक्ष्म रूपमा व्यक्त गरेर येल्मस्लेभले अझै स-साना भेद गरेका छन्:



यल्मस्लेभका अनुसार कथ्य भनेको अर्थ हो। यसमा कथ्य पदार्थ र कथ्य रूप हुने गर्छन्। कथ्य पदार्थ भनेको वास्तविक वस्तु वा अर्थ हो, जुन भाषा निरपेक्ष हुन्छ। कथ्य रूप भनेको कथ्य पदार्थलाई बुझाउने भाषिक रूप हो, जुन भाषा सापेक्ष हुन्छ। अभिव्यक्तिका पनि पदार्थ र रूप हुने गर्छन्। अभिव्यक्ति पदार्थ भाषा निरपेक्ष हुन्छ र अभिव्यक्ति रूप भाषा सापेक्ष हुन्छ।

### ३. प्रकार्य (Function)

येल्मस्लेभले प्रकार्यलाई बेग्लै तरिकाले वर्णन गरेका छन्। तर्कशास्त्र र गणितका अर्थमा प्रकार्यको विश्लेषण गरेका छन्। उनका अनुसार दुई भाषिक एकाइहरूको पारस्पारिक निर्भरता प्रकार्य हो। कुनै दुई भाषिक एकाइहरूलाई प्रकार्यक भनिन्छ र तिनीहरूका बिचको निर्भरतालाई प्रकार्य भनिन्छ। प्रकार्य तिन प्रकारका हुन्छन् :

(१) अन्तर्निर्भता (Inter-dependence) – दुवै प्रकार्य अचल रहने।
(२) एकनिर्भरता (Deterniratta) –एक चल र एक अचल हुने।
(३) अनिर्भरता (Constellation) – दुवै चल हुने।

### ४. अधिभाषा (metalanguage)

येल्मस्लेभले अधिभाषाका बारेमा चर्चा गरेका छन्। उनका भनाइमा अधिभाषा भनेको भाषाका विषयमा छलफल, चर्चा, चिन्तन, विश्लेषण गर्दा प्रयोग गरिने भाषा हो। भाषाशास्त्रीहरूद्वारा प्रयोग गरिने भाषा अधिभाषा हो। भाषालाई व्यक्त गर्ने भाषा नै अधिभाषा हो। अधिभाषाको वैज्ञानिक अध्ययन गर्ने विषय अधिभाषाविज्ञान (metalanguistics) हो। अधिभाषा सामान्य भाषाभन्दा भिन्न हुन्छ। ग्लासिमविज्ञानमा अधिभाषाबारे चर्चा गरिएको छ। तर यस सिद्धान्तको पूर्ण व्याख्या भने भएको छैन।

निष्कर्षमा ग्लासिमविज्ञानका आफ्ना अवधारणाहरू भए तापनि यी अवधारणाहरूको पूर्ण र सूक्ष्मबाट व्याख्या नभएकाले यो मान्यता त्यति स्थापित हुन नसकेको देखिन्छ।

## २.१.२.६ प्राग सम्प्रदाय

चेकोस्लाभाकियाको राजधानी प्राग (स्थानीय भाषामा प्राहा) लाई केन्द्रबिन्दु बनाई भाषिक अध्ययनमा लागेका विद्वान्हरूको समूहलाई प्राग सम्प्रदाय भनिन्छ। सन् १९२६ अक्टोबर ६ मा 'प्राग भाषिक मण्डल' (Circle Linguique de prague) को स्थापना भएपछि यस सम्प्रदायको औपचारिक जन्म भएको हो। यसका संस्थापकहरू भी. मेथेसिस (V. mathesius), रोमन याकोब्सन (Romen jakobson) तथा एस.एन. त्रुबेत्स्कोय (S.N. Trubetzkoy) आदि हुन्। यस मण्डलका अध्यक्ष प्राग विश्वविद्यालयका अङ्ग्रेजी भाषाका प्राध्यापक मेथेसिस थिए। उनले सन् १९०९ म प्रागको केरोलिन विश्वविद्यालयमा प्राध्यापन सुरु गरी

१९१२ सम्म पढाएका थिए। उनले ससुरभन्दा अगाबै भाषाको समकालीन अध्ययनमा जोड दिएका थिए भनिन्छ।

प्राग सम्प्रदायले ध्वनिविज्ञान (phonetics) र वर्णविज्ञान (Phonology) का क्षेत्रमा महत्त्वपूर्ण कार्य गरेको छ। यस क्षेत्रमा निकोलाइ सेर्गेइबिच त्रुबेत्स्कोय ( N.s. Trubetzkoy) को योगदान उल्लेखनीय रहेको छ। मास्कोमा जन्मिएका त्रुबेत्स्कोय रुसी क्रान्तिताका त्यहाँबाट हिंडेर रोस्तोम, सोफिया र भियानामा स्लामिक भाषाविज्ञानको प्राध्यापन गरे। नाजी आक्रमणबाट प्रभावित यिनी छोटो उमेरमै मरे। अर्का विद्वान् याकोब्सन मास्को र प्रागमा शिक्षा लिएर सन् १९२६ प्राग भाषिक मण्डलका उपाध्यक्ष बने। दोस्रो विश्वयुद्ध ताका प्राग छाड्न बाध्य भई अमेरिकामा गए। अमेरिकाको हावर्ड विश्वविद्यालयमा अध्ययनरत रहँदा मास्को-प्राग हुँदै आर्जन गरेको भाषिक ज्ञान (काव्यभाषा विश्लेषण, बालभाषा, बलाघात, ध्वनिविज्ञान, ध्वनिपरिवर्तन, भाषिक प्रकार्य तथा भाषा विकास आदि) का कारण संसारकै प्रसिद्ध भाषाशास्त्रीका रूपमा स्थापित हुन पुगे।

**प्राग सम्प्रदायका मूलभूत मान्यता**

प्राग सम्प्रदायका मुख्य मान्यता निम्नानुसार छन् :

१. **भाषा एक व्यवस्था हो** : यस व्यवस्थाभित्र अरु गौण व्यवस्था पनि रहन्छन्। तसर्थ भाषा व्यवस्थाहरूको पनि व्यवस्था (system of systems) हो।
भाषामा प्रमुख व्यवस्था र गौण व्यवस्था गरी दुई व्यवस्था हुन्छन्। यस अनुसार ध्वनि, वर्ण, रूप, शब्द, वाक्य आदि परिधीयी गौण व्यवस्था हुन् र गौणव्यवस्थाको समष्टि व्यवस्था केन्द्रीय व्यवस्था हो।

२. **भाषाको समकालीन स्वरूपको अध्ययन हुनुपर्दछ :** समकालीन अध्ययन, गतिशील अध्ययन हो। यसबाट भाषिक नियमको दिशा पत्ता लाग्छ र पुराना तथा नयाँ भाषाको तुलनाबाट भाषिक पुनर्निर्माण गर्न सकिन्छ।

३. **प्रकार्यवादी सम्प्रदाय :** भाषा कुनै प्रकार्यका निम्ति प्रयोग हुन्छ भन्ने यस सम्प्रदायको धारणा रहेकाले प्राग सम्प्रदायलाई प्रकार्यवादी सम्प्रदाय पनि भनिन्छ। यस सम्प्रदायले भाषाका ४ वटा प्रकार्य मानेको छ :
   (क) सम्प्रेषणात्मक प्रकार्य (Communicative function) : विचार विनिमयको काम।
   (ख) अभिव्यक्ति प्रकार्य (Expressive function) : यसबाट वक्ताले आफूलाई प्रकट गर्छ, शैली छुटिन्छ।
   (ग) प्रभावपरक प्रकार्य (Conative function) : स्रोतालाई प्रभावित गर्ने, भाषण, दर्शन... आदि।
   (घ) समष्टि प्रकार्य : प्रकार्यहरूको संरचनाको प्रकार्य (function of the structure of function)। माथि उल्लिखित ३ वटै प्रकार्यको समष्टि। प्रकार्यको पनि प्रकार्य भन्ने अर्थमा।

४. **मानक भाषासम्बन्धी मान्यता :** प्राग सम्प्रदायले मानक भाषाको अवधारणा अगाडि सारेको छ। बढी स्थिर भाषा मानक भाषा हो। हामीले भन्ने गरेको भाषाको स्तरीय रूप नै मानक भाषा हो। मैथोसिसले सन् १९३२ मै मानक भाषाको अवधारणा अगाडि सारे र मानक भाषाका निम्न लिखित ४ वटा प्रकार्य बताए :

(१) दैनिक व्यवहारको सम्प्रेषण गर्नु।
(२) प्रायोजिक र प्राविधिक पक्षको सम्प्रेषण गर्नु।
(३) सैद्धान्तिक पक्षको सम्प्रेषण गर्नु।
(४) साहित्यिक पक्षको सम्प्रेषण गर्नु।

५. **काव्य भाषा सम्बन्धी मान्यता :** काव्य भाषा सामान्य भाषा भन्दा भिन्न र विशिष्ट हुन्छन्, त्यसैले यसलाई सामान्य भाषाविज्ञानका सिद्धान्तबाट अध्ययन गर्न सकिँदैन भन्ने यस सम्प्रदायको मान्यता रहेको छ। यस सम्बन्धमा याकोब्सनको प्रमुख भुमिका रहेको छ।

६. **ध्वनिविज्ञान र वर्णविज्ञान बेग्लाबेग्लै छन् :** यस सम्प्रदायले ध्वनिविज्ञान र वर्णविज्ञानलाई अलग अलग विज्ञान मानेको छ।

**प्राग सम्प्रदायका प्रमुख कार्य**

प्राग सम्प्रदायका प्रमुख कार्यलाई तलका बुँदामा चर्चा गरिएको छ :

१. **ध्वनिविज्ञान र वर्णविज्ञानका सम्बन्धमा**

**(क) वर्ण सम्बन्धी निरन्तर अध्ययन :**

प्राग सम्प्रदायले ध्वनिविज्ञान र वर्णविज्ञान सम्बन्धी छुट्टै सैद्धान्तिक मान्यता अगाडि ल्यायो। ध्वनिविज्ञान र वर्णविज्ञान अलग–अलग हुन् भन्ने मान्यता को स्थापना यस सम्प्रदायको महत्त्वपूर्ण कार्य हो। यस सम्प्रदायका अनुसार ध्वनिविज्ञानले सामान्य वा सार्वभौम रूपमा ध्वनिको उच्चारण, स्वरूप र भेदहरूको अध्ययन गर्दछ। ध्वनिविज्ञान प्राकृतिक विज्ञान हो र यो भाषाविज्ञानका निम्ति गौण विषय हो, तर वर्णविज्ञान भाषाविज्ञानको केन्द्रीय विषय हो र यो सामाजिक विज्ञान हो।

प्राग सम्प्रदायमा वर्णसम्बन्धी धारणालाई निरन्तर विकसित गरिएको छ : सन् १९२९मा वर्णलाई सरलतम ध्वनिक (Acoustic) तथा गतिक (Motor) बिम्ब मानियो, सन् १९३१ मा त्यसभन्दा सानो र सरल एकाइमा विभक्ति गर्न नसकिने ध्वनि एकाइ वर्ण हो भन्ने अवधारणाको विकास भयो। सन् १९३२ मा विश्वकोशमा समाविष्ट याकोब्सनको लेखमा वर्णलाई ध्वनि ग्रामहरूको समष्टि मानिएको थियो। सन् १९३६ मा वर्णलाई विभाज्य मानिएको छ र १९३८ मा विभेदक अभिलक्षणको मान्यता अगाडि सारियो। १९४० मा याकोब्सन अमेरिका गएपछि विभेदक अभिलक्षणको मान्यता स्थापित हुन पुग्यो। निष्कर्षमा हेर्दा प्राग सम्प्रदायका अनुसार वर्ण

भनेका भाषाका लघुतम प्रभेदक ध्वन्यात्मक एकाइ हुन्। यिनीहरू विभाज्य र अर्थ भेदक हुन्छन्।

(ख) **वर्णभेद :**

प्राग सम्प्रदायले भाषामा वर्णको प्रतिनिधित्व गर्ने ध्वनिलाई त्यसको वार्णिक भेद (phonemic variant) भनेको छ। यो दुई प्रकारको छ : (क) मुख्य : वरिपरिका वर्णहरूमा कम निर्भर (ख) संयोगी : वरिपरिका वर्णहरूमा बढी निर्भर

यस सम्प्रदायले शैलीगत वार्णिक भेद (stylistic phonemic variant) का विषयमा पनि चर्चा गरेको छ। यसका पनि वैयक्तिक र क्षेत्रीय भेदहरू छुट्ट्याइएको छ। भाषाका ध्वनिहरूलाई जोडा शब्दहरूमा राखेर यउटै मात्र ध्वनिले अर्थ भेद भएमा त्यसलाई अर्थभेदक मानिन्छ।

यस सम्प्रदायले सह-सम्बन्धक चिह्नका आधारमा पनि वर्णका भेदहरू देखाएको छ। कुनै वर्णमा कुनै अभिलक्षण हुनु वा नहुनु सह-सम्बन्ध चिह्न हो । यस अनुसार त्यो निश्चित अभिलक्षण भएको वर्ण चिन्हित वर्ण (marked phonem) र नभएको वर्ण वा चिन्हित सदस्य (marked member) मानिएको छ।

(ग) **विभेदक अभिलक्षण :**

प्राग सम्प्रदायको महत्त्वपूर्ण अवधारणा विभेदक अभिलक्षण पनि हो । यो एउटा वर्णबाट अर्को वर्णलाई छुट्याउने ध्वनि गुण हो । यस मान्यतालाई स्थापित गर्ने विद्वान् रोमन याकोब्सन हुन् । यिनले वर्णलाई विभेदक अभिलक्षणका समूह भनेका छन्। जस्तै : नेपालीका 'क' र 'ख' वर्णमा यस्ता अभिलक्षण हेरेर यी वर्णका बिचको विभेद पत्ता लगाउन सक्छौं

-क - कण्ठ्य, स्पर्शी, अघोष, अल्पप्राण

ख - कण्ठ्य, स्पर्शी, अघोष, महाप्राण

यहाँ 'क' बाट 'ख' लाई छुट्याउने विभेदक अभिलक्षण महाप्राण हो। यसर्थ विभेदक अभिलक्षण भनेको यस्तै कण्ठ्य, स्पर्शी, अघोष जस्ता ध्वनिगुणहरूको उपस्थिति वा अनुपस्थिति हो।

विभेदक अभिलक्षणको मुख्य आधार द्विचर विभेद (Binary features) हो । यसलाई द्विचर विरोध (Binary opposition), द्विचरता (Binaris) पनि भनिन्छ । यस्ता लक्षण संसारका हरेक भाषामा धेरथोर पाइन्छन् । त्यसैले विभेदक अभिलक्षणलाई भाषाका सार्वभौम विशेषता भनिन्छ। यो भाषाविशेषमा धेरथोर भए पनि मुख्य मुख्य अभिलक्षण हुन्छ। यसका व्याख्यता रोमन याकोब्सनले श्रव्यता (sonoritg) र तानता ( tonality) का आधारमा ध्वनिहरूका अभिलक्षणलाई छुट्याएका छन्। याकोब्सनका अनुसार विभेदक अभिलक्षण जम्मा १२ वटा छन् जसमध्ये नौ श्रव्यता र तिन तानता अभिलक्षण अन्तर्गत पर्दछन् :

(अ) **श्रव्यता (sonority)का आधारमा**

उच्चारणमा लाग्ने समयको मात्र र शक्तिसँग सम्बन्धित विभेदक अभिलक्षण। यस अन्तर्गत :

(१) स्वरात्मक (घोष, स्वर) / अस्वरात्मक (अघोष, व्यञ्जन) (vocalic/Non-vocalic)

(२) व्यञ्जनात्मक / अव्यञ्जनात्मक (consonantal/Non-consnantal)

(३) संहत (कोमल, बन्द) / असंहत (खुल्ला दन्त्य, वर्त्स्य, ओष्ठ्य) (compact/diffused)

(४) घोष/अघोष (Voiced/voiceless)

(५) दृढ/शिथिल (Tense/lax)

(६) नासिक्य/मौलिक (nelal/oral)

(७) अप्रवाही/प्रवाही (Discontinuent/continuent)

(८) कठोर /मृदु (strident/mellow)

(९) रुद्ध/अरुद्ध (checked/uncbecked)

(आ) **अनुतानका आधारमा**

(१०) अतीव्र/ तीव्र (Hrave/acute)

(११) सङ्कीर्ण/असङ्कीर्ण (flat/plane)

(१२) तीक्ष्ण/अतीक्ष्ण (sharp/plain)

**२. रूपध्वनि विज्ञान र रूपविज्ञानका क्षेत्रमा**

प्राग सम्प्रदायले रूपध्वनिविज्ञानको र रूपविज्ञानको क्षेत्रमा उल्लेख चर्चा गरेको छ। यस सम्प्रदायले ध्वनि र रूपका बिचको एउटा उप तह देखायो र यस तहको नाम रूपध्वनि राख्यो। यस सम्प्रदायका त्रुबोत्स्कोयले रूपध्वनिविज्ञान शब्दको प्रयोग गरे। उनका अनुसार रूपध्वनि भनेको कुनै एउटै रूपिम वा रूपमा रूपीय संरचनाको स्थिति अनुसार एकअर्काका स्थानमा आउन सक्ने दुई वा दुईभन्दा बढी वर्णहरूको समुच्चय हो। रूपध्वनिलाई वर्तमान सन्दर्भको संरूपसँग झन्डै तुलना गर्न सकिन्छ। जस्तै 'दुई' रूपबाट बनेका 'दोटा' र 'दुइटा' शब्दमा दुईका सट्टा प्रयोग भएका 'दुई' र 'दो' उपरूप हुन्। यिनीहरू रूपध्वनि हुन्। यस्ता रूपध्वनिहरूको अध्ययन गर्ने विज्ञानलाई रूपध्वनि विज्ञान भनिन्छ।

यस सम्प्रदायले रूपविज्ञानका क्षेत्रमा पनि महत्त्वपूर्ण मान्यताहरू ल्याएको छ। ध्वनिविज्ञानमा जस्तै रूपविज्ञानमा पनि सहसम्बन्धात्मक चिह्नको आधारमा रूप छुट्याउन सकिने यस सम्प्रदायको मान्यता छ। जस्तै 'कुकुर' र 'कुकुर्नी' दुई रूपमध्ये सह–सम्बन्धात्मक चिह्नका आधारमा चिन्हित रूप कुकुर्नी हो। यसमा 'नि' रूपतत्त्व जोडिएर स्त्रीलिङ्गी बुझाउने चिह्नको काम गरेको छ। यस अवधारणा अनुसार क्रियाका रूपहरूमा चिन्हित र अचिन्हित भेद छुट्याएर याकोब्सनले एसियाली भाषाको अध्ययन गरेका छन्।

प्राग सम्प्रदायका स्कलिच्काले संरचनात्मक रूपविज्ञानको अध्ययन गरेका छन्। उनले भाषामा अर्थको लघुतम एकाइलाई सिम (seme) भनेका छन्। र यस्ता सिमको अभिव्यक्ति रूपहरूबाट हुन्छ भनेका छन्। यस अनुसार उनले योगात्मक (agglutinative) र विभक्तिप्रधान (Inflctional) गरी दुईथरी भाषाको चर्चा गरेका छन्। योगात्मक भाषामा प्रत्येक रूपले एउटै आर्थी एकाइका रूपमा सिमलाई व्यक्त गर्छ र विभक्तिप्रधानभाषामा एउटा रूपबाट एकभन्दा बढी आर्थी एकाइको अभिव्यक्ति हुन्छ। धेरैजसो भाषामा यी दुवैथरी प्रवृत्ति पाइन्छन् तर कतिपय भाषामा एकथरी प्रवृत्तिमात्र पाइन्छ।

यस सम्प्रदायले रूपतात्विक अभिव्यञ्जनाका बारेमा (क) ध्वनितात्विक, (ख) संयोगात्मक, (ग) वियोगात्मक र (घ) समस्त रूप को चर्चा गरेका छन्।

**३. वाक्यविज्ञानका क्षेत्रमा**

वाक्यविज्ञानका क्षेत्रमा पनि यस सम्प्रदायले केही मौलिक काम गरेको छ। यस सम्प्रदायले प्रकार्यपरक ढङ्गले वाक्यको अध्ययनमा जोड दिएका छन्। यस सम्प्रदायका विद्वान्ले थिम (theme) र रिम (rheme) गरी वाक्यका दुई भाग हुने कुरा बताएका छन्। नेपालीमा यसलाई क्रमशः **अक्षक** र **वर्तक** भन्न सकिन्छ। यसैलाई पछि अमेरिकाली भाषाशास्त्रीहरूले क्रमशः **शीर्ष** र **टिप्पणी** (Topic/comment) भनेका छन्। यसमा थिम भनेको वाक्यमा आएको पूर्वसन्दर्भ वा पूर्वज्ञाता भाग हो। यो वाक्यको सुरुमा आउँछ। रिम भनेको वाक्यले भनेको नयाँ कुरा हो। सामान्यतया वाक्यको उद्देश्य थिम र अन्य पद-पदावली रिम हो। तर असामान्य संरचनामा वाक्यको उद्देश्य मात्र थिम बन्छ भन्न सकिँदैन, जस्तै :

**हरि** घर गयो। (हरि थिम)

**घर** गयो हरि। (घर थिम)

**चाँडो** आऊ है साथी। (चाँडै थिम)

(नोट : वाक्यविज्ञानका यस धारणालाई मेथेसिस ले चर्चा गरेका छन्।)

## ३.१.२ अमेरिकाली संरचनावाद

युरोपमा जन्मेर फैलिएको संरचनावाद पछि अमेरिकामा पुगेर उत्कर्षता पायो। आज संरचनावादका जे-जस्ता मूलभूत मान्यता स्थापित भएका छन्, तिनको पूर्णता अमेरिकामा भएको हो। अमेरिकाली संरचनावादका प्रमुख भाषाशास्त्री ब्लुमफिल्ड हुन्। यसैले ब्लुमफिल्डलाई केन्द्रबिन्दु बनाएर अमेरिकामा विकास भएको संरचनावादी भाषाविज्ञानको अध्ययन परम्परालाई निम्न लिखित तिन कालखण्डमा विभाजन गर्न सकिन्छ :

(क) ब्लुमफिल्डपूर्व काल

(ख) ब्लुमफिल्ड काल र

(ग) ब्लुमफिल्डउत्तर काल

### ३.१.२.१ ब्लुमफिल्डपूर्व काल

ब्लुमफिल्डभन्दा अगाडि फ्रान्ज बोआज (F.boas) र सपिर (Edward sapir) ले अमेरिकाली संरचनावादमा महत्त्वपूर्ण कार्य गरेका छन्। ससुरका प्रभावमा संरचनावादी भाषाको अध्ययनमा लागेका यी दुवै विद्वान्का कार्य ब्लुमफिल्डका कार्यको आधार मानिन्छ।

जर्मनीमा जन्मिएका बोआजले जर्मनीमै अध्ययन गरेका थिए। भौतिकशास्त्र, भूगोल र मनोविज्ञानका विषयमा अध्ययन गरेका बोआज पछि भाषाको अध्ययनतर्फ तानिए। भाषाका विषयमा औपचारिक अध्ययन नगरेका र स्वाध्यायनबाट भाषाको ज्ञान लिएका बोआजले अमेरिकामा गएपछि (सन् १८८६) लामो समयसम्म इन्डियन मूलका अमेरिकीहरूको संस्कृतको अध्ययन गरे। यही क्रममा उनले भाषाका विषयमा गहन अध्ययन गरे। उनले थुप्रै लेख लेखे, पत्रिका निकाले। सन् १९११ मा प्रकाशित उनको 'अ ह्यान्डबुक अफ अमेरिकन इन्डिएन ल्याङ्गुएजेज' (AHandbook of American Indian language) लेख महत्त्वपूर्ण मानिन्छ। जुन ससुरको कृति प्रकाशित हुनु अघि नै प्रकाशित भइसकेको थियो।

बोआजका लेख, पुस्तकहरू र उनले सम्पादन गरेका 'अमेरिकाली भाषाविज्ञानको अन्तर्राष्ट्रिय पत्रिका' (सन् १९१७ मा) आदिमा उनका भाषासम्बन्धी मान्यता प्रकाशित छन्। उनले हरेक भाषाका ध्वनि, व्याकरण, र अर्थको आफ्नै अभिरचना हुने हुँदा अरु भाषाको आधार, अध्ययन र प्रभाव बिनै कुनै पनि भाषाको वस्तुपरक अध्ययन गर्नु पर्दछ र त्यस भाषाको संरचनाका नियमहरू आगमनात्मक पद्धतिबाट खोज्नुपर्दछ भन्ने कुरामा जोड दिए।

सपिर र बोआजका चेला एडवर्ड जर्मनीमा जन्मिएका हुन्। उनी पाँच वर्षका हुँदा परिवारसहित अमेरिका बसाइँ सरे। उनले कोलम्बिया विश्वविद्यालयबाट जर्मन भाषा र साहित्यमा उच्च अध्ययन गरे। बोआजसँग भेट भएपछि उनी भाषाका अध्ययनमा लागे। पछि यनी क्यालिफोर्निया तथा पेन्सल्वानिया विश्वविद्यालयमा मानव विज्ञान विषयमा काम गर्न थाले। यसैक्रममा उनले भारोपेली, सामी, चिनियाँ, अमेरिकाली, भारतीय आदि भाषाको अध्ययन गरे। भाषालाई मानवशास्त्रीय दृष्टिले अध्ययन गर्ने सपिर भाषालाई सामाजिक सत्यको निर्देशिका (A guide to social reality) मान्दथे। उनले भाषाको अर्थ, ध्वनि, वर्ण, व्याकरण तथा भाषाका विशेषताहरूका बारेमा प्रशस्त चर्चा गरेका छन्। उनका मान्यताहरू उनका उत्तरवर्ती ब्लुमफिल्ड र रूपान्तरण सिद्धान्तका प्रतिपादक चमस्की आदिको अध्ययनका पृष्ठभूमि मानिन्छन्। उनको language: An introduction to the study of spee in (१९२१) महत्त्वपूर्ण कृति हो।

सपिरले भाषिक सामग्रीलाई वार्णिक आलेखनमा लेख्न सकिने धारणा प्रस्तुत गरेका थिए। यो धारणा अमेरिकी संरचनावादका अनुयायीहरूका लागि प्रेरक मानिन्छ।

### ३.१.२.१ ब्लुमफिल्ड काल

ब्लुमफिल्ड अमेरिकाली संरचनावादका केन्द्रीय प्रतिभा हुन् । त्यसैले ब्लुमफिल्ड र उनका अनुयायीहरूको समूहलाई कतिपयले ब्लुमफिल्ड सम्प्रदाय पनि भनेका छन् । अमेरिकाको सिकागो सहरमा जन्मिएका उनी जर्मनीमा गई अध्ययन गरेका यिनले ऐतिहासिक र तुलनात्मक भाषाविज्ञानको प्रशिक्षण पाएका थिए । तर पछि यिनी समकालीन भाषा विज्ञानमा केन्द्रित भए । पढाइमा सामान्य उनी कतिपटक अनुत्तीर्ण पनि भएका थिए । स्नातक तहको अध्ययनका क्रममा यिनको भेट इ. प्रोकोस (E.prokosch) सँग भयो । जर्मन भाषाका प्राध्यापक प्रोकोसका प्रभावमा ब्लुमफिल्ड भाषाको अध्ययनमा तानिए र सन् १९०९ मा A semasiologic differentation in Germanic secondary ablaut विषयमा विद्यावरिधि हासिल गरे । यिनले भाषिक अध्ययनको आधार कथ्य भाषालाई बनाउन पर्ने कुरामा जोड दिए । यिनका कृतिहरू मध्ये भाषा (language) संरचनावादको सर्वाधिक महत्त्वपूर्ण कृति हो । यो पुस्तक संरचनवादको आधारग्रन्थ पनि हो ।

ब्लुमफिल्डको अध्ययनलाई ३ प्रकारमा हेर्न सकिन्छ –

१. सैद्धान्तिक लेखन – यस अन्तर्गत उनका ३ वटा पुस्तक र आधा दर्जन जति लेख प्रकाशित छन् :

**पुस्तकहरू**

(१) एन इन्टरड्क्सन टु द स्टडी अफ ल्याङ्गुइज (१९१४) (An introduction to the study of language)

(२) ल्याङ्गुइज (१९३३) (language)

(३) आउट लाइन गाइड फर द प्राक्टिकल स्टडी अफ फरेन ल्याङ्गुइज (outline guide for the practical study foreign langauge...)

**लेखहरू**

- सेन्टेन्स अफ द बोड (sentence of the word-1914)
- subject and predicate (1916)
- uyuestic aspects of science (1939)
- pnilogophical aspects of langues (1942) आदि ।

यिनले भाषाशिक्षणका दृष्टिले लेखेका जर्मन, डच, रुसि आदि विविध भाषाका पाठ्यपुस्तकहरू प्रकाशित छन् । यिनको पिएच्. डि. ग्रन्थ ऐतिहासिक भाषाविज्ञानका दृष्टिले महत्त्वपूर्ण मानिन्छ । ब्लुमफिल्डले ३५ भन्दा बढी ग्रन्थहरूको पुस्तक समीक्षा लेखेका छन् । यी समीक्षाले पनि यिनको भाषिक चिन्तनको मान्यता र योगदान स्पष्ट हुन्छ ।

ब्लुमफिल्डको भाषिक चिन्तनका मान्यता र योगदानलाई विभिन्न बुँदामा उल्लेख गर्न सकिन्छ :

१. यिनको भाषाविज्ञान व्यवहारवादी मनोविज्ञानमा आधारित छ । व्यवहारवादी मनोविज्ञानको उद्दीपन-प्रतिक्रिया बाट सिकाइ बन्छ भन्ने (Stimullas-response) मान्यतालाई यिनले भाषाका सन्दर्भमा हेरेका छन् ।

२. यिनले वर्णलाई व्यतिरेक ध्वनिलक्षणहरूको लघुतम एकाइ मानेका छन् । यिनले स्वर र व्यञ्जनलाई वर्णका मूल भेद र मात्रा, अनुनासिकता आदिलाई गौण भेद भनेका छन् । यस्ता गौण वर्ण अविभाज्य वा खण्डेतर वर्ण हुन् ।

३. यिनले रूपविज्ञान र शब्दविज्ञानका क्षेत्रमा पनि आफ्ना मान्यता प्रस्तुत गरेका छन् । उनी लघुतम मुक्त रूपलाई शब्द मान्छन् । शब्दसम्बन्धी यनको परिभाषाले वार्णिक शब्दलाई बुझाउँछ, व्याकरणिक शब्दलाई बुझाउँदैन । उनले मुक्तरूप र बद्धरूपको धारणा पनि प्रस्तुत गरेका छन् ।

४. उनले शब्दलाई प्राथमिक र द्वितीयक गरी वर्गीकरण गरेका छन् :

(अ) **प्राथमिक शब्द** : एकभन्दा बढी बद्धरूप वा एउटा मुक्त रूप रहेको शब्द– यसका पनि २ भेद छन् :

(क) मूल शब्द : मुक्त रूप हुने, जस्तै : घर, आगो ।

(ख) यौगिक : एकभन्दा बढी बद्ध रूप हुने शब्द, जस्तै : अधि+कार = अधिकार

(आ) **द्वितीयक शब्द** : मुक्त रूप र बद्धरूप मिलेर बनेको शब्द । यसका पनि दुई वटा भेद छन् : (क) **समस्त शब्द** : एकभन्दा बढी मुक्त रूप– जेठोबाठो (ख) **व्युत्पन्न** : अज्ञानता, विदेशी ।

४. ब्लुमफिल्डले रूपहरूको सार्थक व्यवस्थालाई व्याकरण मानेका छन् । व्याकरणिक व्यवस्थालाई यिनले पदिम (taxeme) भनेका छन् । वर्णद्वारा रूपिम बनेझैँ पदिमद्वारा व्याकरण बन्दछ । अर्थात् व्याकरणको लघुतम एकाइ पदिम हो भन्ने उनको मान्यता रहेको छ । उनका अनुसार वाक्य भाषाको सबै भन्दा ठुलो एकाइ हो ।

५. ब्लुमफिल्डले वाक्यविशेषणको मूल आधारका रूपमा निकटघटक विश्लेषणको मान्यता अगाडि सारेका छन् । निकटघटक विश्लेषणका निम्ति उनले प्रस्तुत गरेको वाक्य हो : Poor John ran away. यसलाई उनले निम्न अनुसार विश्लेषण गरेका छन् :




यहाँ द्विचर विश्लेषणका आधारमा टुक्रयाउँदै रूपका तहमा पुगेर विश्लेषणलाई टुङ्ग्याइएको छ । वाक्य विश्लेषणको यो पद्धति नै निकट घटकहरूको

विश्लेषण पद्धति हो । यस पद्धतिका आधारमा हेर्दा वाक्यभित्रमा पदावलीको रचना दुई प्रकारमा बाँडिन्छ :

१. अन्तः केन्द्रित रचना (Indra centric)

२. बहिः केन्द्रित (Esodra centnic)

**अन्तः केन्द्रित :** रचनाका केन्द्रमा वा घटकहरूको केन्द्रबिन्दुका रूपमा वा एउटा घटकको अर्थभित्र अर्को घटकको अर्थ छ भने त्यो अन्तः केन्द्रित हो। जस्तै : 'रामको भाइ' पदावलीमा 'भाइ' घटक रामको अर्थमा केन्द्रित छ।

**बहिःकेन्द्रित :** घटकहरू बिचमा एउटा घटकभित्र अरु घटकको अर्थ समेटिंदैन वा निहित हुँदैन भने त्यो रचना बहिः केन्द्रित हो। जस्तै : ऊ **घरबाहिर** गयो।

यहाँ 'घर' र 'बाहिर' दुईको अर्कोको अर्थ आफूभित्र समेटिंदैनन्। यस्ता घटक बहिःकेन्द्रित हुन्।

### ३.१.२.३ ब्लुमफिल्डोत्तर काल

ब्लुमफिल्डोत्तर कालभन्दा पछिको अमेरिकाली संरचनावादलाई ब्लुमफिल्डोत्तर काल भनिन्छ। ह्यारिस (Z.s Harris), हकेट (c.f. Hockett), पाइक (K.l. Pike), स्वदिस (M.Swadesh), नाइडा (E.A. Nida), ब्लाक (B. Block), ट्रेगर (G.L. Trager), हल (R.A. hall), हिल (A.A. Hill), ल्याब (Lamb), बेल्स, फ्रिज, ग्लिसन, लाङ्गेकर आदि भाषाशास्त्रीहरू यस कालका प्रमुख भाषाशास्त्रीहरू हुन्। यस कालको अमेरिकाली संरचनावादका तिन प्रमुख शाखा रहेका छन्।

१. **रूपवादी शाखा**

अर्थको बेवास्ता गर्ने र बाह्य रूपलाई महत्त्व दिने र भाषिक तहहरूको छुट्टाछुट्टै विवेचना गर्ने शाखा रूपवादी शाखा हो। यस शाखामा ह्यारिस, हकेट र फ्रिज जस्ता भाषाशास्त्री पर्दछन्।

२. **रूपार्थवादी शाखा**

यस वर्गमा रूप र अर्थ दुवैलाई महत्त्व दिने र विश्लेषणका क्रममा भाषिक तत्त्वहरू अलग-अलग गरे पनि तिनको मिश्रणलाई पनि मान्ने गरिन्छ। यस शाखामा मुख्यतः पाइक र लङगेकर भाषाशास्त्री पर्दछन्।

३. **स्तरीकरणवादी शाखा**

भाषाका विभिन्न स्तरलाई मान्ने स्तरीकरणवादी शाखा हो। यस शाखामा ल्याम्ब, ग्लिसन, लकबुड जस्ता भाषाशास्त्री पर्दछन्। यसले अर्थ, कोश, रूप, वर्णजस्ता विभिन्न स्तरमा भाषाको वर्गीकरण गर्दछ।

यी शाखामध्ये संरचनावादको आधारभूत विशेषता रूपवादी शाखासँग मिल्ने भएकाले यस शाखाका कार्य मात्र यस सन्दर्भमा चर्चा गरिन्छ। अमेरिकाली संरचनावादको यस कालमा ह्यारिस र हकेटको योगदान महत्त्वपूर्ण भएकाले यिनीहरूका बारेमा चर्चा गर्नु उपयुक्त हुन्छ।

(क) ह्यारिस

ब्लुमफिल्डोत्तर अमेरिकाली संरचनावादका एक सशक्त भाषाशास्त्री ह्यारिस हुन्। यिनी अमेरिकाली संरचनावादका चरमबिन्दु पनि हुन्। यिनले अर्थलाई आधार नलिई वर्गीकरण र वितरणका आधारमा वर्ण र रूपको विश्लेषण गर्नुपर्ने मान्यता अगाडि सारेका छन्। यिनले परम्परागत वर्गीकरणात्मक विश्लेषण (Taxonomic analysis) का आफ्नौ सीमा हुने हुँदा यसले भाषाको पूर्णरूपले अध्ययन गर्न सक्तैन भन्दै यसका समस्या छुट्याउन रूपान्तरण पद्धति (Transformation method) को विकास गरे। उनको पुस्तक **मेथोड इन स्ट्रक्चर इन लिङ्ग्विस्टिक** (Methods in structural linguistics) लाई ब्लुमफिल्डोत्तर अमेरिकाली संरचनावादको महत्त्वपूर्ण कृति मानिन्छ। यस कृतिको लेखनमा ह्यारिसका चेला नोम चम्स्कीको समेत सहयोग रहेको बताइन्छ। चम्स्कीको रूपान्तरण व्याकरण ह्यारिसको सो कृतिबाट प्रभावित भएको बताइन्छ। यस कृतिमा उल्लेख गरिएको रूपान्तरण सूत्रलाई लिएर चम्स्कीले रूपान्तरण व्याकरणको धारणा अगाडि सारेको पाइन्छ। ह्यारिसले सन् १९५७ मा प्रस्तुत गरेको वाक्यको बाह्य र आन्तरिक संरचनाको अध्ययनका लागि भनी प्रस्ताव गरेको 'रूपान्तरण नियम' बाट चम्स्की प्रभावित देखिन्छन्। ह्यारिसद्वारा प्रस्तुत भाषाको संरचनात्मक पद्धति संरचनावादी भाषा विज्ञानको पराकाष्ठा मानिन्छ।

(ख) हकेट

ब्लुमफिल्डोत्तरकालको अमेरिकाली संरचनावादको अर्का सशक्त भाषाशास्त्री हकेट हुन्। यिनले भाषाको लिखित वर्ण, रूप र वाक्य गरी तिन तहको विश्लेषणमा जोड दिएका छन्। उनका निम्न लिखित दुई कृति महत्त्वपूर्ण छन् :

१. ए मेनुअल अफ फोनोलोजी (A manual of phonology, १९५५)।
२. ए कोर्स इन मोर्डन लिङ्ग्विस्टिक (A course in modern lingiestic, १९५८)

यी बाहेक यिनले भाषाविज्ञानको गणित र शरीर विज्ञानसँगको सम्बन्ध बारेमा पनि चर्चा गरेका छन्।

ब्लुमफिल्डकै परम्परामै रहेर पनि यिनी भाषाविज्ञानलाई मनोविज्ञानसँग सम्बद्ध मान्दथे। यिनका कतिपय मान्यता ब्लुमफिल्डका मान्यता भन्दा भिन्न पनि छन्। यिनको 'व्याकरणिक मोडेलका दुई ढाँचा' (Two modeles of gremmetical distribution-१९५४) शीर्षक लेखमा ब्लुमफिल्डभन्दा भिन्न धारणा राखेका छन्। यसमा यिनले रूपतात्विक विशेषणका लागि 'एकाइ र विन्यास' तथा 'एकाइ र पद्धति' जस्ता भाषिक विश्लेषणका दुई पद्धति (व्यवस्था) को धारणा अघि सारेका छन्। यिनले भाषालाई निम्नानुसारका पाँचवटा उपव्यवस्थाको अन्तरसम्बन्धमा आधारित एउटा जटिल व्यवस्था भनेका छन् :

१. व्याकरणिक व्यवस्था
२. वार्णिक व्यवस्था

३. रूपध्वन्यात्मक व्यवस्था

४. आर्थी व्यवस्था

५. ध्वनि व्यवस्था

यीमध्ये व्याकरणिक, वार्णिक र रूपध्वन्यात्मक व्यवस्थालाई केन्द्रीय व्यवस्था र आर्थी र ध्वनि व्यवस्थालाई परिधीय व्यवस्था मानेका छन् । यिनले रिक्त रूप, संपृक्त रूप जस्ता रूप सम्बन्धी नयाँ धारणा प्रस्तुत गरेका छन् ।

**रिक्त रूप :** अर्थका स्तरमा नभएर संरचनामा मात्र आउने रूप अङ्ग्रेजीको Children – r । नेपालीको जा+छ बिचमा आउने 'न्' रिक्त रूप हो ।

**संपृक्त रूप :** एकभन्दा बढी रूप वा रूपिममा मिश्रण भएको जसलाई छुट्याउन नमिल्ने रूप, अङ्ग्रेजीको take – took, man – men यहाँ बहुवचनको रूप छुट्याउन सकिँदैन । यस्ता रूप संपृक्त रूप हुन् ।

**अमेरिकाली संरचनावादका आधारभूत मान्यता**

संरचनावादी भाषाविज्ञानीहरूले विशिष्ट ढङ्गले आफ्ना मान्यताहरू भाषाविज्ञानसँग सम्बद्ध गरेर प्रस्तुत गरेका छन् । भाषावैज्ञानिकहरूको व्यक्ति विशेषका मान्यताहरू केही भिन्न जस्ता देखिन्छन् । तर पनि समग्रमा तिनीहरूका मूलभूत मान्यता भने मिल्दो–जुल्दो देखिन्छन् । समग्रमा अमेरिकाली संरचनावादको आधारभूत मान्यतालाई निम्नानुसार बुँदामा हेर्न सकिन्छ :

**१. भाषा एक व्यवस्था हो**

संरचनावादले भाषालाई समाजका मानिसहरूले परम्परामा व्यवहार गर्ने यादृच्छिक वाक्प्रतीकहरूको व्यवस्था मान्दछ । संरचनावादीहरू भाषाविशेषको संरचनागत विशिष्टताको खोजी गर्ने लक्ष्य बनाउँछन् । भाषिक व्यवस्थामा पाइने निजीपनको कुरा सबै संरचनावादीहरूले मानेका छन् र त्यो निजीपनलाई देखाउन व्यतिरेकी पद्धति अँगालेका छन् । कुनै पनि भाषा अर्को भाषा भन्दा भिन्न हुनु व्यतिरेकी हो । संरचनावादले कुनै दुई भाषा एक–अर्कामा भिन्न हुन्छन् भन्ने मान्यता राख्दछ । संरचनावादीहरू भाषिक सार्वभौमिकतालाई स्वीकार्दैनन् । भाषिक विशिष्टताको खोजी गर्दै भाषालाई एक व्याख्याका रूपमा मान्नु संरचनावादको मुख्य मान्यता हो ।

**२. वर्गीकरणप्रधान भाषिक अध्ययन**

संरचनावादीहरू भाषिक विश्लेषण गर्दा सामग्रीको सङ्कलन र वर्गीकरणमा जोड दिन्छन् । उनीहरू सङ्कलित भाषिक सामग्रीहरूलाई अनेक भेद–उपभेदमा वर्गीकरण गरेर वर्णन/विश्लेषण गर्दछन् । अमेरिकाली संरचनावादले भाषिक अध्ययनमा वर्गीकरणलाई जोड दिने हुनाले उनीहरूको अध्ययन पद्धतिलाई वर्गीकरणप्रधान भनिन्छ ।

**३. भाषिक सामग्रीमा विशेष जोड दिनु**

अमेरिकाली संरचनावादले भाषिक वर्णनका निम्ति सूचकबाट प्राप्त सामग्रीमा निर्भर रहनुपर्ने मान्यता राखेको छ । संरचनावादीहरू सामग्रीको सङ्कलन, वर्गीकरण

र तालिकीकरण (पञ्जीकरण) मा जोड दिन्छन् । सामग्री सङ्कलनमा सूचकको सहायता लिने, सामग्रीमा स्थान, काल र व्यक्तिअनुसारको भिन्नता नआयोस् भन्ने कुरामा सचेत रहने, सामग्री बोलचालको भाषाबाट लिने, कथ्य भाषालाई प्राथमिकता दिई लिखित रूपलाई गौण महत्त्व दिने र विशेष प्रयोजन बाहेक बोलचालको भाषिक रूपको विश्लेषण गर्ने प्रवृत्ति अमेरिकाली संरचनावादीहरूमा पाइन्छ ।

**४. रूपप्रति विशेष आग्रह–अर्थको बहिष्कार**

संरचनावादीहरू भाषिक विश्लेषणमा रूप र अर्थलाई अलग–अलग गर्छन् । यिनीहरू सङ्कलित भाषिक सामग्रीको संयोजन र वर्णन गर्दा अर्थको आधार लिँदैनन्, भाषाको रूपतात्विक संरचनाको व्याख्या/विश्लेषण र वर्गीकरण गर्छन् । संरचनावादीहरूमा भाषाको रूप अर्थात् बाह्य संरचनाको मात्र विश्लेषण गर्ने विशेष आग्रह पाइन्छ । यिनीहरू भाषिक संरचनाको विश्लेषणमा अर्थलाई आधार मान्दा अनेकौं समस्याहरू आइ पर्ने ठानी अर्थको बहिष्कार गर्दछन् ।

**५. भाषिक विश्लेषणमा भाषाका तत्त्वहरूको मिश्रण हुन नदिनु**

संरचनावादीका अनुसार भाषाका मुख्य तह चार वटा छन् : वर्ण, रूप, वाक्य र अर्थ । त्यसमा संरचनावादी अर्थको बहिष्कार गर्दै वर्ण, रूप र वाक्यको बाह्य संरचनाको विश्लेषण गर्दछन् । यी तिन तहमा पनि एक–अर्का तहको मिश्रण नगरी अलग–अलग विश्लेषण गर्दछन् ।

**६. क्रमिक विश्लेषणमा जोड**

संरचनावादीहरू भाषाको विश्लेषण गर्दा तल्लो तहदेखि माथिल्लो तहसम्मको विश्लेषण क्रमशः गर्नुपर्ने मान्यता राख्दछन् । सर्वप्रथम वर्णहरूको निर्धारण, त्यसपछि रूपको विश्लेषण र अन्तिममा वाक्य विश्लेषण गर्ने क्रमिकता संरचनावादीहरूको भाषिक अध्ययनको तरिका हो । क्रमिकताको यही कठोर अनुशासनले गर्दा संरचनावादीहरूले सबैभन्दा बढी वर्णको अध्ययन गरेका छन् ।

**७. अन्वेषण प्रक्रियाप्रति विशेष आग्रह**

भाषाविज्ञानलाई बढी वैज्ञानिक र तथ्यपरक बनाउनु पर्दछ भन्ने संरचनावादीहरूको मान्यता रहेको हुन्छ । सामग्री सङ्कलनको पूर्व तयारी, क्षेत्रीय, भ्रमण, सर्वेक्षण, सूचकको चयन र सामग्री सङ्कलन, सङ्कलित सामग्रीको वर्गीकरण र तालिकीकरण, सामग्रीको विश्लेषण तथा सामान्यीकरण र प्रस्तुतीकरण जस्ता प्रक्रियाबाट भाषिक अध्ययनलाई अन्वेषणमूलक बनाउनु संरचनावादीहरूको विशेषता हो । यिनीहरू आगमनात्मक अन्वेषण प्रक्रियामा जोड दिन्छन् ।

**८. व्यवहारवादी मनोविज्ञानमा जोड**

अमेरिकाली संरचनावादका केन्द्रीय व्यक्तित्व ब्लुमफिल्डले भाषाको अध्ययनलाई व्यवहारवादी मनोविज्ञानसँग जोडेका थिए ।

### ३.१.३ संरचनावादको भाषिक अध्ययन पद्धति

संरचनावादीहरूले स्थापित गरेका भाषिक विश्लेषणका मुख्य पद्धतिहरूका बारेमा विभिन्न शीर्षक – उपशीर्षकमा चर्चा गरिएको छ।

### ३.१.३.१ वर्णविश्लेषणको संरचनावादी पद्धति

संरचनावादीहरूको वर्ण विश्लेषण पद्धति मतभेद र विविधता पनि पछिल्ला चरणका अधिकांश विद्वान्हरूले प्रयोगमा ल्याएको पद्धति हाल संरचनावादी पद्धतिका रूपमा स्थापित छ। प्राग सम्प्रदायका रोमन याकोब्सनले विभेदक अभिलक्षणका आधारमा वर्णहरूको विश्लेषण गर्ने पद्धति विकास गरेका थिए। संरचनावादीहरू वर्णलाई खण्डीयर खण्डेतर गरी दुई किसिममा हेर्छन्। संरचनावादीहरूका अनुसार वर्णविश्लेषणमा निम्न लिखित ३ वटा सिद्धान्त निर्धारित छन् :

१. व्यतिरेकी विश्लेषण/व्यतिरेक
२. परिपूरक वितरण
३. मुक्त परिवर्तन

**१. व्यतिरेक**

व्यतिरेक भनेको विरोध हो। व्यतिरेकका आधारमा वर्ण निर्धारणका लागि लघुतम युग्मको आवश्यक पर्दछ। लघुतम युग्म भनेका न्यूनतम अर्थभेदक शब्दका जोडा हुन्। व्यतिरेक शब्दादि, शब्दमध्य र शब्दान्त गरी तिन वटा परिवेशमा पाउन सकिन्छ। यस्तो व्यतिरेक खण्डीय तथा खण्डेतर दुवै प्रकारका वर्ण निर्धारणको मूल आधार हो। जस्तै :

| शब्दादिमा | शब्दमध्य | शब्दान्त |
|---|---|---|
| आठ /ओठ : आ/ओ<br>काम, खाम, गाम : क्, ख्, ग्<br>आधी/ आँधी :<br>आ/ आँ<br>ङ्यार्र/स्यार्र : ङ् /स् | काम/ कुम : आ/उ<br>भाडा/भाँडा : आ/आँ<br>कलम/कसम : ल्/स् | भाउ/भाइ : उ/इ<br>कलम/ कलस/ कलह :<br>म्/स/ह्<br>नाउ/ नाउँ : उ/उँ |

माथिका उदाहरणमा समान परिवेशमा आएर अर्थमा भिन्नता ल्याउने ध्वनिहरू वर्ण मानिन्छन्। यस प्रकारको अर्थगत भिन्नताको विश्लेषणबाट नै वर्ण निर्धारण हुन्छ भन्ने संरचनावादी वर्ण विश्लेषणको सिद्धान्त हो।

जस्तै : अङ्ग्रेजीका cane, gane, rain, pain, main शब्दले शब्दादिको उही परिवेशमा आएर क्रमशः 'क, ग, र, प, म' वर्णले अर्थमा भिन्नता ल्याएका छन्। यस

प्रकार समान परिवेशमा आएर अर्थमा भिन्नता ल्याउने ध्वनि वर्ण हुन् भन्ने संरचनावादी मान्यता रहेको छ।

२. **परिपूरक वितरण** (Complimentary distribution)

एउटा ध्वनि जुन परिवेशमा आउँछ, अर्को ध्वनि त्यही परिवेशमा आउन नसक्नु परिपूरक वितरण हो। परिपूरक वितरणमा आउने ध्वनि एउटै वर्णका उपवर्ण वा संवर्ण हुन्छन्। यसरी एउटै वर्णका उपवर्ण वा संवर्ण एकअर्का परिवेशमा वितरण नभई आ-आफ्ना परिवेशमा एकअर्काका परिपूरक भएर आउँछन्। परिपूरक वितरणको सिद्धान्तबाट संवर्णको निर्धारण गर्न सकिन्छ। जस्तै : 'डाडु' शब्दमा सुरुको 'ड' सामान्य र पछिको 'ड' ताडित छ। यी ध्वनि छुट्टाछुट्टै वर्ण नभएर एकअर्काका परिपूरक भएर आएका संवर्ण हुन्। यी दुई संवर्ण एकको सट्टामा एउटै परिवेशमा आउन सक्दैनन्। जस्तै :

(क) खसि- /'ख'/ स्पर्शी
कुखुरो- /'ख'/ स्पर्श सङ्घर्षी

(ख) फर्सि- /फ/ स्पर्शी
काफल- /फ/ स्पर्श सङ्घर्षी

(ग) तारा- /त/ दन्त्य
सात्- /त/ वर्त्स्य उच्चारण प्रथम

माथिका ४ वटा उदाहरणमा क्रमशः 'ख, फ, त्' ध्वनि अलग अलग परिवेशमा भिन्न भिन्न ध्वनिका रूपमा उच्चरित हुन्छन् तर तिनलाई व्यतिरेकी आधारमा राखेर हेर्दा भने अर्थमा भिन्नता ल्याउन सक्तैनन्। अतः ध्वनिका यस्ता परिवेशगत भिन्नतालाई वर्ण मानिँदैन।

३. **मुक्त परिवर्तन /मुक्त विभेदकता (Free variation)**

कुनै दुई ध्वनिहरू समान परिवेशमा अर्थ परिवर्तन नगर्ने गरी वैकल्पिक रूपमा वितरण हुने अवस्थालाई ध्वनिको मुक्त परिवर्तन भनिन्छ। जस्तै :

'सारी' र 'साडी' 'खाँबो' र 'खाँमो'
'जुँगा' र 'जुँघा' 'भान्सा' र 'भान्छा'
'काशी' र 'काँशी' 'घोडो' र 'घोरो'

माथिका उदाहरणमा आएका जोडा शब्दहरू वैकल्पिक रूपमा प्रयोग हुने र अर्थमा भिन्नता नल्याउने अवस्थामा छन्। यसमा उच्चारणगत रूपमा भिन्न ध्वनिहरू अर्थभेदक अर्थात् व्यतिरेकी नभएकाले यहाँ आएका क्रमशः 'र/ड', 'ब/म', 'ग/घ', 'स/छ', 'आ/आँ' र 'र/ड', छुट्टै वर्ग नभएर संवर्ण मात्र हुन्छन्। अङ्ग्रेजीमा cat (क्याट) लाई 'ख्याट' भनिए पनि 'क' र 'ख' छुट्टै वर्ण हुँदैनन्। नेवारीमा 'त' र 'ट' छुट्टै वर्ण नभएर संवर्ण मात्र हुन्। अर्थभेदक नभएका तर अर्को ध्वनिका ठाउँमा आउन सक्ने यस्ता ध्वनिहरू बेग्लाबेग्लै वर्ण नभएर एकै वर्णका मुक्त विभेद मात्र हुन्। यस्ता ध्वनि ऐच्छिक रूपमा आउँछन्। यसरी हेर्दा मुक्त विभेदकता हेर्न निम्न लिखित ३ प्रकारमा हेर्न सकिन्छ :

१. परिवेशगत समता
२. अर्थमा एकरूपता
३. ऐच्छिक प्रयोग

### ३.१.३.२ रूपविश्लेषणको संरचनावादी पद्धति

लघुतम अर्थयुक्त भाषिक एकाइ रूप हो। यसलाई अङ्ग्रेजीमा मोर्फिम भनिन्छ। अमेरिकाली संरचनावादीले वर्णकै सादृश्यमा रूपलाई पनि चिनाएका छन्। रूपहरूको वैज्ञानिक अध्ययनको विषयलाई रूपविज्ञान भनिन्छ। रूपहरूको मेलबाट शब्द बन्दछ। त्यसैले रूपविज्ञानले शब्दको आन्तरिक संरचनाको अध्ययन गर्दछ। अमेरिकाली संरचनावादका ह्यारिस, ब्लाख, नाइडा, हकेट आदिले रूपविज्ञानका क्षेत्रमा उल्लेख अध्ययन गरेका छन्। संरचनावादीले वर्णसिद्धान्तलाई नै आधार बनाएर रूपविश्लेषणात्मक तिन सिद्धान्तहरू प्रस्तुत गरेका छन्। ती हुन :

१. व्यतिरेकी विश्लेषण
२. परिपूरक विश्लेषण
३. मुक्त परिवर्तन विश्लेषण

**१. व्यतिरेक**

यस अन्तर्गत पनि ३ (तिन) प्रकारका सिद्धान्त छन् :

(क) संरचना भिन्नताको सिद्धान्त
(ख) अर्थ भिन्नताको सिद्धान्त
(ग) संरचना-अर्थ भिन्नताको सिद्धान्त

**(क) संरचना भिन्नताको सिद्धान्त**

समान परिवेशमा आएर एउटै अर्थ बुझाउने रूपहरूको संरचना फरक-फरक भएमा त्यस्ता फरक संरचना मात्र पनि फरक-फरक रूप हुन्छन्। पर्यायवाची रूपहरू जस्तो 'बाटुलो' र 'गोलो', 'आमा' र 'माता' जस्ता रूपहरू एउटाका ठाउँमा आउन सक्छन् र उही अर्थ दिन्छन्। यी अलग-अलग रूपहरू छुट्टै रूप हुन्।

**(ख) अर्थगत भिन्नता**

समान संरचना भएका र भिन्नै अर्थमा प्रयोग हुने एउटै संरचनाको रूप प्रयोगको अर्थका आधारमा भिन्न-भिन्न रूप हुन्छ। यस्तोमा अर्थ-१, अर्थ-२, अर्थ-३.... आदिको अलग-अलग रूप भनिन्छ। जस्तै :

तर- खोलो तर।, दुधको तर।....तर (संयोजक)। यहाँ अलग-अलग अर्थमा प्रयोग भएका 'तर' ले अलग-अलग रूप मानिन्छन्।

**(ग) संरचना अर्थ भिन्नता**

समान परिवेशमा आउने कुनै दुई रूपहरू संरचना र अर्थ दुवैमा फरक भएमा ती दुई रूप अलग-अलग रूप हुन् भन्ने सिद्धान्त संरचना-अर्थ भिन्नताको सिद्धान्त हुन्। जस्तै : दाइ र भाइ। भात र तर्कारी.... आदि संरचना र अर्थ दुबैमा भिन्न छन् र यी अलग्गै रूप हुन्।

२. **परिपूरक वितरणको सिद्धान्त**

एउटै रूप भिन्न परिवेशमा हुँदा देखिने स्थानगत भिन्नतालाई परिपूरक वितरण भनिन्छ। यस्ता परिवेशगत भिन्नतामा देखिने भिन्न संरचना अलग्गै रूप नभएर एउटा रूपको परिपूरक मात्र हुन् र यस्ता परिवेशगत भिन्न संरचनालाई संरूप भनिन्छ। जस्तै :

'जाला', 'जान्छ', 'गयो', 'जाँदैन' शब्दमा आउने क्रमशः 'जा', 'जान्', 'ग' र 'जाँ' अलग अलग रूप जस्ता लाग्छन् तर यी सबै उही 'जा' रूपमा संरूप मात्र हुन्। परिवेशगत भिन्नताले मात्र यी भिन्न रूपमा आएका हुन्। यी संरूपहरू एउटा परिवेशमा एउटाका सट्टा अर्को संरचना वितरण हुन सक्दैनन्। त्यसर्थ संरूपहरू रूप जस्तो सामान्य परिवेशमा नआई विशिष्ट परिवेशमा आउँछन्। यसरी परिपूरक वितरणको सिद्धान्तले संरूपहरूको निर्धारण र विश्लेषण गर्दछ।

३. **मुक्त परिवर्तनको सिद्धान्त**

कुनै रूपका संरूपहरू एउटै परिवेशमा वैकल्पिक वा ऐच्छिक रूपमा वितरण हुन सक्छन् भने तिनलाई संरूपको मुक्त परिवर्तन भनिन्छ। जस्तैः-

कुनै रूपका संरूपहरू एउटै परिवेशमा वैकल्पिक वा ऐच्छिक रूपमा वितरण हुन सक्छन भने तिनलाई संरूपको मुक्त परिवर्तन भनिन्छ ।

**जस्तै :**

।दो। — ।तो। - सक्तो
— ।दो। - सक्दो

।हु। — ।हो। होइएला
— ।भ। भइएला

माथिको उदाहरणमा 'तो' र 'दो' त्यस्तै 'हो' र 'भ' एउटै रूप क्रमशः 'दो' र 'हु' का मुक्त परिवर्तनमा आउने संरूप मात्र हुन्।

**रूपका प्रकारहरू**

संरचनावादीहरूले विभिन्न आधारमा रूपको वर्गीकरण गर्ने गरिएको पाइन्छ। उनीहरूका अनुसार रूपका मुख्य प्रकार निम्न लिखित छन् :

(क) **मुक्त रूप :** वाक्यमा स्वतन्त्र पदका रूपमा आउने र आफैंमा शब्दका रूपमा रहने रूप, जस्तो : घर, वन, स्कुल आदि।

(ख) **बद्ध रूप :** अर्को कुनै रूपबिना प्रयोगमा आउन नसक्ने, जस्तै : विभक्तिहरू, उपसर्ग र प्रत्ययहरू। उदाहरण : ले, लाई, उप, बे, एलु ...।

(ग) **सम्पृक्त रूप :** एउटै अविभाज्य वार्णिक संरचना (रूप) ले एकभन्दा बढी अर्थतात्विक एकाइको उपस्थिति हुने रूप सम्पृक्त रूप हो। जस्तै : केटो (केट +ओ ) मा आउने 'ओ' ले पुलिङ्ग, एकवचन जस्ता रूपको अर्थ एकैसाथ दिन्छ। यस्तो रूप सम्पृक्त रूप हो।

(घ) **व्यक्त रूप** : वार्णिक संरचना भएका जुनसुकै रूप व्यक्त रूप हुन्।

(ङ) **शून्य रूप** : वार्णिक संरचनामा नभएको तर अर्थ भने भएको रूप शून्य रूप हो। यसलाई (ϕ ) चिह्नले सङ्केत गरिन्छ। अङ्ग्रेजीमाको sheep (भेडो) र sheep (भेडाहरू) मा दोस्रोमा बहुवचन जनाउने 's' वा 'es' नभएको हुँदा भेडाहरू जनाउने sheep मा बहुवचन रूप (ϕ) शून्य रूप हो।

(च) **रिक्त रूप** : वार्णिक संरचना भएको तर अर्थको उपस्थिति नभएको रूपलाई रिक्तरूप भनिन्छ। अङ्ग्रेजीको children मा en का अर्थ छ तर बिचमा आएको r को अर्थ छैन्। त्यो r रिक्त रूप हो।

(छ) **भग्नक्रम रूप** : कुनै रूपको बिचमा मध्यसर्गका रूपम आएर अर्थमा भिन्नता ल्याउने रूपलाई भग्नक्रम रूप भनिन्छ। जस्तै :

**अरबी भाषाको**

कितिब = लेख्नु

किताब = पुस्तक

यहाँ बिचमा आएको 'इ' र 'आ' ले अर्थमा भिन्नता ल्यायो। यस प्रकारको रूपलाई भग्नक्रम रूप भनिन्छ।

(ज) **खण्डेत्तर रूप** – लय, तान, आघात, अनुनासिकता, दीर्घता जस्ता खण्डेतर वर्णले रूपको काम गर्छन् भने यस्ता रूपलाई खण्डेतर रूप भनिन्छ। नेपाली भाषामा यसका उदाहरण पाइँदैनन्।

### ३.१.३.३ वाक्य विश्लेषण : अन्तःकेन्द्रिक र बहिः केन्द्रिक संरचना

संरचनावादी भाषा वैज्ञानिक ब्लुमफिल्डले वाक्य विश्लेषणमा विशेष कार्य गरेका छन्। उनकै वाक्य विश्लेषण ढाँचा नै संरचनावादी वाक्य विश्लेषणको मुख्य पद्धति हो। उनले वाक्यको संरचनालाई मुख्य दुई प्रकारमा वर्गीकरण गरेर अध्ययन गरेका छन्।

(क) अन्तः केन्द्रिक संरचना

(ख) बहिः केन्द्रित संरचना

यी दुई संरचनाको अध्ययन वाक्य विश्लेषणको निकट घटक विश्लेषणका क्रमममा देखाउन सकिन्छ।

**(क) अन्तः केन्द्रिक संरचना**

कुनै एउटा अवयव/घटक केन्द्रमा हुने र अन्य घटक त्यसको वरिपरि वा मुख्य घटकमा निर्भर हुने संरचनामा एउटा मात्र अनिवार्य घटक भएको र त्यसका साथमा अन्य वैकल्पिक विस्तारित घटकहरू भएमा त्यस्तो संरचनालाई अन्तः केन्द्रिक संरचना भनिन्छ। अन्तः केन्द्रिक संरचनाको मुख्य घटक पुरै संरचनाको स्थानमा वितरण हुन सक्ने हुन्छ। जस्तै : मेरी सानी छोरी, सरासर घर गई।

यी दुई पदावली संरचना अन्तः केन्द्रिक संरचना हुन्। किनकि यी पदावलीभित्र आएका एउटा एउटा घटकले अरु घटकलाई साट्न सकिन्छ। 'मेरी सानी

छोरी' मा छोरी अनिवार्य घटकका रूपमा रहेको छ र 'मेरी' र 'सानी' वैकल्पिक र विस्तारित घटक हुन्। त्यस्तै 'सरासर घर गई' पदावलीमा 'गई' मुख्य घटक हो। यस सिङ्गो संरचनालाई 'छोरी गई' भन्दा मात्र पनि अर्थमा त्यति फरक पर्दैन।

अन्तः केन्द्रिक संरचना पनि दुई प्रकारका हुन्छन्।

१. आश्रित अन्तः केन्द्रिक संरचना

२. समानाधिकरण अन्तः केन्द्रिक संरचना

**१. आश्रित अन्त :**

**केन्द्रिक संरचना** मा कुनै एक घटकसँग आश्रित बनेर अन्य घटकहरू आएका हुन्छन्। यसलाई पदावली र उपवाक्य तहमा देखाउन सकिन्छ।

**नाम पदावली** – विशेष्य + विशेषण, जस्तै : रातो फूल – यहाँ 'फूल' अनिवार्य घटक (आश्रयक) हो र 'रातो' (आश्रित)।

**विशेषण पदावली** – तीव्रक/ प्रविशेषण + विशेषण, जस्तै : निकै ठुला।

यहाँ, निकै (तीव्रक) र ठुलो (आश्रयक–अनिवार्य)।

**क्रियाविशेषण पदावली** – तीव्रक + क्रियाविशेषण, जस्तै : अझ + बेस्सरी, धेरै + छिटो आदि।

**क्रिया पदावली** – क्रियाविशेषण + क्रिया, जस्तै : फटाफट + गयो, थपक्क + दियो

**उपवाक्यका तहमा आश्रित अन्तः केन्द्रिक संरचना**

यसमा एउटा उपवाक्य आश्रित र अर्को प्रधान उपवाक्य हुन्छ। मिश्रवाक्यमा यस्तो संरचना पाइन्छ।

**जब पानी पर्छ तब जाडो बढ्छ।**

आश्रित प्रधान

**२. समानाधिकरण अन्तः केन्द्रिक संरचना**

यसमा कुनै एउटा घटकसँग समान अधिकार भएका घटकहरू हुन्छन्। यो प्रायः संयोजक पदका साथ प्रयोग हुन्छ।

राम र श्याम

आओस् कि जाओस्

ऊ गयो र तिमी आयौ।

**(ख) बहि : केन्द्रिक संरचना**

यसमा कुनै पनि घटक केन्द्रमा हुँदैन। यो अन्तः केन्द्रिकको विपरीत हो। यसमा व्याकरणिक दृष्टिले सबै घटक अनिवार्य र समान महत्त्वका हुन्छन्। जस्तै :

**घरमाथि** मा **'घर'** र **'माथि'** दुवैको समान महत्त्व छ। यसमा **'माथि'** ले घरको सट्टामा काम गर्न सक्दैन र 'घर' ले पनि **'माथि'** को काम गर्दैन।

बहि : केन्द्रिक संरचनामा निम्नानुसार संरचकहरू रहन्छन् :

**१. रूप वा पदका तहमा**

उपसर्ग + आधारपद, जस्तै : वि+ज्ञान, उप+चार

आधारपद + प्रत्यय, जस्तै : नेपाली (नेपाल + ई) , घरेलु (घर+ एलु)

नाम / सर्वनाम + विभक्ति/ नामयोगी, जस्तै : राम+ ले, घर+ माथि

२. **पदावलीका तहमा**

कर्म + सकर्मक क्रिया, जस्तै : पुस्तक + पढ्छ।

पूरक + पूरकापेक्षी क्रिया, जस्तै : (ऊ) असल + छ।

३. **उपवाक्यका तहमा**

उद्देश्य + विधेय, जस्तै : राम पढ्छ।

### ३.१.३.३ वाक्यविश्लेषण : निकटघटक विश्लेषण पद्धति

संरचनावादी वाक्यविश्लेषणको महत्त्वपूर्ण पद्धति निकटघटक विश्लेषण हो। यसमा वाक्यभित्र आउने सम्पूर्ण वाक्यतत्त्वहरू वा एकाइहरूको विश्लेषण गरिन्छ। वाक्य भाषाको सबैभन्दा माथिल्लो एकाइ भएकाले यसमा सिङ्गो वाक्यसहितका पाँच ओटा एकाइ रहेका हुन्छन् । ती पाँचवटै एकाइको विश्लेषण निकटघटक विश्लेषणले गर्दछ। यी पाँचओटा एकाइ हुन् : वाक्य, उपवाक्य, पदावली, पद/शब्द, र रूप।

निकटघटक विश्लेषणको प्रारम्भ अमेरिकाली संरचनावादी विद्वान् ब्लुमफिल्डबाट भएको हो। यसलाई हकेट र वेल्सले विकास गरेका हुन्। निकटघटक भनेको वाक्यका एकाइहरूको आपसी सम्बन्ध हो। यसमा वाक्यका एकाइहरूकालाई द्विधा विभाजनका आधारमा टुक्रयाउँदै गएर रूपका तहमा पुगिन्छ। यसको उद्देश्य वाक्यभित्रका प्रत्येक संरचनालाई सबै भन्दा ठुलो संरचनाबाट क्रमैसँग विभाजन ( द्विविभाजन/द्विभाजन) गर्दै रूपका तहसम्म पुग्नु हो।

निष्कर्षमा भन्नुपर्दा वाक्यका प्रत्येक ठुला स्वतन्त्र क्रममा आएका एकाइ/घटक/संरचनाहरूलाई सबैभन्दा साना अर्थपूर्ण एकाइ घटक हरूमा टुक्राउँदै गएर रूपिमका स्तरसम्म पुग्नु नै संरचनावादी वाक्य विश्लेषण पद्धति हो। यसरी विश्लेषण गर्दा नजिक (निकट) को सम्बन्ध राख्ने घटकहरूलाई ठुलोदेखि सानोको क्रममा क्रमशः देखाइन्छ। यसमा द्विधा विभाजन हुन्छ। अर्थात् –

- शब्दलाई रूपमा (दुई रूपिमहरूमा) विभाजन
- पदावलीलाई दुई पदहरूमा
- उपवाक्यलाई दुई पदावलीहरूमा
- वाक्यलाई दुई उपवाक्यहरूमा

(यो विभाजन सबै अवस्थामा हुँदैनन्)।

यस प्रकार द्विधा विभजन हुने भएकाले यस पद्धतिलाई द्विधा विभाजन वा द्विभाजन पद्धति पनि मानिन्छ।

**निकटघटक विश्लेषण मुख्य विधिहरू :**

(क) बाकस पद्धति

| मेरो भाइ बिस्तारै गयो | | | | | |
|---|---|---|---|---|---|
| मेरो भाइ | | बिस्तारै गयो | | | |
| मेरो | भाइ | बिस्तारै | | गयो | |
| मेरो | भाइ | बिस्तारै | | गयो | |
| म/रो | भाइ | बिस्तार | नै | जा | यो |

**(ख) कोष्ठक पद्धति**

कोष्ठकमा देखाउने पद्धतिलाई कोष्ठक पद्धति भनिन्छ। जस्तैः–

(((म)(रो)) (भाइ)) ((विस्तार) (नै)) ((जा) (यो)))

**(३) नामाङ्कित पद्धति**

वाक्यमा 'वा', पदावलीमा 'प'जस्तो नाम उल्लेख गरी निकटका घटकको विश्लेषण गर्ने पद्धतिलाई नामाङ्कित पद्धति भनिन्छ।




**४) वृक्षारेख पद्धति**

वृक्षारेखमा राखेर निकटघटक विश्लेषण गर्ने पद्धतिलाई वृक्षारेख पद्धति भनिन्छ। जस्तै :



**निकटघटक विश्लेषणका सीमाहरू**

१. क्रमहीन संरचनाको विश्लेषण हुन सक्दैन। जस्तै : राम खान्छ भात।

२. संरचनात्मक समरूपता वा सन्दिग्धार्थ निकटघटकहरूको विश्लेषण गर्न सक्दैन, जस्तै :
'मिठो भात र दाल' यसमा 'मिठो' विशेषणले भात र दाल दुवैको विशेषता जनाएको छ। यसलाई निकटघटक विश्लेषणको द्विधाविभाजनले विश्लेषण गर्न सक्दैन।

३. आशयका आधारमा बुझ्नु पर्ने घटकहरूको विश्लेषण गर्न सक्दैन। जस्तै - भात खाऊ। यस वाक्यमा 'तिमी' घटकको उपस्थिति नभए पनि यसको अर्थ यस वाक्यमा निहित छ। यस्ता घटकको विश्लेषण निकटघटक विश्लेषणमा हुँदैन।

४. द्विधाविभाजन यस सिद्धान्तको सीमा हो। कतिपय वाक्यमा त्रिधा विभाजन पनि आवश्यक हुन्छ। जस्तै :
हरि, राम र सीता भन्ने पदावलीमा द्विधा विभाजन नै पर्याप्त छैन्।

### ३.१.४ संरचनावादका उपलब्धि र सीमा

संरचनावादका मुख्य उपलब्धिलाई निम्नानुसार हेर्न सकिन्छ :

**उपलब्धि**

(१) भाषाविज्ञानलाई विज्ञानका रूपमा विकसित गर्ने कार्य संरचनावादले गऱ्यो। यसले अनुसन्धान पद्धतिलाई महत्त्व दियो। तथ्यका आधारमा वस्तुपरक तथा वैज्ञानिक वर्णन गर्ने परम्परा थालनी गर्ने काम यसबाट भयो। तथ्यहरूको सङ्कलन, पञ्जीकरण र विश्लेषण गर्ने वैज्ञानिक विधिको विकास गरी भाषालाई एक स्वतन्त्र विषयका रूपमा विकास गर्न यस वादले प्रमुख भूमिका खेलेको देखिन्छ।

(२) भाषालाई मानव व्यवहारका रूपमा हेरी भाषिक व्यवहारको व्याख्या गर्नु यस सम्प्रदायको उपलब्धि हो। समसामयिक अनुभववादी दर्शन र व्यवहारवादी मनोविज्ञानसँग निकट रहेर यसले मानव व्यवहारको रूपमा भाषाका विभिन्न पक्षको अध्ययन गऱ्यो।

(३) भाषाशिक्षणमा यस वादको महत्त्वपूर्ण भूमिका रहेको छ। भाषाका पाठ्यपुस्तक, कोशहरू, व्याकरणहरू, साहित्यिक शैलीहरू आदिको निर्माणमा यसको महत्त्वपूर्ण हात रहेको छ।

(४) भाषाको अध्ययनमा कथ्यलाई जोड दिनु यसको अर्को महत्त्वपूर्ण उपलब्धि हो। यसले भाषाको अध्ययनलाई बढी वैज्ञानिक र तथ्यपरक बनायो।

संरचनावादका कतिपय सीमा रहेका छन्।

सीमा

रूपान्तरण व्याकरणले यसलाई अनुसन्धान पद्धतिमा मात्र सीमित रहेको, भाषिक अध्ययन वर्गीकरण प्रधान बनाएको, वर्ण-रूप-वाक्यको क्रमिकताका आधारमा अध्ययन गरेको, अर्थको बहिष्कार गरेको, भाषालाई अनुभववादी दर्शन र व्यवहारवादी मनोविज्ञानका आधारमा विश्लेषण गरेको भाषिक अध्ययन सम्पादनमुखी हुनु तथा बाह्य संरचनामा बढी जोड दिएको विषयमा आलोचना गरेको छ ।

संरचनावादी वर्णविज्ञान र रूपविश्लेषण पद्धतिमा पनि आलोचना भएको छ। संरचनावादी वाक्यको अध्ययनलाई अपूर्ण मानिएको छ। यो सिद्धान्त पूर्ण छैन भनी विभिन्न भाषिक सिद्धान्तको जन्म भएको पाइन्छ।

निष्कर्षमा हेर्दा कतिपय सीमा र आलोचना भए पनि भाषाविज्ञानलाई विज्ञानका रूपमा स्थापित गर्ने र भाषाको संरचना पक्षको अध्ययन गर्ने काममा संरचनावादी भाषाविज्ञानको महत्त्वपूर्ण योगदान रहेको छ। विशेषतः ध्वनि, वर्ण, रूप र वाक्यका तहमा भएको संरचनावादी पद्धति महत्त्वपूर्ण रहेको छ।

## ३.२ रूपार्थपरक व्याकरणको विकास र आधारभूत मान्यता

भाषाको संरचना वा रूप पक्षको अध्ययनमा मात्र सीमित संरचनावादी सम्प्रदायकै केही विद्वान्हरूले भाषाको रूप र अर्थ दुवैलाई बराबरी महत्त्व दिनु पर्ने अवधारणाको विकास गरे । यसरी भाषाको रूप र अर्थ दुवैलाई समान महत्त्व दिने भाषाविज्ञानको सिद्धान्तलाई रूपार्थपरक व्याकरण भनिन्छ । यसलाई टेगमिमविज्ञान (Tagmemices) पनि भनिन्छ । यसको मूल प्रतिपादक अमेरिकाली विद्वान् केनिथ ली पाइक (Keneath Lee Pike) हुन् । यस सिद्धान्तको विकासमा लङ्गेकर ( R.E.Longacre), पिकेट (V.Piket), एल्सन (S.Elson), मेरीफिल्ड (W.R. Merrifield) आदि विद्वान्ले महत्त्वपूर्ण योगदान गरेका छन् । यस सम्प्रदायका धेरैजसो भाषावैज्ञानिक समर इन्स्टिच्युट अफ लिङ्ग्विस्टिकसँग सम्बन्धित छन्। यस इन्स्टिच्युटका भाषाशास्त्रीहरूले संसारका ६५० भन्दा बढी भाषाहरूको अध्ययन गरेका छन् (बन्धु, २०५७ : ८४-८५)।

रूपार्थपरक सिद्धान्तका जन्मदाता पाइक सन् १९३५ देखि भाषिक उच्चारण प्रक्रियाको अध्ययनमा लागेका थिए। उनका ध्वनि विज्ञान (Phonetics १९४३), अमेरिकाली अङ्ग्रेजीको अनुपात (Intonation of American English, १९४५), वर्णविज्ञान (phonemics, १९४७) र तान भाषाहरू (Tone language, १९४८), मानव व्यवहारको एकीकृत सिद्धान्तका सन्दर्भमा भाषा (Language in Relation to the Structure of the Theory of Human Behavior, पहिलो भाग -१९५४, दोस्रो भाग-१९५५, तेस्रो भाग -१९६० र एकीकृत -१९६७)

जस्ता कृति प्रकाशित छन् । उनका कतिपय कृतिहरू मिसिगन विश्वविद्यालयमा पढाउँदा र अपठितहरूको भाषाको अध्ययनमा लागेका मिसनरी भाषाशास्त्रीहरूलाई प्रशिक्षण दिँदा लेखेका थिए ।

भाषिक अनुसन्धानमा क्रमिकताको पालन गर्नुपर्ने संरचनावादी सीमाभित्र रहेर वर्णविज्ञान (१९४७) को क्षेत्रमा महत्त्वपूर्ण काम गरेका पाइकले वर्णका तहमा फोनिम (Phoneme) र रूपको तहमा मोर्फिम (Morpheme) जस्तै संरचनाको तहमा पनि कुनै व्यवस्था अवश्यै हुनुपर्छ भनी यतातिर प्रवृत्त भएको बताइन्छ । यस अनुसार उनको यस प्रयासलाई संरचनाका स्तरको इम (eme) को खोज पनि भनिएको छ। आफ्नो नयाँ मान्यतालाई पाइकले सुरुमा ग्रामिम (Grammeme) शब्दको प्रयोग गरेका थिए। पछि सन १९५८ मा ब्लुमफिल्डको टेगमिम (tagemem) शब्द लिएर यसको प्रयोग गर्न थालेको पाइन्छ।

## ३.२.१ टेगमिमविज्ञानको भाषा सम्बन्धी मान्यता

पाइकको 'मानव व्यवहारको एकीकृत सिद्धान्तका सन्दर्भमा भाषा' कृतिमा भाषालाई यसरी हेरिएको छ :

१. भाषा मानवीय व्यवहार हो।
२. मानव व्यवहारको आफ्नो संरचना हुन्छ।
३. भाषा मानव व्यवहार भएकाले यसको पनि संरचना छ र
४. भाषाको व्याख्या गर्ने उपयुक्त सिद्धान्तले मानवका अन्य व्यवहारका संरचनाको पनि व्याख्या गर्दछ।

पाइकका अनुसार मानव व्यवहारमा व्यतिरेक, परिवर्तन र वितरणका विशेषता हुने गर्दछन् । व्यतिरेक भनेको एकअर्कामा भिन्नता देखिने र विविधता भए पनि कतिपय रूपमा एकता देखिने गुण हो । परिवर्तन भनेको व्यवहारमा परिवर्तन हुने विशेषता हो । एउटा व्यवहार पनि अनेक रूपमा प्रकट हुन सक्ने साथै प्रत्येक व्यवहारले विभिन्न वर्ग, क्रम र व्यवस्थामा घटित हुने सम्भावना देखा पर्ने अवस्था वितरण हो। पाइकले मानव व्यवहारमा उल्लेख भए अनुसार व्यतिरेक, परिवर्तन र वितरणको अवस्था रहने बताएका छन् र यी विषयहरू मानव व्यवहारको संरचनामा देखिन्छन् भनेका छन्। यसैलाई उनले सम्पूर्ण मानव व्यवहारका संरचनाको एकीकृत सिद्धान्त मानेका छन्।

भाषा पनि मानव व्यवहार भएकाले उपर्युक्त सिद्धान्त भाषामा पनि लागु हुन्छ भन्ने पाइकको मान्यता रहेको छ । यसरी भाषाका साथै सम्पूर्ण मानव व्यवहारको व्याख्या गर्ने भएकाले पाइकको सिद्धान्तलाई मानव व्यवहारको एकीकृत सिद्धान्त भनिन्छ ।

पाइकको विचारमा भाषाको अध्ययन सामाजिक विज्ञानको विषय हो र भौतिक विज्ञानको विषय होइन तर यसमा गणित र भौतिकशास्त्रको पर्याप्त सहयोग

भने लिन सकिन्छ। यो सिद्धान्त उदार छ। यो कुनै सिद्धान्तका विरोधमा जन्मिएको होइन। यसले सबै सिद्धान्तका उपयोगी कुराहरूलाई ग्रहण गर्दछ।

## ३.२.२ रूपार्थपरक व्याकरण : मूलभूत धारणा

रूपार्थपरक व्याकरणले भाषालाई मानव व्यवहारसँग एकाकार गरेर यसका आधारभूत मान्यताहरू अगाडि सारेको छ। पाइक एन्ड पाइक १९७६ मा प्रस्तुत गरेको धारणा अनुसार भाषालाई (१) परिपेक्ष्य (Perspective), (२) एकाइ (Unit) (३) क्रमपरम्परा (Hierarchy) र (४) प्रसङ्ग (context) मा हेर्नु पर्दछ।

### ३.२.२.१ परिप्रेक्ष्य (Perpective)

एउटै तथ्यलाई विभिन्न ढङ्गबाट हेर्दा फरक फरक देखिन सक्छ। यसरी एउटै तथ्यलाई विभिन्न ढङ्गले हेर्दा अगल अगल रूपमा हेरिने सन्दर्भलाई रूपार्थपरक सिद्धान्तमा परिप्रेक्ष्य भनिएको छ। कुनै पनि सिद्धान्तको आफ्नो विशिष्ट रूप हुन्छ तर त्यो तथ्यलाई अवलोकन गर्ने अवलोकन कर्ताको हेराइ भने विभिन्न परिप्रेक्ष्यमा बेग्लाबेग्लै हुन्छ भन्ने टेगमिम विज्ञानले बताएको छ । टेगमिम विज्ञानअनुसार वस्तुलाई तिन परिप्रेक्ष्यमा हेर्न सकिन्छ :

१. अणु वा स्थिर रूपमा (Particle or static)
२. तरङ्ग वा गतिशील रूपमा (Wave or dynamic)
३. क्षेत्र वा सम्बन्धका रूपमा (Field or relation)

(क) अणु

अणु वा परिप्रेक्ष्यमा हेर्दा वस्तु स्थिर देखिन्छ र यसमा अनेकन् टुक्राहरू देखिन्छन् । यस परिप्रेक्ष्यमा भाषाको अध्ययन आवश्यक हुन्छ । यस परिप्रेक्ष्यको अध्ययनमा सिङ्गो वस्तुलाई टुक्राटुक्रामा छुट्याएर अध्ययन गर्नुपर्दछ । भाषामा एकाइहरूलाई टुक्रयाएर अध्ययन गर्ने सन्दर्भ अणुको परिप्रेक्ष्य हो। यो विश्लेषणात्मक पद्धतिको ढङ्ग हो।

(ख) तरङ्ग

कुनै एकाइलाई छुट्टै नलिई तिनलाई प्रवाह (तरङ्ग) को रूपमा वा गतिशीलतामा अध्ययन गर्ने ढङ्ग तरङ्गको परिप्रेक्ष्य हो। कुनै पनि वस्तुका आदि, मध्य र अन्त्यको क्रमबाट तरङ्ग जन्मिन्छ। एउटा सिङ्गो एकाइभित्र पनि स-साना एकाइका तरङ्गहरू रहेका हुन्छन् । त्यसै गरी भाषाको अध्ययनमा ध्वनि, वर्ण, व्याकरण, अर्थ आदिको अध्ययनको निरन्तरताले तरङ्गको परिप्रेक्ष्य जनाउँछ।

(ग) सम्बन्ध/ क्षेत्र

तरङ्गमा आउने एकाइहरूका बिचमा आपसी सम्बन्ध केलाउने ढङ्ग सम्बन्धगत परिप्रेक्ष्य हो । सम्बन्धबाट एउटा क्षेत्रको टुङ्गो लाग्ने भएकाले यसलाई क्षेत्र भनिएको हो। परिप्रेक्ष्यका यी तिन पक्षहरू एकअर्काका विरोधी नभई परिपूरक

हुन् । तथ्यलाई हेर्ने क्रममा एउटै पनि एकाइमा यी तिनै वटा परिप्रेक्ष्यबाट अवलोकन गर्नुपर्दछ भन्ने टेगमिमविज्ञानको मान्यता छ।

### ३.२.२.२ एकाइ (Unit)

एकाइ भनेको सिङ्गो संरचनाको निश्चित अंश हो। कुनै पनि वस्तु, व्यक्ति वा घटकलाई एकाइका रूपमा लिन सकिन्छ भन्ने टेगमिमविज्ञानको मान्यता छ। कुनै पनि वस्तुलाई एकाइका रूपमा नहेर्दासम्म त्यसलाई चिन्न सकिँदैन भन्ने यसको मान्यता छ। एकाइलाई निम्न लिखित ३ प्रकारका लक्षणहरूमा हेर्न सकिने टेगमिमविज्ञानको मान्यता छ :

(क) व्यतिरेकी तथा परिचयात्मक लक्षण (Contrastive identificational featuics) : कुनै एकाइ अर्को एकाइभन्दा भिन्न हुनु र त्यसमा अर्को एकाइभन्दा विशेष लक्षण तत्त्व हुनु प्रमुख विशेषता हो। यो भएन भने एकाइहरू बिचमा भेद छुट्टिँदैन।

(ख) एउटै एकाइ पनि विभिन्न परिप्रेक्ष्यका भिन्न रूपमा प्रकट हुन्छ। यसलाई रूप विविधता (Variation) भनिन्छ। जस्तै : 'फूल' - यसमा सबै फूल एउटै होइनन्। 'मान्छे' - सबै मान्छे एउटै होइनन्। यसैलाई टेगमिमविज्ञानमा इमिक र इटिक भनिएको छ। एउटै रूपलाई इमिक (Emic) र इमिकका विविध रूपलाई इटिक (Etic) भनिन्छ। 'फूल', 'मान्छे' को समष्टि अर्थ इमिक हो। फूलभित्रका जाई, जुही, सयपत्री आदिको अथवा मान्छेभित्रका जाति, लिङ्ग आदि भेदबाट छुट्टिने मान्छेको विशिष्ट रूप इटिक हो।

(ग) एकाइहरू वितरण (Distribution) मा आउँछन्। प्रत्येक व्यवहार विस्तृत परिवेशमा घटिक हुन्छ। यस्तो विवरणलाई ३ प्रकारमा हेर्ने गरिएको छ : वर्गमा, क्रममा र व्यवस्थामा।

(अ) वर्गमा

एउटै विशेष खाली ठाउँ वा स्लेट (Slot) मा भरक (Filler) का रूपमा आउन सक्ने एकाइहरूको समष्टि वर्ग हो। जस्तै :

| कर्ता | कर्म | क्रिया |
|---|---|---|
| राम | घर | जान्छ। |
| श्याम | वन | जान्छ। |
| रीता | स्कुल | जान्छे। |
| गीता | कलेज | जान्छे। |

गणेश भात खान्छ।

माथिको तालिकामा कर्ता, कर्म वा क्रियाका ठाउँमा भरक भएर आएका शब्दहरू वर्ग हुन्।

(आ) क्रममा

कुनै एकाइ अर्को कुनै एकाइको अघिपछि आउने निश्चित क्रम हुन्छ। जस्तै : नेपालीमा विशेषणपछि विशेष्य, कर्तापछि कर्म र कर्म पछि क्रिया आउनु एकाइको क्रम हो।

(इ) व्यवस्थामा

एकाइहरू निश्चित व्यवस्थामा वितरण भएर आउँछन् । नेपालीमा कर्ता +कर्म+क्रियाको वाक्य ढाँचा एउटा व्यवस्था हो।

### ३.२.२.३ क्रम परम्परा (Hierarchy)

टेगमिमविज्ञानले पूर्ण सिङ्गो संरचनामा आउने एकाइको निश्चित क्रम हुन्छ र त्यो क्रम सोपानक्रममा आउँछ भन्ने मान्यता रहेको छ। टेगमिमविज्ञानमा :

- पूर्णांश सम्बन्धमा आउने एकाइको निश्चित क्रम हुन्छ । सानो एकाइ ठुलो एकाइको अंश हो । एकाइले पूर्णांश सम्बन्ध (Part whole relation) देखाउँछ।
- कुनै पनि एकाइ सोपानक्रममा आउँछ।
- सबै साना एकाइहरू ठुला एकाइका सदस्य भएर काम गर्छन्।

मानवीय व्यवहारको संरचनामा जस्तै भाषामा पनि तिन तहमा यस प्रकारको क्रमपरम्परा पाइन्छ।

१. **वार्णिक क्रम** : वर्णका तहमा वर्ण, अक्षर, आघातसमूह र विरामसमूहको क्रम हुन्छ । उच्चारणगत तहमा वार्णित रूप, वार्णिक शब्द, वार्णिक पदावली, वार्णिक वाक्यांश, वार्णिक वाक्यको क्रम हुन्छ।

२. **व्याकरणिक क्रम** : व्याकरणिक तहमा रूप, शब्द, पदावली, उपवाक्य, वाक्यको तह हुन्छ।

३. **सान्दर्भिक क्रम** : कुनै एकाइलाई सान्दर्भिक गर्दा धेरै किसिमले चिनिन्छ। यस प्रकार एकाइलाई सान्दर्भिक गरेर चिन्ने कुरा (धारणा) लाई विभिन्न किसिमले सन्दर्भित गर्ने काम (अन्वय) र धारणामा अन्य समुच्चयहरू मिलेर सान्दर्भिक परम्परा बन्दछ। यही सन्दर्भहरूले सान्दर्भिक पूर्णांश सोपानक्रम बनाउँछ।

### ३.२.२.४ प्रसङ्ग ( Context)

कुनै पनि एकाइ छुट्टै रूपमा केही पनि होइनन् र तिनलाई प्रसङ्गमा मात्र हेर्न सकिन्छ भन्ने टेगमिमविज्ञानको मान्यता छ। यस अनुसार कुनै पनि एकाइलाई छुट्टै रूपमा होइन प्रसङ्गमा मात्र हेर्न सकिन्छ र यसको अर्थलाई प्रसङ्गमा मात्र स्पष्ट गर्न सकिन्छ। यस अनुसार प्रसङ्गहरूलाई (क) रूपार्थ समन्वय, (ख) साझा तत्त्वबाट हुने परिवर्तन र (ग) कथ्यको संसार गरी हेर्न सकिन्छ।

(क) **रूपार्थ समन्वय :** अर्थविना रूपको कुनै महत्त्व हुँदैन। भाषामा वक्ताले अर्थलाई रूपमा प्रकट गर्दछ र स्रोताले रूपलाई अर्थमा बुझ्छ। अर्थबिना रूपको महत्त्व हुँदैन। रूपविना अर्थ पनि खुल्दैन। रूपबाट अर्थ प्रकट हुन्छ र स्रोताले रूपलाई अर्थमा बुझ्दछ। यसर्थ भाषिक संरचना भनेको रूपार्थ समन्वय हो

(ख) **साझा तत्त्वबाट हुने परिवर्तन :** साझा तत्त्वबाट भाषाको उत्थान प्रक्रिया, संरचना र अर्थमा परिवर्तन हुन्छ। एकाइलाई प्रमाणित गर्ने साझा तत्त्व हुन्छन्।

(ग) **कथ्यको संसार :** भाषिक प्रयोगको आफ्नो कथ्यको संसार हुन्छ जसलाई प्रसङ्गको सीमा भन्न सकिन्छ। वक्ता र स्रोताको कथ्यको ससार फरक पर्नासाथ भाषा बुझिँदैन।

### ३.२.३ रूपार्थिम (टेगमिम)

**प्रकार्य स्थान** (Slot) र त्यो स्थान भर्न आउने **भरक** (Filler) को समन्वित भावलाई रूपार्थिम भनिन्छ। प्रकार्य स्थान (खाका) र त्यस स्थानमा आउने संरचना वर्ग (class) को सह–सम्बन्धलाई रूपार्थिम (टेगमिम) पनि भनेको पाइन्छ। प्रकार्य स्थानलाई नेपालीमा 'खाका' शब्दको प्रयोग गरिएको पाइन्छ। खाका भनेको उद्देश्य, विधेय, कर्म, पूरक जस्ता प्रकार्य स्थान हो। त्यो स्थान पूर्ति गर्ने नाम वा क्रिया वर्गका पदहरू आउँछन्। त्यस्ता नाम वा क्रिया वर्गलाई वर्ग भनिन्छ। तिनलाई खाकाका भरक भनिन्छ। यसरी खाका र भरकको समन्वित रूपलाई नै रूपार्थपरक सिद्धान्तमा टेगमिम भनिन्छ। यसलाई नेपालीमा रूपार्थिम भन्न सकिन्छ।

जस्तै : राम पढ्छ। यहाँ उद्देश्यको प्रकार्य स्थानमा 'राम' (नाम शब्द) र विधेयको प्रकार्य स्थानमा 'पढ्छ' (क्रिया) भरक (फिलर) भएर आएका छन्।

अङ्ग्रेजीमा भाषाको उद्देश्य टेगमिम को व्याख्या गर्न बेकरले चारकोठे पद्धति प्रस्तुत गरेका छन्। उनका अनुसार 'राम पढ्छ' भन्ने वाक्यका 'राम' र 'पढ्छ' टेगमिमलाई यसरी देखाउन सकिन्छ :

'राम' टेगमिम

व्याकरण — शब्द

रूप -उद्देश्य — नाम

अर्थ- कर्ता — एक वचन, पुरुष, मानव

'पढ्छ' टेगमिम

व्याकरण — शब्द

रूप - विधेय — क्रिया

अर्थ- क्रिया — एक वचन, पुरुष, मानव

बेकरको यस पद्धतिमा वाइज (Wise) ले संशोधन गरे। फेरि पाइकले नौकोठे पद्धति प्रस्तुत गरे तर उनको प्रस्तुत गरेका नौकोठेमा कति कोठाहरू खाली भएकाले पुनः चार कोठे पद्धति प्रस्तुत गरे। पाइकले वार्णिक, व्याकरणिक र सान्दर्भिक तिन वटै सोपानक्रमका लागि चारकोठे पद्धति तयार पारेका छन्। उनका अनुसार :

| | |
|---|---|
| स्थान (Slot) | वर्ग (Class) |
| भूमिका (Role) | संसज्जन (Cohesion) |

टेगमिम विज्ञानमा विभिन्न टेगमिमको चर्चा गरिएको छ :

(क) एलो टेगमिम (Allo-tagmeme) : एउटै टेगमिमका विविध परिवेशमा देखा पर्ने विविध रूपहरूलाई एलोटेगमिम भनिन्छ।

(ख) सिन्टेगमिम (Syntagmeme) : विभिन्न टेगमिमबाट बनेको संरचनालाई सिन्टेगमिम भनिन्छ। सकर्मक वाक्य एउटा सिन्टेगमिम हो। यसमा कर्ता +कर्म+क्रिया टेगमिमहरू मिलेको छन्।

(ग) नाभिक (Nucleus) र परिधीय (Peripheval) टेगमिम

कुनै सिन्टेगमिममा केही टेगमिमहरू मुख्य र अरु गौण टेगमिमहरू हुन्छन्। मुख्य टेगमिमलाई केन्द्रीय वा नाभिक र गौण टेगमिमलाई परिधीय टेगमिम भनिन्छ।

सकर्मक वाक्यमा कर्ता, कर्म र क्रिया केन्द्रीय हुन्। यिनमा स्थानाधिकरण (स्थान जनाउने) र कालाधिकरण (समय जनाउने) जनाउने टेगमिम हरू पनि थप्न सकिन्छ, ती परिधीय टेगमिम हुन्। जस्तै : गणेशले हिजो सहरबाट रातो घडी किन्यो।

गणेशले - मुख्य
हिजो - परिधीय
सहरबाट - परिधीय
रातो —परिधीय
घडी - मुख्य

किन्यो - मुख्य
केन्द्रीय टेगमिम - अनिवार्य
परिधीय - ऐच्छिक

### ३.२.३ व्याकरणका विभिन्न तहका रूपार्थिमहरू (टेगमिम)

टेगमिमविज्ञानले भाषाका ३ वटा तह हुने बताएको छ :

१. व्याकरणिक तह
२. वार्णिक तह
३. सान्दर्भिक तह

यी तिनवटै तहमा आ–आफ्ना सोपानक्रम हुन्छन । यसबाहेक क्रम परम्परामा चर्चा गरिएको छ। यी मध्ये व्याकरणिक तहको सोपानक्रम र ती तहका रूपार्थिमहरू महत्त्वपूर्ण छन् । तिनीहरूका बारेमा टेगमिमविज्ञानले निकै जोड दिएको छ । सामान्यतः व्याकरणको सोपानक्रम यस प्रकार छ :

१. सङ्कथन
२. प्रकरण
३. वाक्य
४. उपवाक्य
५. पदावली
६. पद/शब्द
७. रूप

कतिपय भाषामा रूप नभई एकैचोटि शब्द मात्र आउने हुन्छ। कतिपय पद र पदावलीबिचमा भेद हुँदैन । सोपानक्रममा आउने यी भाषिक एकाइलाई पाइकले आर्थी प्रकार्यका आधारमा लघुतम एकाइ र विस्तृत एकाइका जोडा एकाइहरू देखाएका छन। उनका अनुसार :

| आर्थी कार्य | लघुतम एकाइ | विस्तृत एकाइ |
|---|---|---|
| सामाजिक सम्प्रेषण | संवाद | सङ्कथन |
| उद्देश्य विकास | प्रकरण | मनोवाद |
| प्रतिज्ञापन | उपवाक्य | वाक्य |
| नाम | शब्द | पदावली |
| मूलार्थ | रूप | धातु |

(बन्धु, २०७५ : ९१)

पाइकको यो तालिका अनुसार व्याकरणिक क्रममा माथि उल्लेख भए बाहेकका संवाद र मनोवाद पनि थपिएका छन् । यस अनुसार तल्लो एकाइबाट क्रमशः रूप, शब्द, पदावली, उपवाक्य, वाक्य, प्रकरण, मनोवाद, संवाद र सङ्कथन बन्दछन् । यी एकाइमा रहेक तल्ला एकाइ माथिल्ला एकाइका सरचक बन्दछन । यी एकाइहरूको क्रममा कहिलेकाहीं बिचको तहमा फड्को मार्ने स्थिति पनि हुन्छ। यस्तो स्थितिलाई स्थानान्तरण (level skiping) भनिन्छ। जस्तै : शिवले रीतालाई भात पकाउनु भन्यो।

यहाँ 'भात पकाउनु' सिङ्गो वाक्य कर्मका रूपमा आएको छ । यस्तो माथिल्लो एकाइ तल्लो एकाइमा गएर काम गर्दा त्यसलाई पश्चपाशन (Back Looping) भनिन्छ।

कहिलेकाहीं कुनै संरचना अर्को त्यस्तो तहको संरचनामा गुम्फित हुन्छ त्यसलाई बहुविध गुम्फन (Multiple mesting) भनिन्छ। जस्तै :

'खोटाङको साम्पाङ खोला र चाम्लिङ खोला क्षेत्रका बासिन्दाहरूको आर्थिक, सामजिक, सांस्कृतिक अध्ययन' भन्ने पदावलीमा यस्तो अवस्था रहेको छ।

## ३.२.४ व्याकरणका तह र तिनका टेगमिम

रूपार्थपरक व्याकरणका तह र तिनका टेगमिमहरू निम्नलिखित छन् :

१. सङ्कथन र संवाद (Discours and Dialogue

यी दुवै भाषिक अन्तर्क्रियाको पूर्ण रूप हुन् । संवाद प्रश्न र उत्तरको रूपमा आउने एकाइ हो । सङ्कथन भित्र धेरै संवाद आउन सक्छन् । सङ्कथनले अभाषिक व्यावहारिक सन्दर्भमा कथ्यको काम गर्दछ भने सामाजिक स्थितिहरूले सङ्कथनका रूपको निर्धारण गर्दछन । त्यसैले सङ्कथनका टेगमिमकाहरू तोक्न गाह्रो हुन्छ।

संवाद पनि वक्ता र स्रोताको सङ्ख्या र अवस्था अनुसार फरक फरक हुने भएकाले यसका टेगमिमहरूको स्पष्ट पहिचान गर्न गाह्रो पर्दछ।

२. प्रकरण र मनोभाव (paragraph and monologue)

सङ्कथन तहको स्थान (खाका) पूर्ति गर्ने भरक प्रकरण हो । मुख्य विषय (Theme) को विकास गर्ने कार्य प्रकरणको कार्य हो । संवादमा वक्ताको एउटा कथन प्रकरण हो । एउटा प्रकरणको उत्तरमा आउने वाक्यअरुको समष्टि प्रकरण हो। प्रकरणहरूले मनोभावको स्थान (खाका) मा काम गरेका भए ती मनोभावहरूले संवादको स्तर पूर्ति गर्दछन् । संवादका क्रममा जब कुनै वक्ताले केही भन्छ भने उसका कथनको पूर्ण अंश मनोभाव हो । मनोभावको कार्य पनि विषयको विकास गर्नु हो । कतिपय अवस्थामा

एउटा वाक्य नै मनोभाव हुन सक्छ। प्रकरण र मनोभाव दुवैले कुनै विचारलाई निश्चित सिलसिलामा विकसित गर्दछ।

### ३. वाक्य

टेगमिम व्याकरणमा स्वतन्त्र अस्तित्व भएको एक किसिमको पूर्ण संरचना वाक्य हो। यसले प्रकरणका तहको स्थान (खाका) मा भरकको काम गर्दछ। यसको आर्थी कार्य प्रतिज्ञापन गर्नु हो।

**वाक्यतहका टेगमिमहरू**

(क) **आधार टेगमिम :** केन्द्रीय नाभिक टेगमिम आधार टेगमिम हो। यस्ता आधार वाक्यमा एकभन्दा बढी भएमा आधार १,२,३ गरी प्रस्तुत गरिन्छ।

(ख) **परिधीय टेगमिम :** आश्रित उपवाक्यहरू, कालाधिकरण, स्थानाधिकरण परिधीय टेगमिम हुन्।

(ग) **संयोजन टेगमिम :** संयोजकहरू संयोजन टेगमिम हुन्।

### ४. उपवाक्य (Clause)

एउटै विधेय वा विधेय समान पदावली भएको टेगमिमहरूको समूहलाई उपवाक्य भनिन्छ। उपवाक्यले वाक्यतहको स्थान पूर्ति गर्दछ। टेगमिमविज्ञानमा भाषाको विश्लेषण कार्य प्रायः व्याकरणबाट र त्यसमा पनि उपवाक्यबाट थालिन्छ। उपवाक्यलाई आधारभूत वाक्य पनि भनिन्छ। उपवाक्यबाट वाक्य र वाक्यभन्दा माथिका प्रकरण र सङ्कथन स्तरमा उक्लिन र पदावली, पद र रूपिम स्तरमा ओर्लिन पनि सक्तछ। उपवाक्यका टेगमिम पदावली हुन्। उपवाक्यले पनि प्रतिज्ञापनको आर्थी कार्य पुरा गर्दछ।

### ५. पदावली

उपवाक्य भन्दा तल्लो र पद भन्दा माथिल्लो टेगमिमको समूह पदावली हो। पदावलीलाई अन्तः केन्द्रिक र बहिः केन्द्रिक संरचना गरी हेर्न सकिन्छ। पदावलीका टेगमिम पद हुन्।

### ६. पदावली

उपवाक्य भन्दा तल्लो र पद भन्दा माथिल्लो टेगमिमको समूह पदावली हो। पदावलीलाई अन्तः केन्द्रिक र बहिः केन्द्रिक संरचना गरी हेर्न सकिन्छ। पदावलीका टेगमिम शब्द हुन्।

### ७. पद/शब्द

पदावली भन्दा तल्लो र रूपिम भन्दा माथिल्लो टेगमिमको समूह शब्द वा पद हो। यसमा प्रातिपदिक र रूपायन गरी दुई प्रकारका टेगमिम हुन्छन्। यसमा प्रातिपदिक नाभिकीय टेगमिम हो भने रूपायन टेगमिम परिधीय हो। पूर्व सर्ग तथा परसर्ग परिधीय हुन्। आधार पद नाभिकीय हो।

### ३.२.४ इटिक र इमिक

यी शब्द क्रमशः फोनेटिक (phonetic) र फोनेमिक (Phonemic) बाट आएका छन्। पाइकले १९४४ मा सर्वप्रथम यी शब्दको प्रयोग गरेका हुन्। एकाइमा इमिक रूपको खोजी नै टेगमिम विज्ञानको लक्ष्य हो। व्यवस्था भित्रको एउटै रूपलाई इमिक र विविध रूपलाई इटिक भनिन्छ।

### ३.२.५ नेपाली वाक्यहरूको अध्ययन

मारिया हरि (१९७३) ले **नेपाली वाक्यहरूको मोटामोटी व्यवस्थित सङ्गठन** (Tentative Systematic organization of Nepali Sentences) शीर्षक लेखमा नेपाली वाक्यलाई रूपार्थपरक मान्यतामा हेरिएको छ। उनका अनुसार नेपाली वाक्यका प्रकार निम्नानुसार छन् :

| + सन्तुलन | | | – सन्तुलन | | |
|---|---|---|---|---|---|
| + सकारात्मक | तटस्थ | – सकारात्मक | +सकारात्मक | तटस्थ | – सकारात्मक |
| संयुक्त | वैकल्पिक | प्रतिबन्धित | सोपाधिक | समतुल्य | अनुमोदन |
| हेतु | अन्तर्भुक्त | विलोम | परिणाम | स्थानिक | परिणाम |
| अन्वय | परिगणन | विरुद्ध | कारण | परिचयात्मक | |

१. संयुक्त वाक्य – उसले दाजुको चिठी पढ्यो र खुसी भयो।

२. वैकल्पिक वाक्य – भरे कि म आउँछु कि तपाई आउनोस्।

३. प्रतिबन्धित वाक्य – त्यहाँ गृहस्थी त हुन्छ तर खेती हुँदैन

४. हेतु वाक्य – भात तताएर खाउ,किनकि एकदम चिसो छ।

५. अन्तर्भुक्त वाक्य – अहिले न घाम लाग्छ, न पानी पर्छ।

६. विलोम वाक्य – ठुलो भएपछि होइन, अहिले नै बानी बसाल्नु पर्छ

७. अन्वय वाक्य – सिस्ने एउटा सानो गाउँ छ, एउटा आशिक्षित गाउँ भनौं।

८. परिगणन वाक्य – सात बजे उठ्यो, हतार हतार गर्‍यो, काममा गयो।

९. विरुद्ध वाक्य – अब हामी विद्यार्थी नै बनौं मास्टर नबनौं

१०. सोपधिक परिणाम वाक्य – आज नभए भोलि हुन्छ।

११. समतुल्य वाक्य – जब म बिरामी हुन्छु तब तिमीले मद्दत दिनु।

१२. अनुमोदन परिणाम वाक्य – छिटो हिंडे पनि पुग्न सक्दैन।

१३. कारण वाक्य – हिजो मैले रेस्टुरेन्टमा खाएको हुनाले म बिरामी परें।

१४. स्थानिक परिचयात्मक वाक्य – हामी सहर गएको उसले थाहा पायो। (बन्धु, २०५७ : १०२)।

अस्टिन हेलले वाक्यलाई सकर्मक र अकर्मक गरी दुई भागमा बाँडेका छन्। उनका अनुसार सकर्मक र अकर्मक दुवै वाक्यमा घटना र अवस्था हुन्छन्। सकर्मक वाक्यको घटना र अवस्थामा +/- अभिकर्ता, अनुगमक र सन्दर्भ हुने गर्छ भने अकर्मक वाक्यको घटना र अवस्थामा +/- अभिकर्ता रहन्छ। चूडामणि बन्धु (२०५७ : १०३) ले हेलको वाक्य विश्लेषणको ढाँचालाई नेपाली वाक्यका सन्दर्भमा निम्ना अनुसार प्रस्तुत गरेका छन् :

| | | अनुगमक र सन्दर्भ | अनुगमक | सन्दर्भ | - |
|---|---|---|---|---|---|
| घटना | + कर्ता | १ | २ | ३ | ४ |
| घटना | - कर्ता | ५ | ६ | ७ | ८ |
| अवस्था | + कर्ता | ९ | १० | ११ | १२ |
| अवस्था | - कर्ता | १३ | १४ | १५ | १६ |

यस तालिका अनुसार घटनावाचक जति भूतकालमा र अवस्थावाचक जति वर्तमान कालमा रहन्छन्। अधिकर्ता भनेको आफै सक्रिय भई कुनै कार्य सम्पन्न गर्ने वा कसैलाई प्रेरित गर्ने प्रेरक कर्ता हो। अधिकर्ता भएका उपवाक्यलाई मात्र कर्म र भाव वाच्यमा परिवर्तन गर्न सकिन्छ। त्यसैगरी अधिकर्ता भएका उपवाक्यलाई मात्र निमित्तार्थक र प्रेरणार्थकमा परिवर्तन गर्न सकिन्छ। अनुगमक भन्नाले आफै सक्रिय हुनसक्ने र अधिकर्ताद्वारा प्रमाणित हुने भन्ने कुरा बुझ्नुपर्छ। अधिकर्ता नभएका ठाउँमा अनुगमकले उद्देश्यको काम गर्छ । त्यसको विधेयसँग लिङ्ग, वचन र पुरुषको सङ्गति पनि हुन सक्छ । माथिका अनुसार ११ वटा इटिकहरू नेपालीमा पाइन्छन्। बन्धु (२०५७ : १०३-१०४) का अनुसार माथिको तालिका अनुसारका वाक्यहरू निम्नानुसार छन् :

१. रामले हरिलाई किताब दियो । हरिले रामसँग किताब लियो । रामले भाइलाई घर पठायो।

२. रामले हरिलाई कुट्यो। रामले भात खायो।

३. राम घर गयो। राम गाउँबाट आयो।

४. राम हाँस्यो। राम रोयो।
५. मलाई यो जुत्ता मिल्यो। मलाई पोखरा राम्रो लाग्यो।
६. राम जन्म्यो। राम दुब्लायो । घर राम्रो बन्यो।
७. रामलाई चिलायो। हरिलाई जाडो भयो।
८. पानी पऱ्यो। घाम लाग्यो। जाडो भयो।
१३. म सित पैसा छैन। मेरो कलम छैन।
१४. कलम राम्रो छ । मह गुलियो हुन्छ।
१५. मलाई सन्चै छ । यहाँ जाडो छ।

## ३.२.६ रूपार्थपरक व्याकरण : शक्ति र सीमा

### शक्ति

रूपार्थपरक व्याकरणका मुख्य उपलब्धि वा शक्तिलाई निम्न लिखित बुँदामा प्रस्तुत गर्न सकिन्छ :

(क) मानव व्यवहारको एकीकृत सिद्धान्तका रूपमा भाषाको अध्ययन गर्नु।
(ख) रूप र अर्थ दुवैलाई महत्त्व दिनु।
(ग) रूपदेखि वाक्यसम्मको अध्ययनमा सीमित रहेको भाषिक अध्ययनलाई प्रकरण र सङ्कथनसम्म विस्तार गर्नु।
(घ) साहित्य र लोकसाहित्यको अध्ययनमा समेत उपयोगी।
(ङ) भाषाशिक्षण, अनुवाद र कोशनिर्माणमा समेत उपयोगी।
(च) सरलताबाट जटिलतातर्फ उन्मुख भएकाले भाषा तथा व्याकरणि शिक्षणमा उपयोगी।

### सीमा

रूपार्थपरक व्याकरणका सीमालाई निम्न लिखित बुँदामा प्रस्तुत गर्न सकिन्छ :

(क) अर्थलाई पनि महत्त्व दिने भनिए पनि संरचनावादी मान्यताबाट माथि उठ्न नसक्नु।
(ख) बाह्य संरचनामा जोड दिने हुँदा आन्तरिक संरचनाको अध्ययन हुन नसक्नु।
(ग) वर्गीकरणमुखी भएकाले झन्झटिलो छ। सामग्री सङ्कलन र विश्लेषण गर्न समय र खर्च बढी लाग्ने गर्दछ।
(घ) यसका कतिपय मान्यताहरूको विस्तृत र ठोस अध्ययन हुन अझै बाँकी रहेको।

## ३. ३ व्यवस्थापरक/प्रकार्यपरक भाषाविज्ञान : आधारभूत मान्यता

भाषाविज्ञानका विभिन्न सिद्धान्त मध्ये व्यवस्थापरक /प्रकार्यपरक पनि एक हो। यस सिद्धान्तका बारेमा विभिन्न शीर्षक-उपशीर्षकमा चर्चा गरिएको छ।

### ३.३.१ पृष्ठभूमि : फर्थको भाषिक चिन्तन

संरचनावादी भाषाविज्ञानको विकासक्रममा विभिन्न सम्प्रदायहरू देखा परे। ती सम्प्रदायहरू मध्ये लन्डन सम्प्रदाय पनि एक हो। जोन रूपर्ट फर्थ अर्थात् जे.आर.फर्थ (१८९०-१९६०) लन्डन सम्प्रदायका अगुवा हुन्। फर्थले सन् १९२० देखि १९२८ सम्म भारतको लाहोरमा अङ्ग्रेजी विषयको प्राध्यापन कार्यमा संलग्न भएर फर्किए पछि यस सम्प्रदायको स्थापना गरेका हुन्। सन् १९४१ मा रविन्स, सार्प, ह्विट्ली, मिचेल आदि आफ्ना शिष्यसँग मिलेर फर्थले यो सम्प्रदाय स्थापना गरेका हुन्। यस सम्प्रदायले ध्वनिविज्ञानका क्षेत्रमा महत्त्वपूर्ण काम गरेको छ। यो सम्प्रदाय व्यवस्थापरक भाषविज्ञानका पृष्ठभूमिका रूपमा रहेको छ।

फर्थले भाषाको ध्वनिका (क) ध्वनिक एकाइ र (ख) ध्वनिगुणिक एकाइ गरी दुई वटा एकाइ हुने बताएका छन्। उनका अनुसार ध्वनिक एकाइ भनेको भाषाको खण्डीय ध्वनि अथवा स्वर र व्यञ्जन ध्वनि हुन् भने ध्वनिगुणिक एकाइ भनेको खण्डेतर ध्वनि (मात्रा, बलाघात, लय, सुर, तान, अनुनासिकता) हुन्। उनले ध्वनिक तहमा मात्र नभएर अक्षर, शब्द र वाक्यका तहमा पनि यस प्रकारको भेद हुने बताएका छन्। जस्तै :

(१) **शब्दका तहमा**

घर, रुख, आगो ( सामान्य अर्थ- शाब्दिक अर्थमा)

घर?, रुख ?, घर!, रुख!, आगो ? आगो ! (अरु अर्थमा- शब्दगुणिक) )

(२) **वाक्यका तहमा**

ऊ घर जान्छ। ( सामान्य अर्थ- वाक्यार्थ)

ऊ घर जान्छ ? ऊ घर जान्छ ! (व्याक्यगुणिक)

फर्थले भाषालाई बहुव्यवस्थावादी मानेका छन्। उनले व्याकरण र अर्थका क्षेत्रमा पनि काम गरेका छन्। फर्थले भाषाविश्लेषणका चारओटा स्तरको चर्चा गरेका छन्: (क) ध्वनि (ख) वर्ण (ग) व्याकरण (घ) अर्थ।

यही आधारमा उनले भाषालाई ध्वनि व्यवस्था, वर्ण व्यवस्था, व्याकरण व्यवस्था र अर्थ व्यवस्था गरी चार वटा व्यवस्थाका रूपमा चर्चा गरेका छन्। उनले भाषा र अर्थलाई परस्पर बाटिएका वस्तु मानेका छन्। फर्थका अनुसार कुनै एउटा सिद्धान्त वा एक रेखीय व्याकरणले भाषाका सबै पक्षको विश्लेषण गर्न सक्दैन। फर्थका यी मान्यताका पृष्ठभूमिमा ह्यालिडेले व्यवस्थापरक व्याकरणको प्रतिपादन गरेका हुन्।

फर्थले भषालाई बहुव्यवस्था मानेकामा ह्यालिडेले एक व्यवस्था मानेका छन्। फर्थले ध्वनिलाई खण्डीय र खण्डेतर गरी हेरेकामा ह्यालिडेले स्वर र व्यञ्जन अर्थात् खण्डीय रूपमा मात्र हेरेका छन्। फर्थ संरचनावादी भएकाले उनी भाषालाई संरचना वा रूप मान्दछन् भने ह्यालिडेले भाषालाई प्रकार्यात्मक मान्दछन्। यसरी

ह्यालिडेले आफ्ना गुरु फर्थका मान्यताका पृष्ठभूमिमा भाषालाई कार्यपरक र व्यवस्थापरक मानेका छन् । ह्यालिडेको यही भाषिक चिन्तन नै आधुनिक भाषाविज्ञानका क्षेत्रमा व्यवस्थापरक वा प्रकार्यपरक व्याकरणका नामले सु–परिचित रहेको छ।

फर्थको भाषिक मान्यताका पृष्ठिभूमिमा उनका चेला ह्यालिडेले व्यवस्थापरक व्याकरणको विकास गरेका हुन् । फर्थका कार्यबाट प्रभावित भएर उनका चेला ह्यालिडेले प्रतिपादन गरेको हुनाले यस व्याकरणलाई **नवफर्थवादी व्याकरण** पनि भनिन्छ । त्यस्तै ह्यालिडे र उनका सहयोगीबाट यस सिद्धान्तको प्रतिपादन भएकाले यसलाई **ह्यालिडे सम्प्रदाय** पनि भनिन्छ। यसमा व्याकरणात्मक कोटि /धारा (लिङ्ग, वचन, पुरुष, काल, भाव, पक्ष, वाच्य, करण, आदर) लाई व्यवस्था र व्याकरणका नियमहरूलाई विकल्पका रूपमा लिइने हुनाले यस सिद्धान्तलाई **व्यवस्था विकल्प पद्धति** पनि भनिन्छ। साथै यसमा केही मापकहरू र केही कोटिहरूको चर्चा हुने भएकाले यसलाई **माप र कोटि व्याकरण** पनि भनिएको पाइन्छ । पछिल्लो समयमा भने यसलाई मूलतः **व्यवस्थापरक व्याकरण** भनिन्छ। यसमा भाषाको प्रकार्यपरक अध्ययन हुने भएकाले यसलाई **प्रकार्यपरक व्याकरण** पनि भनिन्छ।

### ३.३.२ व्यवस्थापरक भाषाविज्ञानको विकास

व्यवस्थापरक सिद्धान्तले एकै पटक पूर्णता पाएको होइन । यसका प्रवर्तक एम.के. ह्यालिडे (Michael Alexander Kirkwood Haliday, 1925) हुन् । उनले आफ्ना गुरु फर्थका चिन्तनका पृष्ठभूमिमा क्याटफोर्ड, एलिस, बेरी, हड्सन, सिन्क्लेयर, मुइर आदि भाषाशास्त्रीहरूको सहयोगमा यसलाई विभिन्न चरणमा पूर्णता दिएका हुन्। ह्यालिडेले लन्डन विश्वविद्यालय, क्याम्ब्रिज विश्वविद्यालय र बेङजिङ विश्वविद्यालयमा अध्ययन गरेको पाइन्छ। उनले यस सिद्धान्तको पूर्णताका लागि सन् १९६१, १९६६, १९६८, १९६९ र १९७० मा विभिन्न लेखहरू मार्फत यस सिद्धान्तका बारेमा चर्चा गर्दै यसलाई पूर्णता दिएका हुन् । यस सिद्धान्तलाई समय क्रममा परिमार्जन गर्दै आइएको पाइन्छ। ह्यालिडे र उनका अनुयायीहरू पछिल्ला यसमयमा पनि यसमा क्रियाशील रहेको पाइन्छ । पछिल्ला चरणमा यसभित्र पनि विभिन्न भेदहरू रहेको पाइन्छ।

व्यवस्थापरक व्याकरणको विकास प्रक्रियालाई मूलतः निम्न लिखित चार चरणमा हेर्न सकिन्छ।

**१. पहिलो चरण : कोटिहरूको स्थापना**

यस सिद्धान्तका विकासको पहिलो चरणमा ह्यालिडेले चारओटा कोटिहरूको स्थापना गरेको पाइन्छ :

(क) एकाइ
(ख) वर्ग
(ग) संरचना
(घ) व्यवस्था

२. **दोस्रो चरण : सैद्धान्तिक प्रतिपादन**

दोस्रो चरणमा भाषाको व्यवस्थापरक सिद्धान्तका बारेमा चर्चा गरिएको पाइन्छ। यस चरणमा व्यवस्थापरक व्याकरणको सैद्धान्तिक चर्चा र यसको स्थापनामा जोड दिएको पाइन्छ।

३. **तेस्रो चरण : तिनओटा आयामको स्थापना**

व्यवस्थापरक व्याकरणको विकासका क्रममा तेस्रो चरणमा पुग्दा निम्नलिखित तिन ओटा आयामको स्थापना गरिएको पाइन्छ :

(क) श्रेणी
(ख) द्योतन
(ग) सूक्ष्मता

४. **चौथो चरण : चौथो आयामको थप**

व्यवस्थापरक व्याकरणको पछिल्लो चरणमा भाषाका तिनओटा आयाममा अर्को एउटा आयाम थपेर चार ओटा आयाम बनाइएको छ। यसरी थपिएको पछिल्लो आयाम 'गहिराइ' हो।

माथि लेखिए अनुसार व्यवस्थापरक व्याकरणको विकास चार वटा चरणमा आवश्यक परिमार्जन सहित भएको पाइन्छ।

### ३.३.३ व्यवस्थापरक व्याकरण : आधारभूत मान्यता

**(क) चारकोटि**

१. एकाइ (Unit)
२. वर्ग (Class)
३. संरचना (Structure)
४. व्यवस्था (System)

**(ख) चार आयाम**

१. श्रेणी (Rank)
२. द्योतन वा प्रतिपादन (Exponance)
३. सूक्ष्मता (Delicacy)
४. गहिराइ (Depth)

### ३.३.३.१ कोटिहरू

ह्यालिडेले सन् १९६१ मा 'व्याकरण सिद्धान्तका कोटिहरू' र 'माप तथा कोटिव्याकरणका सिद्धान्त' जस्ता लेखहरू मार्फत भाषाका कोटिको चर्चा गरेका छन्। ह्यालिडेका अनुसार भाषिक विश्लेषणको पद्धति वा मापक भनेको कोटिहरूको व्यवस्था नै हो । उनका अनुसार एकाइ, संरचना, वर्ग र व्यवस्था गरी भाषाका चारओटा कोटि हुने गर्दछन् । यी चारओटा कोटिलाई पनि सौद्धान्तिक कोटि र वर्णनात्मक कोटि गरी दुई भागमा वर्गीकरण गर्न सकिन्छ।

(क) **सैद्धान्तिक कोटि** : भाषामा सिद्धान्तका रूपमा मात्र रहेका कोटिलाई सैद्धान्तिक कोटि भनिन्छ। एकाइ, संरचना, वर्ग र व्यवस्था गरी चारओटा कोटि सौद्धान्तिक कोटि हुन् । यी कोटि सबै भाषामा नहुन सक्छन्, घटीबढी हुन सक्छन् । भाषा विशेषमा भए पनि नभए पनि यी चार ओटा कोटिलाई सैद्धान्तिक कोटिका रूपमा लिइएको पाइन्छ।

(ख) **वर्णनात्मक कोटि** : सैद्धान्तिक कोटिलाई कुनै भाषाका सन्दर्भमा हेर्दा पाइने कोटिको वास्तविक व्यवस्थालाई वर्णनात्मक कोटि भनिन्छ । वर्णनात्मक कोटि भाषाको प्रकृति अनुसार घटीबढी हुन सक्छन्। वर्णनात्मक कोटि भाषा पिच्छे फरक हुन्छ। नेपाली भाषाका सन्दर्भमा सैद्धान्तिक कोटि र वर्णनात्मक कोटिलाई निम्न अनुसार देखाउन सकिन्छ :

| **सैद्धान्तिक कोटि** | | | **वर्णनात्मक कोटि** |
|---|---|---|---|
| (१) | एकाइ | → | वाक्य, उपवाक्य, पदसमूह, शब्द र रूप |
| (२) | संरचना | → | उद्देश्य + विधेय, विशेषण + विशेष्य, क्रियाविशेषण + क्रिया आदि। |
| (३) | वर्ग | → | नामिक वर्ग (नाम, सर्वनाम, विशेषण), क्रियात्मक वर्ग (क्रिया) आदि। |
| (४) | व्यवस्था | → | लिङ्ग, वचन, पुरुष, आदर, काल, भाव, पक्ष, वाच्य, कारक आदि। |

१. **एकाइ :**

भाषाको विस्तारलाई एकाइ भनिन्छ। व्याकरणिक आधारमा हेरिने विस्तार नै एकाइ हो। नेपाली भाषामा भाषाको लघुतम भाषिक एकाइ रूप हो। रूप पछि शब्द, शब्दावली, उपवाक्य हुँदै वाक्यका तहमा पुग्दा भाषाको विस्तारको क्रम टुङ्गिन्छ। यस प्रकार भाषाको विस्तारका क्रममा देखा पर्ने यस्ता तहहरू एकाइ हुन् । एकाइ सैद्धान्तिक कोटि हो। व्यवस्थावादीहरूको अनुसार एकाइको श्रेणी हुन्छ। एकाइहरूमा सोपानक्रम तलदेखि माथिसम्म जाने र माथिदेखि तलसम्म झर्ने खुट्किलो हुन्छ। यस प्रकारको सोपानक्रमलाई देखाउन वाण चिह्न (↓)को प्रयोग गरिन्छ । यो वाण

चिह्नलाई श्रेणी मापदण्ड भन्ने चलन छ। यसमा ठुलोबाट सानोतिर झरेको देखाउन तलतिर फर्किएको वाणचिह्न ( ) सानोबाट ठुलोतिर गएको देखाउन माथितिर फर्किएको वाणचिह्न ( ) र दुवैतिरको अवस्था देखाउन एउटा रेखामा दुवैतिर फर्किएको वाणचिह्न ( ) को प्रयोग गरिन्छ, जस्तै :




२. **संरचना**

सामान्य अर्थमा संरचना भनेको बनोट हो। साना एकाइबाट ठुला एकाइको बनोट हुने गर्दछ। यस प्रकारको बनोटलाई संरचना भनिन्छ। नेपाली भाषाको संरचना निम्नानुसार रहेको पाइन्छ :

| साना एकाइ | ठुला एकाइ |
|---|---|
| रूप (घर) | शब्द (घरेलु) |
| शब्द (घरेलु) | पदसमूह (घरेलु सामान) |
| पदसमूह (घरेलु सामान) | उपवाक्य (जसले मह काढ्छ) |
| उपवाक्य (जसले मह काढ्छ) | वाक्य (राम भात खान्छ ) |

रूपको संरचना हुँदैन। यसलाई अर्थका आधारमा टुक्र्याउन नसकिने भएकाले व्यवस्थावादीहरू यसलाई संरचना मान्दैनन्। व्यवस्थावादीहरूका अनुसार संरचना शृङ्खलामा देखिन्छ। जस्तै : शब्दमा उपसर्ग आउने ठाउँमा प्रत्यय आउँदैन। अथवा अगाडि उपसर्ग अथवा पछाडि प्रत्यय शृङ्खलाबद्ध भएर देखिने अवस्था संरचना हो। नेपाली वाक्यमा उद्देश्यपछि विधेय आउँछ। यस प्रकार नेपाली वाक्यको संरचना उद्देश्य + विधेयको संयोजन हो। भाषा अनुसार भाषिक एकाइका अलग अलग संरचनाहरू हुने गर्दछन्। प्रत्येक एकाइका संरचक घटकहरू हुन्छन्। माथिको उदाहरणमा शब्दको रूप, पदसमूहको शब्द, उपवाक्यको पदसमूह र वाक्यको उपवाक्य संरचक घटक हुन्। यसरी नै वाक्यमा उद्देश्य, विधेय, पूरक जस्ता घटकहरू पनि आउँछन्। यस प्रकार भाषाको कुनै एकाइ बन्नका लागि त्यसमा देखा पर्ने तल्ला एकाइहरूको शृङ्खला नै संरचना हो। जस्तै :

घरेलु = घर + एलु

कालो केटो = कालो+केटो

३. **वर्ग**

भाषिक संरचनामा उही काम गर्ने शब्द वा अवस्थालाई वर्ग भनिन्छ। जुन-जुन शब्दहरूले एउटै प्रकारको काम गर्छन्, ती शब्दहरू एउटै वर्गमा पर्दछन्। वाक्यमा निम्न लिखित तिन वटा वर्ग देखिन्छन् :

(क) नामिक वर्ग ⟶ नाम, सर्वनाम, विशेषण

(ख) क्रियात्मक वर्ग ⟶ कार्यव्यापार, स्थिति, अवस्था जनाउने शब्द, जस्तै : जान्छ, खान्छ, बस्छ आदि।

(ग) क्रियाविशेषण वर्ग ⟶ क्रियाको काम, अवस्था वा शैली जनाउने, जस्तै : बिस्तारै, खपाखप, ढकमक्क आदि।

नामिक वर्गले वाक्यमा सामान्यतः उद्देश्यको काम गर्दछ। क्रियात्मक वर्गले विधेयको काम गर्दछ। क्रियाविशेषण वर्ग पनि विधेयकै रूपमा रहन्छ।

भाषामा वर्ग भनेको शब्दहरूको सेट वा समुच्चय हो। यस्तो सेट वा समुच्चयले वाक्यको संरचनामा समान कार्य गर्दछ । वर्गको निश्चित ठाउँ हुन्छ, जस्तै : कर्मभन्दा पहिले कर्ता र कर्मभन्दा पछाडि क्रिया रहनु, दुई ओटा कर्म भएमा अप्रत्यक्ष कर्म पहिले र प्रत्यक्ष कर्म पछि रहनु आदि वर्गका निश्चित ठाउँ हुन्। वर्गलाई विभिन्न उपभेद पनि गर्न सकिन्छ। नेपालीमा नामिक वर्ग अन्तर्गत नाम, सर्वनाम, विशेषण जस्ता उपभेद गरिएको पाइन्छ। यसरी नै नेपालीमा नाम, सर्वनाम, क्रियाविशेषण, क्रिया आदि वर्गको पनि उपभेद गरिएको पाइन्छ। यिनका पनि अनेक भेद, उपभेद छन् :

**नामका प्रकार**

(क) सङ्ख्याका आधारमा → सङ्खेय (गन्न सकिने) – भैंसी, गाई, घर
असङ्खेय (गन्न नसकिने)–पानी, माटो,

(ख) प्राणत्व → सजीव (मानिस)
निर्जीव (थाल)

(ग) चेतनाका आधारमा → सचेतन (चेतना भएको)
अचेतन (निर्जीव)

(घ) मानवीयता → मानवीय– राम, लक्ष्मी
मानवेतर– रुख, पानी

(ङ) रूपका आधरामा → मूर्त – मान्छे, रुख
अमूर्त – दया, माया

**सर्वनामका प्रकार :**

१. पुरुष वा व्यक्तिवाचक सर्वनाम – म, तँ, ऊ
२. दर्शक सर्वनाम – यो, यी, त्यो, ती
३. सम्बन्धवाचक सर्वनाम – जो, जुन
४. प्रश्नवाचक सर्वनाम – को, के, कुन
५. निजवाचक – म, आफैँ, आफू

**विशेषणका प्रकार**

१. गुणबोधक (वाचक) विशेषण – रातो, कालो, असल, खराब
२. सङ्ख्याबोधक (वाचक) – एक, दश, पच्चिस
३. परिमाण बोधक – धेरै, थोरै, अलिकति
४. सार्वनामिक – यो, त्यो, जुन

**क्रियाविशेषणका उपभेद**

१. समयवाचक – भर्खर, सधैँ
२. स्थानवाचक – उँभो, सामुन्ने
३. रीतिवाचक – कस्सेर, सुटुक्क

४. परिमाण वाचक - निकै, जति, थोरै

५. कारणवाचक - खान, जानाले

**क्रियाका प्रकार**

१. सर्कमक : कर्म लिने क्रिया।

२. अकर्मक : कर्म नलिने क्रिया।

३. द्विकर्मक : दुई वटा कर्म लिने क्रिया।

४. पूरकापेक्षी : पूरकको अपेक्षा गर्ने क्रिया। आदि।

**४. व्यवस्था**

व्यवस्थावादीहरूले भाषामा विकल्पहरूको समुच्चयलाई व्यवस्था मानेका छन्। उनीहरू व्यतिरेकी (भिन्नता) चयनलाई व्यवस्था मान्दछन्। एउटाको अर्थभन्दा अर्कोको अर्थ भिन्न हुने विकल्पहरू मध्ये निश्चित विकल्पहरूको चयन हुँदैन। विभिन्न विकल्पहरूमध्ये निश्चित विकल्पहरूको चयन हुन्छ। व्यवस्थावादीहरूले विकल्पहरूको समूच्चय निम्न लिखित तिनओटा अवस्थामा प्राप्त हुने बताएका छन् :

१. एकाइहरूको श्रेणी क्रम हुन्छ। शब्द, पदसमूह, उपवाक्य, वाक्यहरू मध्ये अभिव्यक्तिका लागि कुन एकाइको चयन गर्ने भन्ने विकल्प हुन्छ।

२. कुनै एकाइले माथिल्लो एकाइमा गएर काम गर्दा विकल्प हुन्छ।

३. कहिले काहीँ एउटा विकल्पको चयन गर्दा अर्को विकल्पको पनि चयन गर्नुपर्छ।

यिनै विकल्पहरूको व्यवस्थालाई व्यवस्थावादीहरूले व्यवस्था भनेका छन्। निष्कर्षमा भन्नुपर्दा व्यवस्था भनेको व्याकरण हो। व्यवस्थापरक व्याकरणमा व्यवस्थाहरूको शृङ्खलालाई नै व्याकरण भनिन्छ। एकपछि अर्को विकल्प छान्दै जानु र छानिएका विकल्पहरूलाई एक आपसमा जोड्नु र शृङ्खलाबद्ध बनाउनु नै यस सिद्धान्त अनुसार व्यवस्था हो।

भाषाको व्यवस्था अनुसार पदको बेगलाबेग्लै अर्थ हुन्छन्। वाक्यका तहमा प्रयोग हुँदा हरेक पदका बेग्लाबेग्लै अर्थ हुन्छन्। यस प्रकार वाक्यका तहमा प्रयोग हुने पदका अर्थलाई सामान्य भाषामा व्याकरणात्मक धारा वा कोटि भनिन्छ। लिङ्ग, वचन, पुरुष, आदर, काल, भाव, पक्ष, वाच्य, धुव्रियता (करण, अकरण), समापकता (समापक, असमापक) आदि व्याकरणात्मक धारा हुन्। यस प्रकार भाषामा पदहरूको निश्चित क्रम शृङ्खला हुनु र विकल्पहरूको अवस्था रहनुलाई व्यवस्थापरक भाषाशास्त्रीहरूले व्यवस्था भनेका छन्।

## ३.३.३.२ आयामहरू

व्यवस्थापरक व्याकरणमा चारओटा कोटिहरूलाई एकअर्काबाट छुट्याउने चारओटा आयामको चर्चा गरिएको छ। यस सिद्धान्तका जन्मदाता ह्यालिडेले सुरुमा

तिनओटा आयामको चर्चा गरेका थिए। पछि अर्को आयाम गहिराइ थपेका छन्। चार आयामहरू निम्न लिखित छन् :

१. श्रेणी
२. सूक्ष्मता
३. द्योतन वा प्रतिपादन
४. गहिराइ

## १. श्रेणी

भाषिक एकाइको सोपानक्रम हुन्छ र त्यसमा क्रमहरूको आपसी सम्बन्ध देखाउने शृङ्खला हुन्छ। त्यही शृङ्खलालाई व्यवस्थावादीहरूले श्रेणी भनेका छन्। यसरी एउटा निश्चित मापदण्डहरूभित्र सोपानहरूको एकाइमा कुन, कहाँ र के-कस्तो सम्बन्ध छ भन्ने कुरा नै श्रेणी हो। एकाइमा सबै भन्दा तल्लो, बिचको र माथिको गरी सोपानक्रममा देखाइने र यी एकाइहरू बिचको आपसी सम्बन्ध प्रस्टिने विषय नै श्रेणी हो। नेपाली भाषाका एकाइहरूलाई श्रेणीका आधारमा निम्नानुसार देखाउन सकिन्छ :

| श्रेणीको बढ्दो क्रम ↑ | | | श्रेणीको घट्दो क्रम ↓ |
|---|---|---|---|
| | ५ | वाक्य | १ |
| | ४ | पदसमूह | २ |
| | ३ | उपवाक्य | ३ |
| | २ | शब्द | ४ |
| | १ | रूप | ५ |

यस अनुसार सबैभन्दा सानो रूप त्यसपछि शब्द, त्यसपछि पदसमूह, त्यसपछि उपवाक्य र सबैभन्दा ठुलो वाक्य नेपाली भाषाको श्रेणीक्रम हो। यस अनुसार हरेक माथिल्लो श्रेणीमा त्यसभन्दा ठिक तलको श्रेणीले काम गरेको हुन्छ। उदाहरणका लागि शब्दमा रूपले, पदसमूहमा शब्दले काम गरेको हुन्छ।

जस्तै :

रूप – घर, एलु
शब्द – घरेलु (घर + एलु)
पदसमूह – घरेलु समान
उपवाक्य – घरेलु समान बेचेर
वाक्य – घरेलु समान बेचेर उसले पैसा कमायो

तर कतिपय अवस्थामा यो क्रम भङ्ग भएको पाइन्छ। नेपालीमा सामान्यतः मिश्र वाक्यहरूमा मात्र उपवाक्यहरू आएका हुन्छन्। सरल र संयुक्त वाक्यमा भने शब्दले सोझै वाक्यमा गएर काम गर्ने, पदसमूहले सोझै वाक्यमा गएर काम गर्ने, अवस्था पनि हुन्छ। यसको अवस्थालाई श्रेणीमा देखा पर्ने क्रमभङ्ग वा श्रेणीअन्तर वा श्रेणीभङ्ग भनिन्छ। जस्तै : राम पढ्छ यस वाक्यमा राम र पढ्छ

दुईवटा शब्द आएका छन् । यहाँ शब्दले पदसमूह र उपवाक्यको श्रेणी नाघेर एकैचोटि वाक्यको तहमा काम गरेका छन् । यो श्रेणीभङ्ग वा श्रेणी अन्तरको उदाहरण हो ।

श्रेणीको निश्चित मापदण्ड हुन्छ । लेख्य भाषा र कथ्य भाषामा श्रेणीको मापदण्ड फरक-फरक हुनसक्छ । जस्तै : कथ्यमा 'भात्' भनिन्छ भने लेख्यमा 'भात' लेखिन्छ ।

यो सामान्य नियम हो । शब्दभन्दा तत्त्व लेख्यभाषा रूप आउँदैन् । श्रेणीका आधारमा भाषाको सूक्ष्म विश्लेषण गरिन्छ । श्रेणीको व्यवस्थित क्रमलाई श्रेणीमान भनिन्छ । श्रेणीले एकाइहरूका बिचको आपसी सम्बन्धको अध्ययन गर्दछ । एकाइको क्रममा आएको अन्तराल वा क्रमभङ्गको अध्ययन श्रेणीले गर्दछ ।

## १. सूक्ष्मता

भाषिक एकाइहरूको विश्लेषण गर्दै तिनलाई विस्तृत रूपमा वर्गीकरण गरिने कार्यलाई सूक्ष्मता भनिन्छ । भाषिक एकाइलाई विभिन्न आधारमा वर्गीकरण गर्न सकिन्छ । यसरी वर्गीकरण गरी तिनका भेद, उपभेद, प्रकार, उपप्रकार छुट्याउने कार्य नै सूक्ष्मता हो । सूक्ष्मतालाई न्यूनतम सूक्ष्मता र अधिकतम सूक्ष्मता गरी वर्गीकरण गरिएको पाइन्छ ।

(क) **न्यूनतम सूक्ष्मता :** कुनै एकाइलाई पहिलो पटक गरिने वर्गीकरण न्यूनतम सूक्ष्मता हो । यसलाई प्राथमिक वर्गीकरण पनि भनिन्छ । जस्तै नाम, सर्वनाम, क्रिया, विशेषण जस्तो शब्दको प्रारम्भिक वर्गीकरण न्यूनतम सूक्ष्मता हो । सूक्ष्मताको विश्लेषण गर्दा दुई भन्दा बढी भाषिक एकाइको समानता देखाउनु न्यूनतम सूक्ष्मता हो ।

जस्तै : त्यो एउटा ठुलो कालो, बलियो, कुकुर
(वि) (वि) (वि) (वि) (वि) (नाम)

यहाँ पाँचओटा विशेषण शब्दहरू छन् । यिनका बिचमा समानता रहेको छ । यस प्रकारको समानताको विश्लेषण न्यूनतम सूक्ष्मता हो ।

(ख) **अधिकतम सूक्ष्मता :** प्रारम्भिक वर्गीकरण पछि फेरि गरिने वर्गीकरण अधिकतम सूक्ष्मता हो । दोस्रो पटक वर्गीकरण गरिने हुनाले यसलाई दोयम वर्गीकरण पनि भनिन्छ । यस्तो वर्गीकरणले दुईभन्दा बढी एकाइका बिचको असमानता देखाउँछ । यसले अधिकतम अवस्थामा गएर हेर्दा उस्तै लाग्ने विषयमा पनि असमानता हुन्छन् भन्ने देखाउँछ । जस्तै :

| त्यो | एउटा | ठुलो | बलियो | कालो | कुकुर |
|---|---|---|---|---|---|
| सार्वनामिक विशेषण | सङ्ख्या बोधक | आकार बोधक | अवस्था बोधक | गुण बोध | नाम |

माथिको उदाहरणमा त्यो, एउटा, ठुलो, बलियो र कालो शब्दले विशेषणको काम गरेका छन्। यस प्रकारको वर्गीकरण प्रारम्भिक वर्गीकरण हो। यसपछि पनि यी शब्दहरूलाई विभिन्न आधारमा वर्गीकरण गर्न सकिन्छ। पछि गरिने वर्गीकरण दोयम वर्गीकरण भनिन्छ। जस्तै :




यसरी जुन तहमा समानता हुन्छ, त्यो न्यूनतम सूक्ष्मता हो, जहाँ विरोध वा विपरीत हुन्छ त्यो अधिकतम सूक्ष्मता हो। माथिको उदाहरणमा प्रारम्भिक वर्गीकरणमा समानता छ, त्यो न्यूनतम सूक्ष्मताको अवस्था हो। दोयम वर्गीकरणमा असमानता छ, त्यो अधिकतम सूक्ष्मता हो।

वाक्यका तहमा पनि यस प्रकारको सूक्ष्मता हेर्न सकिन्छ। जस्तै :




यसरी सूक्ष्मताको विश्लेषणबाट भाषिक एकाइहरूमा रहेका समानता र असमानता थाहा पाउन सकिन्छ।

### ३. द्योतन (प्रतिपादन)

द्योतनको अर्थ जनाउनु वा मूर्तता (स्पष्ट) प्रदान गर्नु भन्ने हुन्छ। भाषा वैज्ञानिक दृष्टिबाट भन्नु पर्दा मूर्त अवस्थामा रहने वास्तविक भाषिक एकाइ र अमूर्त अवस्थामा रहने व्याकरणिक एकाइका बिचको सम्बन्ध देखाउनु नै द्योतन हो। भाषाका एकाइहरूले एकैचोटी व्याकरणका धेरै नियमहरू ओगटेका हुन्छन्। यस्ता व्याकरणका नियमहरूलाई विश्लेषण गरेर प्रकट गर्नु नै द्योतन हो। यस विश्लेषणमा निम्न लिखित तिनओटा विषय महत्त्वपूर्ण हुन्छन् : (क) द्योतक, (ख)द्योतित र (ग) द्योतन।

(क) द्योतक

भाषाका वास्तविक एकाइलाई द्योतक भनिन्छ। रूपदेखि वाक्यसम्मका एकाइ द्योतक हुन्। रूप, शब्द, पदसमूह, उपवाक्य, वाक्य द्योतक हुन्।

(ख) द्योतित

सैद्धान्तिक कोटिहरू द्योतित हुन् अथवा एकाइ, संरचना, वर्ग र व्यवस्था द्योतित हुन्।

(ग) द्योतन

वर्णनात्मक वा कार्यात्मक कोटिलाई द्योतन भनिन्छ। सैद्धान्तिक कोटिमा रहेका एकाइ, संरचना, वर्ग र व्यवस्थालाई निम्नानुसार वर्णन गर्ने कार्यात्मक विश्लेषण गर्ने काम द्योतन हो :

एकाइ : रूप, शब्द, पदसमूह, उपवाक्य, वाक्य

संरचना : उद्देश्य+ विधेय, विशेषण+विशेष्य

वर्ग : नामिक वर्ग (नाम, सर्वनाम, विशेषण), क्रियात्मक वर्ग, क्रियाविशेषण वर्ग

व्यवस्था : लिङ्ग, वचन, पुरुष, काल, भाव, पक्ष, वाच्य आदि।

जस्तै : राम भात खान्छ।

यस वाक्यमा राम, भात र खान्छ अलग अलग शब्दका तहमा हेर्दा यो शब्दको एकाइमा रहन्छ। सबै शब्दहरूको संयोजन भएपछि वाक्यका तहमा रहन्छ। यस प्रकारको भाषिक एकाइ द्योतक हो। यही वाक्यलाई एकाइ, संरचना, वर्ग, व्यवस्थाका कोटिमा वर्गीकरण गर्न सकिन्छ भन्ने सिद्धान्त द्योतित हो। यो वाक्यलाई एकाइ, संरचना, वर्ग र व्यवस्थामा के कसरी देखाउन सकिन्छ भनेर हेर्नु चाहिँ द्योतन हो। यसरी 'राम भात खान्छ' मूर्त रूपमा रहेको भाषिक संरचना हो। यसमा व्याकरणका विभिन्न नियम रहेका छन्। ती नियम एकाइ, संरचना, वर्ग र व्यवस्थामा हेर्न सकिन्छ। यसरी हेर्ने काम द्योतन हो।

माथि देखाए अनुसार व्याकरणमा सबै पक्ष वा सबै कोटिको व्याख्या गरी स्पष्ट पार्ने वा अमूर्त विषयलाई मूर्त बनाएर देखाउनु नै द्योतन हो।

४. गहिराइ

व्यवस्थावादीहरू भाषामा अनेक संरचना हुन्छन् र अनेक व्यवस्था हुन्छ भन्छन्। उनीहरूका अनुसार प्रयोक्ताले एक पटकमा जे जति व्यवस्था गर्छ, त्यही नै संरचना हुन्छ। प्रयोक्ताले विभिन्न विकल्पहरू मध्ये एउटा विकल्प मात्र चयन गरेको हुन्छ। प्रयोक्ताले चयन नगरेका अनेक विकल्पहरू हुन्छन्। यस प्रकार भाषिक एकाइका अनेक विकल्पहरूको संरचनालाई व्यवस्थावादीहरूले आन्तरिक संरचना भनेका छन्। सबै खालका विकल्पहरूको विश्लेषण गरी आन्तरिक संरचना पत्ता लगाउने कामलाई उनीहरूले गहिराइ भनेका छन्।

भाषाको वाक्यात्मक तह बाह्य संरचना हो । यसका विभिन्न आन्तरिक संरचना हुन्छन् । आन्तरिक संरचना अमूर्त हुन्छ । त्यो अमूर्त संरचना पत्तो लगाई भाषाको गहिराइसम्म पुग्न सकिन्छ भन्ने व्यवस्थावादीको मत रहेको छ। भाषाशास्त्री ह्यालिडेले सुरुमा सूक्ष्मता र गहिराइलाई उही रूपमा लिएका थिए। पछि सूक्ष्मताबाट गहिराइलाई अलग गरेर भाषाका चार ओटा आयाम बनाएका हुन्। उनले सूक्ष्मतालाई भाषाको विस्तारक रूपमा र गहिराइलाई भाषाको गम्भीरताका रूपमा लिएका छन्। गहिराइको विश्लेषणका लागि कर्मकर्ता, वृत्ति संरचना, थिम संरचना, घटक संरचना र सूचना संरचना हेरिने गरिएको पाइन्छ।

(क) **कर्मकर्ता :** वाक्यको गहिराइ विश्लेषणमा कर्म र कर्ताको विश्लेषण महत्त्वपूर्ण मानिन्छ। वाक्यमा कर्ता, कर्म, क्रियाको विश्लेषणलाई गहिराइ विश्लेषणको एउटा आधार मानिन्छ। 'राम घर जान्छ' भन्ने वाक्यलाई कर्मकर्ता विश्लेषण गर्दा राम कर्ता, घर लक्ष्य, जान्छलाई प्रक्रिया भनी विश्लेषण गरिएको पाइन्छ।

(ख) **वृत्ति संरचना :** व्यवस्थावादीहरूले वाक्यलाई वृत्ति संरचनाका आधारमा पनि विश्लेषण गरेका छन्। यो पनि कर्मकर्ता विश्लेषण जस्तै हो। 'राम घर जान्छ' वाक्यलाई वृत्ति संरचनामा गहिराइ विश्लेषण गर्दा 'राम' उद्देश्य, 'घर' लक्ष्य र 'जान्छ' विधेय हुन्छ।

(ग) **थिम संरचना :** वाक्यमा थिम (अक्षक) र रिम (वर्तक) हुन्छ भनी त्यसको विश्लेषण गर्ने काम व्यवस्थावादीहरूले गरेका छन् । अक्षक र वर्तक अथवा थिम र रिमको विश्लेषण पनि गहिराइको विश्लेषण हो। यसमा पहिले आउने घटक थिम र त्यसपछि आउने घटकहरू रिम मानिन्छन्। 'राम घर जान्छ' भन्ने वाक्यमा 'राम' थिम र 'घर जान्छ' रिम हो।

(घ) **घटक संरचना :** वाक्यमा नाम पदावली, क्रियापदावली, क्रियाविशेषण पदावली र विभिन्न पदहरू रहेका हुन्छन्। यस प्रकारको पद र पदावलीको संरचनालाई घटक संरचना भनिन्छ। 'राम घर जान्छ' भन्ने वाक्यमा 'राम' नामपद, 'घर' नामपद, 'जान्छ' क्रियापद हुन्। यस प्रकारका विश्लेषण घटक संरचना विश्लेषण हो।

(ङ) **सूचना संरचना :** वाक्यमा पहिलेदेखि रहेको सूचना (प्रदत्त सूचना) र पछि थपिएको नयाँ सूचना गरी दुई प्रकारका सूचना हुन्छन् । यस प्रकार प्रदत्त सूचना र नयाँ सूचनाको विश्लेषण पनि गहिराइको विश्लेषण हो । 'राम घर जान्छ' भन्ने वाक्यमा राम प्रदत्त सूचना हो र 'घर जान्छ' नयाँ सूचना हो।

माथि उल्लेख भए अनुसार एउटा वाक्यमा रहेका विभिन्न नियमहरूको विश्लेषणलाई व्यवस्थावादीहरूले गहिराइको विश्लेषण भनेका छन्। 'राम घर जान्छ' भन्ने वाक्यमा 'राम' शब्दले एकैसाथ कर्ता, उद्देश्य, थिम, प्रदत्त सूचना जस्ता विभिन्न

नियमहरू बताइरहेका हुन्छ। यस्ता नियमहरूको विविधतालाई भाषाको आन्तरिक संरचना भनिन्छ र यिनले विश्लेषणलाई गहिराइ भनिन्छ।

### ३.३.४ व्यवस्थापरक व्याकरणका शक्ति र सीमा

व्यवस्थापरक व्याकरण भाषाविज्ञानका सन्दर्भमा एउटा महत्त्वपूर्ण प्राप्ति हो। यसले भाषाव्याकरणका क्षेत्रमा थुप्रै उपलब्धि दिएको छ। यसैगरी यसका कतिपय सीमाहरू पनि छन्। यस सिद्धान्तका शक्ति र सीमालाई निम्नानुसार उल्लेख गर्न सकिन्छ।

**शक्ति /उपलब्धि**

(१) यो समाजपरक वा व्यवस्थापरक सिद्धान्त हो। यस सिद्धान्तले भाषालाई समाजसँग जोडेको छ। संरचनावादी परम्परामा हुर्किएका ह्यालिडेले संरचनावादमा भाषालाई संरचना वा बनोटमा मात्र हेर्ने परम्परालाई छाडेर उनले भाषालाई समाज, समय, परिस्थिति, संस्कृति आदिसँग सम्बन्धित बनाएर अध्ययन गर्ने परिपाटिको थालनी गरे। यो यस सिद्धान्तको महत्त्वपूर्ण शक्ति वा उपलब्धि हो।

(२) यो सिद्धान्तले भाषालाई कार्यात्मक वा कार्यमूलक रूपमा हेरेको छ। भाषालाई निरपेक्ष (अरुसँग असम्बन्धित) रूपमा हेर्ने र यसलाई स्थिर वा जड रूपमा हेर्ने अन्य सिद्धान्तका विपरित यस सिद्धान्तले भाषालाई मानवीय क्रियाकलापका रूपमा हेरेको छ। यो यसको शक्ति हो।

(३) यस सिद्धान्तले अर्थलाई विशेष महत्त्व दिएको छ। भाषाविज्ञानका अन्य सिद्धान्तका तुलनामा यस सिद्धान्तले अर्थलाई महत्त्व दिएर भाषाविज्ञानका क्षेत्रमा उल्लेख्य कार्य गरेको छ।

(४) सार्वभाषिक सिद्धान्त : यस सिद्धान्त अनुसार संसारका सबै भाषालाई अध्ययन गर्न सकिन्छ।

(५) यो सिद्धान्त संरचनावादी भाषाविज्ञानको सिद्धान्तकै जगमा उभिएर थप विस्तार भएको सिद्धान्त हो। यसर्थ यसमा संरचनावादका उपलब्धिलाई पनि निरन्तरता दिइएको छ।

(६) भाषाविज्ञानका कतिपय सिद्धान्तहरू भाषाको ध्वनि, वर्ण, रूप जस्ता एकपक्षको अध्ययनमा मात्र बढी जोड दिने गरेकामा यस सिद्धान्तले भाषाको ध्वनि देखि वाक्यसम्मकै अध्ययनलाई उत्तिकै महत्त्व दिएको छ।

(७) यस सिद्धान्तले भाषाका अन्य सिद्धान्तहरू प्रतिपादन गर्ने आधारहरू तयार पारिदिएको छ। यसका आधारमा भाषालाई व्यापक रूपमा अध्ययन गर्न सकिन्छ।

**सीमा**

(१) यस सिद्धान्तमा भाषालाई विभिन्न आधारमा अनेक प्रकार र उपप्रकारमा वर्गीकरण गरिएको छ। यसले भाषिक अध्ययनमा जटिलता सिर्जना भएको छ। यो यसको सिमा हो।

(२) यस सिद्धान्तका व्याख्याताहरू यसलाई बारम्बार संशोधन थपघट गर्दै आएका छन्। भाषाको अन्तिम संरचना र व्याख्या यही हो भनेर निष्कर्ष दिन सकेका छैनन्। यसर्थ यो सिद्धान्त अपूर्ण देखिन्छ।

(३) यस सिद्धान्तमा समाजलाई जोड दिए पनि भाषा र मनोविज्ञानका बिचको सम्बन्धलाई चर्चा गरिएको छैन। भाषा र मनोविज्ञानका बिचमा घनिष्ट सम्बन्ध हुने हुँदा मनोवैज्ञानिक पक्षको उपेक्षा गरिनाले यो सिद्धान्त पूर्ण हुन सकेको छैन।

(४) ध्वनि र वर्णको पर्याप्त अध्ययन हुन नसक्नु यसको सीमा हो। यसमा वाक्यविज्ञान र रूपविज्ञानको बढी अध्ययन भएको छ। तर ध्वनिविज्ञानको खासै अध्ययन भएको छैन।

(५) यस सिद्धान्तमा भाषाको सार्वभौमिकताको अवधारणा आएको छ। वा संसारका सबै भाषालाई एउटै सिद्धान्तमा अध्ययन गर्न सकिन्छ भन्ने मान्यता अगाडि सारिएको छ तर यस बारेमा उचित र पर्याप्त व्याख्या विश्लेषण हुन सकेको छैन।

उल्लिखित सीमा तथा कमजोरी हुँदाहुदै पनि व्यवस्थापरक व्याकरण भाषाविज्ञानका क्षेत्रमा एउटा महत्त्वपूर्ण सिद्धान्त हो। यसले भाषिक अध्ययनमा नयाँ आयाम थपेको छ।

## ३.४ रूपान्तरण व्याकरणको विकास र आधारभूत मान्यता

भाषा सम्बन्धी अध्ययन तथा चिन्तनका परम्परामा रूपान्तरण व्याकरणको विकासलाई महत्त्वपूर्ण मानिन्छ। रूपान्तरण व्याकरण पनि संरचनावादी भाषाविज्ञानको पृष्ठभूमिबाट जन्मिएको भाषिक सिद्धान्त हो। संरचनावादको पृष्ठभूमिबाट जन्मिएको भए पनि रूपान्तरण व्याकरण संरचनावादी व्याकरण विरोधी रहेको छ।

### ३.४.१ रूपान्तरण व्याकरणको विकास

रूपान्तरण व्याकरणका जन्मदाता अमेरिकी भाषाशास्त्री नोम चम्स्की (Noam Chemsky) हुन्। भाषाविज्ञानका क्षेत्रमा चम्स्कीको योगदानलाई मनोविज्ञानका क्षेत्रमा फ्रायड, अर्थशास्त्रका क्षेत्रमा केनिस, राजनीति अर्थशास्त्रका क्षेत्रमा कार्ल मार्क्स, समाज विकासका क्षेत्रमा डार्विन जस्ता चिन्तकहरूले दिइएको योगदानसँग समेत तुलना गरिएको पाइन्छ। रूपान्तरण व्याकरणलाई भाषाविज्ञानको क्षेत्रमा भएको क्रान्ति मानिन्छ र यसलाई 'चम्स्केली क्रान्ति' पनि भनिन्छ।

नोम चम्स्की अमेरिकी संरचनावादी भाषिक अध्ययन परम्पराका एकजना
विद्यार्थीका रूपमा भाषिक अध्ययनमा लागेका थिए। उनले भाषाशास्त्री ह्यारिसको
निर्देशनमा 'आधुनिक हिब्रु भाषामा रूपध्वनि प्रक्रिया' (सन् १९५१) शीर्षकमा
स्नातकोतर तहको शोधकार्य सम्पन्न गरे। उनले सन् १९५३ मा 'भाषिक सिद्धान्तको
तार्किक संरचना' शीर्षकमा ९०० पेजको विद्यावारिधि अनुसन्धान ग्रन्थ तयार पारे।
'म्यासाच्युएट इन्स्टिच्युट अफ टेक्नोली' (MIT) मा आधुनिक भाषाविज्ञानको
शिक्षकमा रूपमा समेत काम गरेका चम्स्कीको 'व्याक्यात्मक संरचना' अथवा
'सिन्टयाक्टिक स्ट्रक्चर्स' (Syntactic Structures) नामको उनको कृति सन्
१९५७ मा प्रकाशित भयो। यसै कृतिले भाषा विज्ञानका क्षेत्रमा रूपान्तरण
व्याकरणको अवधारणा स्थापित गरिदियो।

'सिन्टयाक्टिक स्ट्रक्चर्स' कृतिले भाषा सम्बन्धी पूर्व मान्यताको खण्डन गर्दै
नयाँ मान्यता स्थापित गरी दियो। संरचनावादीहरूले भाषा चिन्तनको दार्शनिक
आधारका रूपमा अनुभववादी तथा व्यवहारवादी दर्शनलाई लिएका छन्। चम्स्कीले
अनुभववाद र व्यवहारवादबाट भाषाको अध्ययन हुन नसक्ने तर्क गर्दै उनले बुद्धिवादी
दर्शन र संज्ञानात्मक मनोविज्ञानलाई भाषिक दर्शनका रूपमा लिनुपर्ने तर्क प्रस्तुत गरे।
उनले भाषिक विशिष्टताको अलग अध्ययनभन्दा भाषिक सार्वभौमिकतामा जोड दिए
। संरचनावादीहरू अलग अलग भाषाको अलग-अलग संरचना हुन्छ भन्दै भाषाको
विशिष्टताको अध्ययनमा जोड दिएका छन्। चम्स्कीले अलग-अलग भाषाको
अध्ययन गर्ने अलग-अलग सिद्धान्तलाई अस्वीकार गर्दै भाषिक सार्वभौमिकता
अथवा संसारका सबै भाषाहरूको अध्ययन गर्ने एउटै सिद्धान्तको खोजी गरे।

सन् १९५७ मा वाक्यात्मक संरचना कृति आएपछि रूपान्तरण व्याकरणको
औपचारिक थालनी भयो। यसपछि यस व्याकरणले अरु विकास र विस्तार हुँदै
आएको छ। चम्स्की र उनका सहयोगीहरूले रूपान्तरण व्याकरणलाई विभिन्न
चरणमा विकास गर्दै अगाडि बढाएका छन्। रूपान्तरण व्याकरणको विकासलाई
मुख्यतः निम्न लिखित चरणमा हेर्न सकिन्छ :

१. पहिलो चरण – क्लासिकल सिद्धान्त (१९५७)
२. दोस्रो चरण – मानक सिद्धान्त (१९६५)
३. तेस्रो चरण – विस्तारित मानक सिद्धान्त (१९७०)
४. चौथो चरण – संशोधित विस्तारित मानक सिद्धान्त (१९७५)
५. पाँचौं चरण– अधिशासन तथा आबद्धता सिद्धान्त (१९७९)
६. छैटौं चरण– न्यूनतमवादी सिद्धान्त (१९९५)

यस पछि पनि चम्स्की र उनका चेलाहरूले रूपान्तरण व्याकरणमा केही
परिस्कार र परिमार्जन गरिरहेको पाइन्छ।

## ३.४.२ रूपान्तरण व्याकरणको आधारभूत धारणा

### (क) व्यवहारवाद र अनुभववादको विरोध बुद्धिवादको समर्थन

रूपान्तरण व्याकरण संरचनावादीहरूले भनेजस्तो व्यवहारवादी र अनुभववादी सिद्धान्त होइन, यसले बुद्धिवादको समर्थन गर्दछ । संरचनावादीहरू अनुभवाद र व्यवहारवादको मान्यतामा भाषाको अध्ययन गर्दछन् । उनीहरूका अनुसार मानिसको मस्तिष्क खाली कागज जस्तै हुन्छ । मानिसले अनुभव र व्यवहारबाट भाषा सिक्दछ । अनुभववादी दार्शनिक डेभिड ह्युमका अनुसार मानिसका इन्द्रियहरूले सुँघेर, छोएर, सुनेर, देखेर, चाखेर ज्ञान आर्जन गर्दछन् । यस प्रकार भाषाको अध्ययन पनि इन्द्रियहरूबाट अनुभव गरेर पुरा हुन्छ । भाषिक ज्ञान नैसर्गिक वा प्राकृतिक रूपमा प्राप्त हुँदैन । अनुभववाट प्राप्त हुन्छ भन्ने मान्यता संरचनावादीहरूमा रहेको छ । यसैगरी संरचनावादीहरू व्यवहारवादी मनविज्ञानलाई पनि भाषा अध्ययनको आधार मान्दछन् । वाट्सन, नेलसन गुडम्यान बी. एफ. स्किनर जस्ता मनोविज्ञानवेत्ताहरूले व्यवहारवादी मनोविज्ञानको सिद्धान्तको व्याख्या गरेका छन् । उनीहरूका अनुसार भाषा बाबुआमाबाट गराइएको सतर्कता हो । उनका अनुसार मानिसले आफ्ना बाबुआमा वा अग्रजहरूबाट भाषा प्राप्त गर्दछ । यस सिद्धान्त अनुसार भाषा परिवेश, वातावरण, अनुभव र व्यवहारबाट सिकिन्छ र भाषाको सिकाइमा मस्तिष्कको कुनै हात हुँदैन । यो मान्यतालाई रूपान्तरण सिद्धान्तले खण्डन गरेको छ ।

रूपान्तरण सिद्धान्तमा अनुभववादी तथा व्यवहारवादी मान्यताको आलोचना गर्दै बुद्धिवादी अवधारणाको पक्ष लिइएको छ । यस सिद्धान्त अनुसार मान्छेमा भाषा सिक्न सक्ने क्षमता भएको मस्तिष्क वा बुद्धि हुन्छ र त्यही बुद्धिले भाषा सिक्दछ । भाषाका सिकाइमा मस्तिष्कको भूमिका नहुने भए मानववेतर प्राणीले पनि भाषा सिक्न सक्थे । चम्स्कीले भाषाको सिकाइ, बाबुआमाको सतर्कतापूर्वक निर्देशनबाट हुँदैन बरु साथीभाइसितको सहज व्यवहारबाट हुन्छ भन्दै स्किनरले भनेजस्तो भाषाको सिकाइमा व्यवहारवादी भूमिका नहुने बताएका छन् । उनले भाषालाई व्यवहार र अनुभवमा सीमित गर्ने हो भने मान्छेले जति शब्द र वाक्य जानेको हुन्थ्यो, त्यतिमात्र प्रयोग गर्न सक्दथ्यो भन्ने तर्क गरेका छन् । चम्स्कीका अनुसार भाषा बुद्धि वा मानिसको मस्तिष्कसँग सम्बन्धित भएकाले मानिसले सुनेका र जानेका सीमित शब्द र सीमित वाक्य ढाँचाका आधारमा कहिल्यै नसुनेका, प्रयोग नगरेका शब्द र वाक्य ढाँचाको अर्थ बुझ्न सक्छ र प्रयोग गर्न पनि जान्दछ ।

### (ख) भाषिक सामर्थ्यमा जोड

चम्स्कीले भाषाको सामर्थ्यमा जोड दिएका छन् । संरचनावादीहरू भाषिक संम्पादनमा जोड दिएका छन् भने रूपान्तरण सिद्धान्तले भाषिक सामर्थ्यमा जोड दिएको छ। भाषिक सम्पादन अनुसार सामग्री सङ्कलन गर्ने, सङ्कलित सामाग्रीको विश्लेषण गर्ने र भाषालाई प्राविधिक विषय मान्ने गरिन्छ । संरचनावादीहरूले भाषालाई समाजविज्ञानका अन्य शाखाहरूमा जस्तै क्षेत्रीय अध्ययन, टेप रेकर्डबाट भाषिक सामाग्री सङ्कलन गरेर सङ्कलित सामग्रीको वर्गीकरण, तालिकीकरण, विश्लेषण गरी निष्कर्षमा पुग्नु पर्ने सम्पादनकारी अवधारणाको विकास गरेका थिए । चम्स्कीले संरचनावादीका यस्ता अध्ययनले भाषाको अर्थपक्षलाई बेवास्ता गरेको भन्दै यस प्रक्रियालाई भाषिक अध्ययनको अपुरो कार्य मानेका छन् । चम्स्की भाषिक सामर्थ्यको खोजी गर्ने कुरामा जोड दिन्छन् । भाषिक सामर्थ्य भनेको वक्ताले कहिल्यै नसुनेका शब्द, वाक्य, बुझ्ने र प्रयोग गर्न सक्ने क्षमता हो। मान्छेले सीमित शब्द र केही नियम जानेको हुन्छ। यसका आधारमा उसले असङ्ख्य शब्द र नियमहरू बुझ्न र प्रयोग गर्न सक्दछ । यस प्रकारको क्षमतालाई चम्स्कीले भाषिक सामर्थ्य भनेका छन् । रूपान्तरण सिद्धान्तले भाषिक सामर्थ्यको अध्ययनमा जोड दिन्छ।

**(ग) भाषिक सार्वभौमिकताको सिद्धान्त**

रूपान्तरण सिद्धान्तले भाषिक सार्वभौमिकता कुरा गर्छ । संसारका सबै मानिसको मस्तिष्कमा संसारका जुनसुकै भाषा पनि सिक्न सक्ने क्षमता हुन्छ भन्दै यस सिद्धान्तले भाषिक सार्वभौमिकताको अवधारणा अगाडि सारेको छ । यस्तो क्षमता मान्छेमा मात्र हुन्छ र यो संसारभरका मानिसको साझा नैसर्गिक गुण हो । चम्स्कीले मानव मस्तिष्कमा रहेको भाषा सिक्न सक्ने यस्तो साझा क्षमतालाई आन्तरिक संरचना मानेका छन्। उनका अनुसार संसारका सबै भाषामा आन्तरिक संरचना समान हुन्छ । त्यसलाई बाह्य संरचनामा ल्याउँदा मात्र भाषापिच्छे अलग-अलग विशिष्टता देखा पर्दछ। संरचनावादीहरूले संसारका हरेका भाषा विशिष्ट हुन्छन् र भाषिक अध्ययनमा यस्ता विशिष्टताको खोजी गर्नुपर्दछ भनेका छन् । यसका विपरीत चम्स्कीले संसारका भाषाहरूको बाहिरी संरचना मात्र भिन्नता हुन्छ, भित्री तहमा प्रायः समानता हुन्छ भन्दै व्याकरणमा संसारका भाषामा पाइने समानताको खोजी गर्नुपर्दछ भनेका छन्। उनले संसारका सबै भाषामा पदावली संरचना हुन्छ र त्यो सबै भाषामा समान हुन्छ भनेका छन्। यस्तो पदावली संरचना रूपान्तरण नियम लगाएर बाह्य संरचनामा आएपछि त्यसको प्रयोग गरिन्छ । बाह्य संरचनामा आउँदा भने भाषा अनुसार विशिष्टता वा फरक देखा पर्छ। चम्स्की भाषाको आन्तरिक संरचनाको अध्ययन गरी संसार भरका भाषालाई एउटै सार्वभैमिकता व्याकरणका रूपमा स्थापित गर्न चाहन्छ।

**(घ) आन्तरिक र बाह्य संरचनाको अवधारणा**

चम्स्कीले भाषालाई मूलतः दुईओटा संरचनामा हेरेका छन् – आन्तरिक संरचना र बाह्य संरचना। उनका अनुसार संसारभरका मानिसको मस्तिष्कमा रहेको भाषा बुझ्न सक्ने क्षमता आन्तरिक संरचना हो। यस संरचना अनुसार मानिसले संसारका जुनसुकै भाषालाई पनि बुझ्न सक्दछ। त्यसमा पहिलो पटक सिकेको भाषा राम्ररी बुझ्ने र पछि सिकेको भाषा कम मात्रामा बुझ्दै जाने हुनसक्छ। चम्स्कीले संसारका सबै भाषाको आन्तरिक संरचना उस्तै हुन्छ भन्दै भाषिक सार्वभौमिकताको कुरा गरेका छन्। भाषाको आन्तरिक संरचना उस्तै भए पनि त्यो अमूर्त हुन्छ र प्रयोगमा ल्याउन बाह्य संरचना बन्दछ। बाह्य संरचना भने भाषापिच्छे फरक र विशिष्ट हुने गर्दछ। यस प्रकार आन्तरिक संरचना बाह्य संरचनामा रूपान्तरण हुने मान्यता राखेकै कारणले यस सिद्धान्तलाई रूपान्तरण व्याकरण भनिन्छ।

**(ङ) वाक्यको अध्ययनमा जोड**

रूपान्तरण व्याकरण संरचनावादी व्याकरणको विरोधमा जन्मिएको हो। संरचनावादी भाषाशास्त्री ब्लुमफिल्डले भाषाका हरेक शाखालाई अलग–अलग अध्ययन गर्ने पद्धति विकास गरेका थिए। उनले भाषाको ध्वनि, वर्ण, वाक्य जस्ता पक्षमा बढी अध्ययन गरेका थिए। यसका विरुद्ध भाषाशास्त्री ह्यारिस लगायतका विद्वान्ले भाषा एउटा व्यवस्था भएको हुँदा यसका शाखाहरू अलग्गै र स्वतन्त्र रूपमा अध्ययन गर्न सकिँदैन भन्ने मान्यता अगाडि सारे र उनले ध्वनि, वर्ण, रूप जस्ता भाषाका शाखाहरूलाई अलग्गै र स्वतन्त्र रूपमा अध्ययन गर्न सकिँदैन। यिनलाई वाक्यसँग जोडेर अध्ययन गर्नुपर्दछ भन्ने मान्यता अगाडि सारे। ह्यारिसको यस्तो मान्यताका पृष्ठभूमिमा उनका चेला चम्स्कीले भाषाको वाक्यको अध्ययनमा जोड दिएर नयाँ भाषिक सिद्धान्तको प्रतिपादन गरे। यस प्रकार रूपान्तरण व्याकरणको मुख्य अध्ययन क्षेत्र वाक्य हो। रूपान्तरण व्याकरणले वाक्यको अध्ययनमा जोड दिन्छ। यसमा भाषाको आन्तरिक संरचनामा रूपान्तरण नियम लागेर बाह्य संरचना अथवा रूपान्तरित वाक्य बन्दछन् भन्ने कुरामा जोड दिएको छ।

**(च) भाषाको एकीकृत सिद्धान्त**

रूपान्तरण व्याकरणले भाषाका सबै शाखालाई समेटेर एकीकृत रूपमा अध्ययन गर्ने र संसार भरका भाषालाई एउटै सिद्धान्तमा अध्ययन गर्ने मान्यता राख्दछ। संरचनावादीहरूले भाषालाई टुक्र्याएर ध्वनि, वर्ण, रूप, वाक्य जस्ता शाखा, प्रशाखा बनाएकामा रूपान्तरण सिद्धान्तले यी सबैलाई समेटेर एकीकृत रूपमा एउटै सिद्धान्तबाट भाषाको अध्ययन गर्ने मान्यता अगाडि सारेको छ।

## ३.५ कारक व्याकरणको विकास र आधारभूत मान्यता

'कृ' धातुमा 'अक' प्रत्यय लागेर कारक शब्द बन्दछ। यसको सामान्य अर्थ कार्य सम्पादन गर्ने वा कार्य सम्पादनमा सहयोग गर्ने भन्ने हुन्छ। भाषाविज्ञानका सन्दर्भमा क्रियासँग सम्बन्ध राख्ने नाम पदको कार्यलाई कारक भनिएको पाइन्छ। भाषविज्ञानका क्षेत्रमा कारक व्याकरण अलग्गै सिद्धान्तका रूपमा स्थापित भएको छ।

### ३.५.१ कारक व्याकरणको विकास

कारकका बारेमा धेरै पहिलेदेखि चर्चा परिचर्चा भएको पाइन्छ। यस बारेमा पूर्वीय तथा पाश्चात्य विद्वान्हरूले विभिन्न दृष्टिकोणबाट चर्चा गरेका छन्। प्राचीन कालदेखि नै भाषामा कारकको चर्चा गरिएको पाइन्छ। पाणिनिले 'क्रियान्वयित्वं कारकत्वम्' भनी कारकलाई क्रियासँग जोडेर हेरेका छन्। सामान्यतः यसलाई वाक्यमा पदहरूको भूमिका वा प्रकार्यका रूपमा लिने गरिएको पाइन्छ। आधुनिक भाषाशास्त्री फिलमोरले यसलाई वाक्य संरचनाको केन्द्रीय पक्षका रूपमा लिएपछि भने कारक सम्बन्धी अवधारणा भाषाविज्ञानको एउटा स्वतन्त्र विषयका रूपमा स्थापित हुन पुगेको हो।

भाषाशास्त्री फिलमोर रूपान्तरण व्याकरणको परम्पराभित्र हुर्किएका भाषाशास्त्री हुन्। उनले रूपान्तरण व्याकरणको परम्पराभित्रै रहेर भाषाको अध्ययन गर्ने क्रममा कारक सिद्धान्तलाई स्थापित गरेका हुन। सन् १९६२ मा यिनले 'अप्रत्यक्ष कर्मको रचना र रूपान्तरणको क्रम' शीर्षकको लेख प्रकाशित गरी भाषा चिन्तनमा अग्रसर भएको पाइन्छ। नोम चम्स्कीको रूपान्तरण सिद्धान्त (१९५७) मा महत्त्व नदिइएको अप्रत्यक्ष कर्मलाई महत्त्व दिएर फिलमोरले मान्यतालाई स्थापित गर्ने प्रयत्न गरेको पाइन्छ। यस पछि सन् १९६८ मा यिनको 'अ केस फर केस' (A Case for case)कृति प्रकाशित भयो। यसपछि कारक सिद्धान्त पनि भाषा व्याकरणका क्षेत्रमा एउटा स्वतन्त्र सिद्धान्तका रूपमा स्थापित हुन पुग्यो र फिल्मोर कारक व्याकरणका आधुनिक प्रणेताका रूपमा स्थापित हुन पुगे।

सन् १९६८ मा फिलमोरले निम्न लिखित ६ ओटा कारकहरूको उल्लेख गरेका छन् :

(१) अभिकर्ता कारक (२) करण कारक (३) सम्प्रदान कारक (४) तात्त्विक कारक (५) स्थानवाचक कारक र (६) कर्मकारक।

यसमा विभिन्न समयमा परिस्कार परिमार्जन गर्दै सन् १९७१ सम्ममा यसलाई पूर्ण रूपमा स्थापित गरेको पाइन्छ। फिल्मोरले पछि सम्प्रदान कारकलाई अनुभावक र तात्विकलाई परिणामी भनी नाम बदलेका छन्। यसैगरी उनले कर्म कारकलाई हटाएर लाभक, सहायक, लक्ष्य र स्रोत कारक थपेका छन्। कतिपय विद्वान्हरूले बल,

प्रवर्त्य जस्ता कारकको पनि चर्चा गरेका छन्। पछिल्ला समयमा बढीमा ११ वटा कारकहरूको चर्चा गरिएको पाइन्छ।

### ३.५.२ कारक व्याकरणका आधारभूत मान्यता

कारक व्याकरण रूपान्तरण व्याकरणको पृष्ठभूमिमा जन्मिएको हो। कारक सम्बन्धी चर्चा पाणिनिकै पालादेखि भए पनि यसलाई भाषा व्याकरणको अलग्गै सिद्धान्तको रूपमा स्थापित गर्ने काम भाषाशास्त्री फिलमोरबाट भएको हो। फिलमोर चम्स्कीको रूपान्तरण सिद्धान्तका एकजना सदस्य भएको हुँदा कारक सिद्धान्त पनि रूपान्तरण सिद्धान्तकै पृष्ठभूमिमा जन्मिएको हो। कारक व्याकरणले भाषाको अध्ययनको केन्द्र वाक्यलाई बताएको पाइन्छ। यो अवधारणा रूपान्तरण व्याकरणसँग मिल्दोजुल्दो छ। कारक सिद्धान्तमा पनि रूपान्तरण सिद्धान्तको जस्तै सार्वभौम व्याकरणको मान्यता अगाडि सारिएको पाइन्छ। कारक सिद्धान्तमा भाषाको आन्तरिक संरचनाको अध्ययनलाई जोड दिइन्छ। फिलमोरका अनुसार कारक भनेको क्रियासँग सम्बन्धित नाम वा नामपदको विशेष कोटि हो। कारक सिद्धान्तमा वाक्यमा आएका नाम पदहरूको सम्बन्ध त्यस वाक्यको क्रियासँग के कस्तो छ भन्ने कुराको अध्ययन गरिन्छ।

कारक सिद्धान्त अनुसार भाषाको आन्तरिक संरचनामा सीमित कारकहरू हुन्छन्। यस्ता कारकहरू वाक्य संरचनामा आउँदा विभिन्न चिह्नहरू जोडिएर आउँछन्। यस्ता चिह्नहरूलाई संस्कृत व्याकरणमा विभक्ति भनिन्छ। तर सबै कारकमा विभक्ति जोडिनै पर्छ भन्ने अनिवार्यता हुँदैन। फिलमोरले विभक्ति जोडिने कारकलाई चिन्हित कारक र विभक्ति नजोडिनेलाई अचिन्हित कारक भनेका छन्। जस्तै :- रामले श्यामलाई बोलायो। यहाँ 'रामले' र 'श्यामलाई' जस्ता कारक चिन्हित कारक हुन्। राम भात खान्छ। यहाँ 'राम' 'भात' अचिन्हित कारक हुन्।

फिलमोरले पनि चम्स्कीको जस्तो भाषिक सार्वभौमिकताको खोजी गरेका छन्। उनले संसारका भाषालाई पूर्वसर्गात्मक र परसर्गात्मक गरी दुई भागमा वर्गीकरण गरेका छन्। उनका अनुसार पूर्वसर्गात्मक भाषामा वाक्यको सुरुमा उद्देश्य र अन्त्यमा क्रिया आउँछ। जस्तै : राम पढ्छ।

उद्देश्य अगाडि नआउने भाषालाई उनले परसर्ग भनेका छन्। कतिपय भाषामा परसर्गात्मक व्यवस्था पनि पाइने बताइन्छ।

फिलमोरले कारकलाई पनि केन्द्रीय र परिधीय गरी दुई भागमा विभाजन गरेका छन्। अभिकर्ता, अनुभावक, लाभक र उदासीन कारक केन्द्रीय कारक हुन् र अन्य कारक परिधीय कारक हुन्।

### ३.५.३ कारकको परिचय

फिलमोरले कारकलाई निम्न लिखित प्रकारमा विभाजित गरेका छन् :

**(क) अभिकर्ता कारक**

परम्परागत व्याकरणको कर्ता कारकसँग मिल्दोजुल्दो कारकलाई फिलमोरले अभिकर्ता कारक भनेका छन्। तर परम्परागत व्याकरणमा जस्तो सबै कर्ता कारक अभिकर्ता कारक भने होइन। फिलमोरका अनुसार सजीव प्राणीहरू मात्र अभिकर्ताको भूमिकामा आउन सक्छन्। वाक्यमा जुन कर्ताले आफ्नो सामर्थ्य अनुसार कार्य गर्न सक्दछ त्यही नै अभिकर्ता कारक हुन्छ। जस्तै :- राम पढ्छ। कुकुर भुक्यो। कतिपय अवस्थामा मानवीय सङ्घसंस्थाहरू पनि अभिकर्ताको भूमिकामा देखा पर्न सक्छन्। जस्तै : पनिकाले सूचना निकाल्यो। लोकसेवा आयोगले नतिजा प्रकाशन गर्‍यो।

**(ख) करण कारक**

क्रियाको साधन, मध्यम वा उपकरणका रूपमा काम गर्ने कारकलाई करण कारक भनिन्छ। जस्तै : म **कलमले** लेख्छु। हरिले **लट्ठीले** सर्प मार्‍यो। ढुङ्गाले खुट्टा किच्यो। हावाले रुख ढाल्यो। करण कारकलाई फिमोरले निम्न लिखित सन्दर्भमा प्रयोग हुने बताएका छन् :

१. कर्तालाई सघाउने साधनका रूपमा, जस्तै : रामले **लट्ठीले** सर्प मार्‍यो। हरिले **कलमले** लेख्यो। शिवले **साँचाले** ढोका खोल्यो।

२. कार्यको कारणका रूपमा, जस्तै : ढुङगाले खुट्टा किच्यो।

३. मानसिक अनुभूतिको उत्प्रेरकका रूपमा,जस्तै : **तिम्रो आगमनले** म खुसी भएँ।
**उसले पढेको देखेर** मलाई पढ्न मन लाग्यो।

४. कार्यको कारणका रूपमा आउने प्राकृतिक घट्ना, जस्तै : **हावाले** रुख ढाल्यो। **असिनाले** बाली बिगार्‍यो।
कतिपय भाषाशास्त्रीले करण कारकका रूपमा आउने प्राणी बाहेकका शक्तिलाई बलकारक, हेतु कारक पनि भनेको पाइन्छ। जस्तै :

भूकम्पले घर भत्कायो। (बलकारक)
खोलाले मान्छे बगायो। (बलकारक)
साँचोले ढोका खोल्यो। (हेतु कारक)

**(ग) अनुभावक कारक**

वाक्यमा क्रियाको फल भोग्ने वा अनुभव गर्ने सजीव नामलाई अनुभावक कारक भनिन्छ। यसमा क्रियाको असर पर्ने अनुभव गर्न चाहेर वा नचाहेर पनि भोग्न बाध्य हुने सचेत तर निष्क्रिय रहने सजीव प्राणी अनुभावक कारकका रूपमा आउँछन्। जस्तै :

राम निराश छ।
मलाई तिर्खा लाग्यो।
हरिलाई भोक लाग्यो।
म प्रसन्न छु।

रामलाई ज्वरो आयो।

**(घ) प्रवर्त्य/प्रभावी कारक**

क्रिया व्यापारका निम्ति सक्रिय नहुने तर त्यसबाट प्रभावित भई त्यसको स्वरूप वा अवस्थामा परिवर्तन हुने नामलाई प्रभावी कारक वा प्रवर्त्य कारक भनिन्छ। जस्तै :

ऐना फुट्यो।

पात झर्‍यो।

बस दौड्यो। आदि।

**(ङ) परिणामी कारक**

क्रियाको व्यापारबाट निर्माण हुने निर्जीव नामलाई परिणामी कारक भनिन्छ। जस्तै : भात पाक्यो। (चामलबाट भात निर्माण)। सिकर्मीले कुर्सी बनायो। (काठबाट) सीताले बत्ती काती। (धागोबाट)।

**(च) निरपेक्ष वा उदासीन कारक**

फिलमरले सुरुमा कर्मकारक भनी चर्चा गरेको कारकलाई पछि निरपेक्ष वा उदासीन कारक भनी नामकरण गरेका छन्। यसमा वस्तुको आकार परिवर्तन हुँदैन तर प्रभावित चाँहि हुन्छ। जस्तै : रामले कलम झोलामा राख्यो। टाउकोमा टोपी छ। मैले हिमाल देखें।

**(छ) लाभक कारक**

क्रियाको कार्यबाट फल प्राप्त गर्ने वा लाभ पाउने नामपद लाभक कारक हो। जस्तै : मैले हरिलाई पैसा दिएँ। मैले उसका लागि उपहार किनें।

**(ज) स्रोत कारक**

घट्नाको प्रारम्भ विन्दु, गतिको आरम्भ विन्दु र वस्तु प्रारम्भ हुनु भन्दा अघिको अवस्था स्रोत कारक हो। जस्तै : रुखबाट पात झर्‍यो। ऊ अमेरिकाबाट काठमाडौँ आयो। दुधबाट दही निकाल्यो।

**(झ) लक्ष्यकारक**

घटनाको अन्तिमविन्दु वा सायको अन्तिम सीमा लक्ष्यकारक हो। जस्तै : राम भुइँमा लड्यो। बाफबाट पानी बन्यो।

**(ञ) अधिकरण कारक**

क्रियासँग आउने स्थान वा समय जनाउने नाम शब्द अधिकरण कारक हो। यसलाई स्थानवाची र कालवाची गरी वर्गीकरण गरिएको पाइन्छ।

स्थान वाचक : माछा पोखरीमा बस्छ। दराजमा पुस्तक छ। टेबलमा किताब छ।

कालवाचक : आज धेरै गर्मी छ।

ऊ बुधबार आउँछ।

**(ट) सह कारक**

क्रियाको व्यापार सम्पन्न गर्न अन्य कारकसँग संयुक्त भई आउने कारकलाई सहकारक भनिन्छ। सीता **रामसँग** घर गई। हरि **गणेशसँग** बजार गयो।

### ३.५.४ कारकीय रूपान्तरण

फिलमोर रूपान्तरण भाषा व्याकरण सिद्धान्तका अनुयायी भएका हुनाले उनले कारकमा पनि आन्तरिक संरचनाबाट बाह्य संरचनामा रूपान्तरण हुन्छ भन्ने अवधारणा प्रस्तुत गरेका छन्। उनले आन्तरिक कारकहरू सबै भाषामा समान हुन्छन् तर बाह्य कारक भने भाषा अनुसार फरक फरक पनि हुन सक्छन भनेका छन्। आन्तरिक कारक मान्छेका मनोभावनामा हुन्छ। त्यसलाई व्याख्या गर्ने अवस्था भने बाह्य कारक हुन्छ भन्ने फिलमोरको मान्यता रहेको छ। संसारका सबै भाषामा निश्चित भूमिका जनाउने समान कारकहरू आन्तरिक कारक हुन्। आन्तरिक कारक कुनै भाषा विशेषमा निश्चित रूपान्तरण नियमहरू लागेर बाह्य कारकका रूपमा रूपान्तरण हुने गर्दछ। यस प्रकार आन्तरिक कारक बाह्य कारकमा रूपान्तरण हुने प्रक्रियालाई कारकीय रूपान्तरण भनिन्छ।

आन्तरिक कारक संसारका सबै भाषा समान रहेको मानिन्छ। बाह्य कारक भने भाषा अनुसार फरक फरक हुन्छ। नेपालीमा बाह्य कारकसँग ले, लाई, बाट, मा, को, जस्ता विभक्ति चिह्न लाग्छन्। अन्य भाषामा नेपालीकै जस्ता विभक्ति चिह्न लाग्न वा नलाग्न सक्छन्। सार्वभौम रूपमा रहेको आन्तरिक कारक भाषा विशेषको विशेषता अनुसार भिन्न रूपमा प्रकट हुन्छ वा रूपान्तरण हुन्छ भन्ने मान्यता फिलमोरले अगाडि सारेका छन्। यही रूपान्तरणको प्रक्रियालाई कारकीय रूपान्तरण भनिन्छ।

सामान्यतः क्रियासँग सङ्गति राख्ने नामपद कर्ताकारक हो। यो आन्तरिक कारक हो। बाह्य संरचनामा आउँदा भने कर्ताकारक अभिकर्ता, बल, प्रवर्त्य, परिणामी, अनुभावक, निरपेक्ष, स्रोत, अधिकरण, लाभक, जस्ता कारकमा रूपान्तरण हुन्छ।

**जस्तै : रामले श्यामलाई सिकायो। (अभिकर्ता)**

**राम पढ्छ (अभिकर्ता)।**

**खोलाले** रुख बगायो। (बल कारक)

म **कलमले** लेख्छु (करण)

पात झर्‍यो। **रुख** ढल्यो। (प्रवर्त्य)

**मलाई** भोक लाग्यो (अनुभावक)

भात पाक्यो (परिणामी)

ऐना फुट्यो (प्रभावी)

सिकर्मीले **कुर्सी** बनायो। (परिणामी)

**किताब** टेबुलमा छ। (निरपेक्ष/उदासीन)

बाफबाट पानी बन्यो। (लक्ष्य)
रुखबाट पात झर्‍यो। (स्रोतकारक)
रामले हरिलाई पैसा दियो। (लाभक)
घरमा पानी जम्यो। (अधिकरण)
रामले पैसा पायो। (लाभक)
सीता रामसँग घर गई (सहकारक)

यी उदाहरणहरूमा सामान्यतः सुरुमा आन्तरिक सबै नामपद उस्तै देखिन्छन्। आन्तरिक रूपमा उस्तै देखिए पनि बाह्य रूपमा तिनका अर्थ फरक फरक छन्। यस प्रकार उही कर्ताकारक विभिन्न कारकमा रूपान्तरण भएको छ। यस्तो रूपान्तरण कारकीय रूपान्तरण हो।

आन्तरिक रूपमा रहने कर्मकारक पनि विभिन्न कारकमा रूपान्तरण भएको पाइन्छ। सामान्यतः क्रियाको फल भोग्ने वा कर्ताले जुन वस्तु माथि काम गर्छ, त्यो नामपद आन्तरिक रूपमा कर्मकारक हुन्छ। बाह्य रूपमा आउँदा भने कर्मकारक पनि प्रवर्त्य, परिणामी, निरपेक्ष/उदासीन, लाभक आदि कारक रूपान्तरण हुन्छ। जस्तै : उसले भाइलाई पिट्यो (प्रवर्त्य)। सिकर्मीले मेच बनायो। (परिणामी)

हरिले रामलाई पैसा दियो। (लाभक)
हरिले पैसा दियो। (उदासीन)

### ३.५.५ नेपाली भाषाका मुख्य कारकहरू

नेपाली भाषाका कारकहरू कुन-कुन हुन् भन्ने विषयमा भाषशास्त्रीहरूका अलग-अलग भनाइ रहेको छन्। नेपाली भाषाका कारकहरूका बारेमा श्रीमती विकी जुन अब्दुल्कीले सन् १९६९ को शोधपत्रमा नेपाली कारकलाई मुख्य र सहायक गरी निम्नानुसार वर्गीकरण गरेकी छन् :

**मुख्य कारक**
(१) कर्तृक (२) कर्मिक (३) सम्प्रदान (४) प्रेरक कर्ता

**सहायक कारक**
(१) करण (२) अधिकरण (३) सहभागी

देवीप्रसाद गौतमको फिलोमोरको कारक व्याकरण र नेपालीका कारकहरू शीर्षकको पिएच.डी. शोध ग्रन्थ (२०५३) मा अभिकर्ता, करण, अनुभावक, उदासीन, सम्प्रदान, स्रोत, लक्ष्य र अधिकरण कारकको चर्चा गरिएको छ।

अस्टिन हेलले नेपाली कारकलाई केन्द्रीय र परिधीय गरी दुई भागमा वर्गीकरण गरिएको पाइन्छ। यस अनुसार :

| केन्द्रीय | परिधीय |
|---|---|
| क्रियासँग प्रत्यक्ष सम्बन्ध राख्ने<br>१. अभिकर्ता<br>२. अनुगमक<br>३. क्षेत्र | क्रियासँग ऐच्छिक रूपले सम्बन्ध राख्ने<br>१. स्थान<br>२. समय<br>३. सम्प्रदान ४. स्रोत ५. लक्ष्य<br>६. सहकारक ७. करण<br>८. लाभक |

हेमाङ्गराज अधिकारीले नेपाली कारकलाई निम्नानुसार वर्गीकरण गरेका छन् :

| केन्द्रीय | परिधीय |
|---|---|
| १. अभिकर्ता | १. अधिकरण |
| २. प्रवर्त्य | २. करण |
| ३. परिणामी | ३. हेतु |
| ४. निरपेक्ष | ४. अपादान |
| ५. अनुभावक | ५. लाभक |
| ६. अनुप्रापक | ६. प्रयोजनीय |
| ७. सत्तात्मक | ७. सहार्थक |

यी विभिन्न आधारमा हेर्दा नेपाली कारक निम्नलिखित मान्न सकिन्छ :

| केन्द्रीय कारक | परिधीय कारक |
|---|---|
| १. अभिकर्ता | १. अधिकरण |
| २. प्रवर्त्य | २. करण |
| ३. परिणामी | ३. अपादान |
| ४. निरपेक्ष | ४. लाभक |
| ५. अनुभावक | |

## ३.५.६ कारकीय व्याकरणका आधारमा नेपाली वाक्यको विश्लेषण

कारक व्याकरणका अनुसार वाक्यको विश्लेषण गर्दा वाक्यलाई प्रकारता (Modality–मोडालिटी) र प्रतिज्ञप्ति (Proposition–प्रोपोजिसन) गरी दुई घटकमा वर्गीकरण गरिन्छ । यस अनुसार प्रकारतामा वाक्यको काल, भाव, पक्ष, वाच्य, अकरण जस्ता कोटिको विश्लेषण गरिन्छ र प्रतिज्ञप्ति अन्तर्गत क्रिया र कारकहरू राखिन्छ । यस ढाँचा अनुसार वाक्यको विश्लेषण गर्दा रूपान्तरण सिद्धान्तको रेखाचित्रको ढाँचालाई अपनाइन्छ।




**यसैलाई विभक्ति समेत छुट्याएर देखाउन सकिन्छ :**




## ३.५.७ चम्स्की र फिलमोरको कारकीय दृष्टिकोणको तुलना

चम्स्की र फिलमोर दुवै रूपान्तरण सिद्धान्तका भाषाशास्त्री हुन् । दुवै भाषाशास्त्रीले भाषाको आन्तरिक संरचनाबाट बाह्य संरचनामा रूपान्तरण हुने कुरा बताएका छन् । दुवै भाषाशास्त्रीले कारकका बारेमा पनि चर्चा गरेका छन् । यस्ता समानता हुँदाहुँदै पनि यिनीहरूका कारकीय धारणमा कतिपय भिन्नता पाइन्छन् । चम्स्कीले कारकलाई अधिशासन सिद्धान्त अन्तर्गत चर्चा गरेका छन् भने फिलमोरले वाक्य विश्लेषणको महत्त्वपूर्ण पद्धतिको रूपमा कारकलाई लिएका छन् । चम्स्कीले कारक सिद्धान्तका बारेमा सामान्य चर्चा गरेका छन् भने फिलमोरले कारक

सिद्धान्तलाई भाषा व्याकरणको एउटा अलग्गै र स्वतन्त्र सिद्धान्तका रूपमा स्थापित गरेका छन्।

चम्स्कीले कारकलाई अधिशासन सिद्धान्त अन्तर्गत चर्चा गरेका छन्। उनले कारकलाई निम्न लिखित चार प्रकारमा वर्गीकरण गरेका छन् :

१. कर्ता कारक
२. कर्म कारक
३. वैकल्पिक कारक वा अन्य कारक
४. सम्बन्ध कारक

**१. कर्ताकारक :**

चम्स्कीले वाक्यमा रहेको सहायक क्रियाद्वारा अधिशासित हुने नामपदलाई कर्ताकारक भनेका छन्। जस्तै : राम भात खान्छ। यहाँ खान्छ क्रियाको सहायक क्रिया 'छ' द्वारा अधिशासित राम कर्ता कारक हो। त्यस्तै, हरिले पढ्यो। यहाँ सहायक क्रिया 'यो' ले हरिमाथि अधिशासन गरेको छ। 'यो' ले पुलिङ्ग एकवचन तृतीय पुरुष, जनाउने हुनाले यी विशेषता भएको हरि कर्ताकारक हो। यी विशेषताभन्दा भिन्न विशेषता भएको कर्ता राख्दा सहायक क्रिया बदल्नुपर्ने हुन्छ। यसैले कर्ताकारक सहायक क्रियाद्वारा निर्देशित हुन्छ भन्ने चम्स्कीको मान्यता छ।

**२. कर्मकारक**

चम्स्कीले मुख्यक्रियाद्वारा अधिशासित नामपदलाई कर्मकारक भनेका छन्। जस्तै : राम भात खान्छ।

यहाँ मुख्य क्रिया खाद्वारा भात अधिशासित छ। त्यसैले भात कर्म कारक हो। खाको सट्टामा बस्, हिँड् मुख्य क्रिया राख्ने हो भने भात बदल्नु पर्छ। यसर्थ यहाँ मुख्य क्रिया कर्मद्वारा अधिशासित हुन्छ। यस प्रकारको अवस्थालाई कर्म कारक भनिन्छ।

**३. वैकल्पिक वा अन्य कारक :**

चम्स्कीले कर्ता र कर्मकारक सम्बन्ध बाहेकका अन्य कारकलाई वैकल्पिक कारक भनेका छन्। यो कारक परसर्गद्वारा अधिशासित हुन्छ। जस्तै : राम घरेलु काम गर्छ।

**४. सम्बन्ध कारक :**

वाक्यमा आएका नामपदहरूको सम्बन्ध देखाउने कार्यलाई सम्बन्धकारक भनिन्छ। नेपालीका को, का, की, रो, रा, री, नो, ना, नी, विभक्ति लागेका

नामपद सम्बन्ध कारक हुन्। जस्तै : रामले भाइले भात खायो। ऊ आफ्नो घर गयो। मेरो पुस्तक हरायो।

फिलमोरले कारकलाई क्रियासँग सम्बन्धित नामपद भनेका छन्। उनले कारकलाई यस प्रकार वर्गीकरण गरेका छन् :

(१) अभिकर्ता, (२) करण, (३) अनुभावक, (४) प्रवर्त्य, (५) परिणामी, (६) उदासीन/निरपेक्ष, (७) लाभक, (८) स्रोत, (९) लक्ष्य, (१०) अधिकरण र (११) सहकारक। यसको बारेमा अगाडि चर्चा गरिसकिएको छ।

निचोडमा हेर्दा चम्स्कीले कारकलाई अधिशासन सिद्धान्तको एउटा अङ्गका रूपमा हेरेका छन् भने फिलमोरले स्वतन्त्र सिद्धान्तका रूपमा हेरेका छन्। चम्स्कीले चारप्रकारका कारकको चर्चा गरेका छन्। फिलमोरले ११ प्रकारका कारकको चर्चा गरेका छन्।

❑❑

परिच्छेद ४

# व्यवस्थापक/प्रकार्यपरक व्याकरणको भाषिक विश्लेषण पद्धति

## ४.१ व्यवस्थापरक विश्लेषण पद्धति

व्यवस्थापरक वा प्रकार्यपरक व्याकरण सिद्धान्तले भाषिक विश्लेषणका विभिन्न पद्धतिहरूको विकास गरेको छ। यस्ता पद्धतिका बारेमा तल चर्चा गरिएको छ।

### ४.१.१ भाषाका तह र अन्तर्तहको पहिचान

व्यवस्थावादीहरूले भाषामा मुख्य तिन ओटा स्तर वा तह हुन्छ भनेका छन्। उनीहरूका अनुसार ती तिन तह निम्नानुसार छन् :

(१) वस्तु
(२) रूप र
(३) स्थिति /परिस्थिति

यी तिन तहलाई जोड्ने अन्तर तहका बारेमा पनि व्यवस्थावादीहरूले चर्चा गरेका छन्।

यसलाई निम्न लिखित तालिकामा देखाउन सकिन्छ :

| तह | वस्तु | | रूप | परिस्थिति |
|---|---|---|---|---|
| स्तर | कथ्य वर्ण | लेख्य लिपि | रूप, शब्द, पदसमूह, उपवाक्य, वाक्य (व्याकरण) | व्यवस्थावादीहरू यसलाई अभाषिक स्तर भन्छन्। |
| जोड्ने अन्तर्तह | वर्णविज्ञान ध्वनिविज्ञान | लिपिविज्ञान वर्णविज्ञान | व्यवस्थावादीका अनुसार भाषाविज्ञान | समाजमा हेरिन्छ। |

(१) **वस्तु :** वस्तु भाषाको भौतिक सामाग्री हो । यो उच्चारणबाट वा लिखित रूपमा आउँछ । उच्चार्य वस्तुलाई ध्वनि र वर्णका रूपमा बुझ्न सकिन्छ । यसको अध्ययन भाषाविज्ञान अन्तर्गत ध्वनिविज्ञान र वर्णविज्ञानमा गरिन्छ।

(२) **रूप :** रूप भाषाको अर्को तह हो। रूपको निर्माण वर्ण र लिपिबाट हुन्छ। रूप अन्तर्गत व्याकरण पर्दछ । व्याकरणको अध्ययन भाषाविज्ञान अन्तर्गत रूपविज्ञान तथा वाक्यविज्ञानमा हुने गर्दछ।

(३) **स्थिति /परिस्थिति :** भाषाको अर्को तह परिस्थिति हो । परिस्थिति सामाजिक परिवेश अनुसार निर्धारण हुन्छ। परिस्थिति समाजको संस्कृति, समय, आर्थिक तथा सामाजिक स्तर आदिबाट निर्धारित हुन्छ । भाषाका सन्दर्भमा यसको अध्ययन अर्थ विज्ञानमा गरिन्छ।

वस्तु, रूप र परिस्थिति यी तिन ओटा भाषाका तहलाई जोड्ने तिन ओटा अन्तरतह हुन्छन् । वर्ण, लिपि र सन्दर्भ अन्तर तह हुन् । मान्छेले उच्चारण गरेको ध्वनिलाई रूपको तहमा पुऱ्याउन कथ्य रूपमा वर्ण र लेख्य रूपमा लिपिले काम गर्दछन्। यसर्थ वस्तु र रूप जोड्ने अन्तर तह वर्ण र लिपि हुन्। यिनलाई ध्वनितत्त्व () पनि भनिन्छ। रूप र परिस्थितिलाई जोड्ने अन्तर तह सन्दर्भ हो। सन्दर्भले शब्द, पदावली, वाक्य जस्ता भाषांशको अर्थ बुझ्न सहयोग गर्दछ । यसरी व्यवस्थावादीहरूले वस्तु, रूप र स्थितिलाई भाषाका स्तर वा तह भनेका छन् । त्यसैगरी वर्ण, लिपि र सन्दर्भलाई अन्तर तह भनेका छन्।

### ४.१.२ भाषिक एकाइ र श्रेणी

भाषाको विस्तारलाई एकाइ भनिन्छ। व्याकरणिक आधारमा हेरिने विस्तार नै एकाइ हो। नेपाली भाषामा भाषाको लघुतम भाषिक एकाइ रूप हो। रूप पछि शब्द, शब्दावली, उपवाक्य हुँदै वाक्यका तहमा पुग्दा भाषाको विस्तारको क्रम टुङ्गिन्छ। यस प्रकार भाषाको विस्तारका क्रममा देखा पर्ने यस्ता तहहरू एकाइ हुन् । एकाइ सैद्धान्तिक कोटि हो। व्यवस्थावादीहरूका अनुसार एकाइको श्रेणी हुन्छ भनेका छन्। एकाइहरूमा सोपानक्रम तलदेखि माथिसम्म जाने र माथिदेखि तलसम्म झर्ने खुड्किलो हुन्छ। त्यही भाषिक एकाइको सोपानक्रमहरूको आपसी सम्बन्ध देखाउने शृङ्खलालाई श्रेणी भनिन्छ। एउटा निश्चित मापदण्डहरूभित्र सोपानहरूको एकाइमा कुन, कहाँ र के-कस्तो सम्बन्ध छ भन्ने कुरा नै श्रेणी हो। एकाइमा सबै भन्दा तल्लो, बिचको र माथिको गरी सोपानक्रममा देखाइने र यी एकाइहरू बिचको आपसी सम्बन्ध प्रस्टिने विषय नै श्रेणी हो। नेपाली भाषाका एकाइहरूलाई श्रेणीका आधारमा निम्नानुसार देखाउन सकिन्छ :




यस अनुसार सबैभन्दा सानो रूप त्यसपछि शब्द, त्यसपछि पदसमूह, त्यसपछि उपवाक्य र सबैभन्दा ठुलो वाक्य नेपाली भाषाको श्रेणीक्रम हो। यस अनुसार हरेक माथिल्लो श्रेणीमा त्यसभन्दा ठिक तलको एकाइले काम गरेको हुन्छ। उदाहरणका लागि शब्दको श्रेणीमा रूप एकाइले, पदसमूहको श्रेणीमा शब्दले काम गरेको हुन्छ। तर कतिपय अवस्थामा यो क्रम भङ्ग भएको पाइन्छ। नेपालीमासरल र संयुक्त वाक्यमा शब्दले सोझै वाक्यमा गएर काम गर्ने, पदसमूहले सोझै वाक्यमा गएर काम गर्ने अवस्था पनि हुन्छ। यसको अवस्थालाई श्रेणीमा देखा पर्ने क्रमभङ्ग वा श्रेणीअन्तर वा श्रेणीभङ्ग भनिन्छ।

### ४.१.३ भाषिक संरचना र व्यवस्था

संरचना भनेको बनोट हो। साना एकाइबाट ठुला एकाइको बनोट हुने गर्दछ। यस प्रकारको बनोटलाई संरचना भनिन्छ। नेपाली भाषाको संरचना निम्नानुसार रहेको पाइन्छ :

| साना एकाइ | ठुला एकाइ |
|---|---|
| रूप (उप, कार, ई) | शब्द |
| शब्द (उपकारी) | पदसमूह |
| पदसमूह (उपकारी मानिस) | उपवाक्य (उपकारी मानिसको उपकारले गर्दा) |
| उपवाक्य | वाक्य (उपकारी मानिसको उपकारले गर्दा उसको भलो भयो |

व्यवस्थावादीहरूका अनुसार संरचना शृङ्खलामा देखिन्छ। जस्तै : शब्दमा उपसर्ग आउने ठाउँमा प्रत्यय आउँदैन, अगाडि उपसर्ग अथवा पछाडि प्रत्यय शृङ्खलाबद्ध भएर आउँछ, नेपाली वाक्यमा उद्देश्यपछि विधेय आउँछ। यस प्रकार नेपाली वाक्यको संरचना उद्देश्य + विधेयको संयोजन हो। यसरी नै वाक्यमा उद्देश्य, विधेय, पूरक जस्ता घटकहरू पनि आउँछन्। यस प्रकार भाषाको कुनै एकाइ बन्नका लागि त्यसमा देखा पर्ने तल्ला एकाइहरूको शृङ्खला नै संरचना हो।

व्यवस्थावादीहरूले भाषामा विकल्पहरूको समुच्चयलाई व्यवस्था मानेका छन् र संरचना भन्नु नै एक प्रकारले व्यवस्था हो भन्ने मान्दछन्। निष्कर्षमा भन्नुपर्दा

भाषिक संरचना भनेको व्यवस्था हो । व्यवस्थापरक व्याकरणमा व्यवस्थाहरूको शृङ्खलालाई नै व्याकरण भनिन्छ। एकपछि अर्को विकल्प छान्दै जानु र छानिएका विकल्पहरूलाई एक आपसमा जोड्नु र शृङ्खलाबद्ध बनाउनु नै यस सिद्धान्त अनुसार संरचना हो र यो आफैमा व्यवस्था पनि हो। यस प्रकार संरचना र व्यवस्था एक अर्कामा अन्तर्सम्बन्धित हुन्छन्।

## ४.१.४ भाषिक सूक्ष्मता

भाषिक एकाइहरूको विश्लेषण गर्दै तिनलाई विस्तृत रूपमा वर्गीकरण गरिने कार्यलाई सूक्ष्मता भनिन्छ । भाषिक एकाइलाई विभिन्न आधारमा वर्गीकरण गर्न सकिन्छ। यसरी वर्गीकरण गरी तिनका भेद, उपभेद, प्रकार, उपप्रकार छुट्याउने कार्य नै सूक्ष्मता हो । सूक्ष्मतालाई न्यूनतम सूक्ष्मता र अधिकतम सूक्ष्मता गरी वर्गीकरण गरिएको पाइन्छ।

(क) **न्यूनतम सूक्ष्मता :** कुनै एकाइलाई पहिलो पटक गरिने वर्गीकरण न्यूनतम सूक्ष्मता हो। यसलाई प्राथमिक वर्गीकरण पनि भनिन्छ। जस्तै नाम, सर्वनाम, क्रिया, विशेषण जस्तो शब्दको प्रारम्भिक वर्गीकरण न्यूनतम सूक्ष्मता हो । सूक्ष्मताको विश्लेषण गर्दा) दुई भन्दा बढी भाषिक एकाइको समानता देखाउन न्यूनतम सूक्ष्मता हो।

जस्तै : त्यो एउटा ठुलो कालो, बलियो, कुकुर
(वि) (वि) (वि) (वि) (वि) (नाम)

यहाँ पाँचओटा विशेषण शब्दहरू छन् । यिनका बिचमा समानता रहेको छ। यस प्रकारको समानताको विश्लेषण न्यूनतम सूक्ष्मता हो।

(ख) **अधिकतम सूक्ष्मता :** प्रारम्भिक वर्गीकरण पछि फेरि गरिने वर्गीकरण अधिकतम सूक्ष्मता हो। दोस्रो पटक वर्गीकरण गरिने हुनाले यसलाई दोयम वर्गीकरण पनि भनिन्छ। यस्तो वर्गीकरणले दुईभन्दा बढी एकाइका बिचको असमानता देखाउँछ । यसले अधिकतम अवस्थामा गएर हेर्दा उस्तै लाग्ने विषयमा पनि असमानता हुन्छन् भन्ने देखाउँछ। जस्तै :




माथिको उदाहरणमा त्यो, एउटा, ठुलो, बलियो र कालो शब्दले विशेषणको काम गरेको छन्। यस प्रकारको वर्गीकरण प्रारम्भिक वर्गीकरण हो। यसपछि पनि यी

शब्दहरूलाई विभिन्न आधारमा वर्गीकरण गर्न सकिन्छ। पछि गरिने वर्गीकरण दोयम वर्गीकरण भनिन्छ। जस्तै :




जुन तहमा समानता हुन्छ। त्यो न्यूनतम सूक्ष्मता हो, जहाँ विरोध वा विपरीत हुन्छ त्यो अधिकतम सूक्ष्मता हो । माथिको उदाहरणमा प्रारम्भिक वर्गीकरणमा समानता छ, त्यो न्यूनतम सूक्ष्मताको अवस्था हो। दोयम वर्गीकरणमा असमानता छ, त्यो अधिकतम सूक्ष्मता हो। वाक्यका तहमा पनि यस प्रकारको सूक्ष्मता हेर्न सकिन्छ। जस्तै :




यसरी सूक्ष्मताको विश्लेषणबाट भाषिक एकाइहरूमा रहेका समानता र असमानता थाहा पाउन सकिन्छ।

## ४.२ प्रकार्यपरक विश्लेषण पद्धति

प्रकार्यपरक विश्लेषणका प्रमुख पद्धकि बारेमा तल चर्चा गरिएको छ :

### ४.२.१ भाषांश/पाठ र परिस्थितिगत सन्दर्भ

**भाषांश/पाठ**

भाषाको अंश वा टुक्रालाई भाषांश वा पाठ भनिन्छ । निश्चित परिस्थितिमा वक्ता र स्रोता बिचमा भावना र विचार आदान प्रदान गर्न सक्ने भाषाको एउटा अंशलाई भाषांश भनिन्छ । भाषांशमा एउटा शब्ददेखि एउटा अनुच्छेद, एउटा कविता, कथा, उपन्यास, महाकाब्य आदि सम्म पनि पर्दछन् भन्ने व्यवस्थावादीहरूको मत रहेको छ । जुन भाषिक अंशले वक्ता र स्रोता

विचको सम्प्रेषण पुरा गर्दछ, त्यही नै भाषांश हुन्छ। वार्तालापका क्रममा एउटा शब्दले पनि अर्थ पुरा गर्न सक्छ भने त्यो भाषांश हुन्छ। जस्तैः- घर कहिले जाने? भोलि। यस उदाहरणमा 'भोलि' शब्दले अर्थ पुरा गरेको छ। प्रश्नकर्ताले उसको स्रोतालाई घर जाने दिन सोधेको छ। स्रोताले 'भोलि' भन्ने शब्दमा दिएको जवाफले वक्ताले चाहेको जिज्ञासा पुरा भएको छ। यसर्थ उपयुक्त शब्द भोलि एउटा भाषांशका रूपमा रहेको छ। कतिपय अवस्थामा बक्ताले स्रोतालाई लामो कथनबाट अथवा कविता, कथा, उपन्यास, महाकाव्य आदि संरचनाबाट केही कुरा बताउन चाहन्छ। यस्तो अवस्थामा ती भाषिक एकाइहरू एउटा भाषांश हुन्छन भन्ने व्यवस्थावादीहरूको मान्यता रहेको छ।

**परिस्थितिगत सन्दर्भ**

व्यवस्थावादीहरूले भाषाको अर्थबोधका लागि सन्दर्भको आवश्यकता पर्ने बताएका छन्। कुनै भाषांशले अर्थ प्रदान गर्नका लागि त्यसभन्दा अगाडिको सन्दर्भ जान्नुपर्ने हुनसक्छ। घर कहिले जाने? भोलि। भन्ने उदाहरणमा 'भोलि' भाषांशको अर्थ बुझ्न अघिल्लो भाषांश 'घर कहिले जाने' भन्ने सन्दर्भ जान्नुपर्दछ। यसैगरी समय, परिस्थिति, संस्कृति आदिले भाषांशको अर्थ बुझाउन सहयोग गर्दछन्। यस प्रकारको समय, परिस्थिति, संस्कृति आदिलाई सन्दर्भ भनिन्छ। उदाहरणका लागि 'घाम अस्तायो' भन्ने भाषांशलाई कृष्णप्रसाद भट्टराईको मृत्यु भएको सन्दर्भमा र एमाले पार्टीले चुनाब चिह्नका सन्दर्भमा प्रयोग गर्दा भिन्न अर्थ बुझिन्छ। चोरले यही भाषांशलाई चोर्ने बेला भयो भन्ने बुझ्न सक्छ, गोठाला प्रयोग गर्दा गाईबाख्रा घर लैजान सक्ने भयो भन्ने बुझ्न सक्छ। यसरी समय, परिस्थिति संस्कृति, पेसा आदिका आधारमा अर्थको निर्माण हुने यथार्थलाई व्यवस्थावादीहरूको सन्दर्भ भनेका छन्।

**भाषांश र सन्दर्भका बिचको सम्बन्ध**

व्यवस्थावादीहरूका अनुसार भाषांशको अर्थमा सन्दर्भले महत्त्वपूर्ण भूमिका खेल्दछ। सन्दर्भ भनेको ठाउँ, परिस्थिति, समय, वक्ता र स्रोता बिचको सम्बन्ध आदि हो। एउटै भाषांश सन्दर्भ अनुसार फरक-फरक अर्थ दिने हुन्छ।

(१) अर्थ उही भए पनि सन्दर्भ अनुसार भाषांश फरक हुन्छ। जस्तैः- घिच, खा, आऊ, खाइसियोस्, खाइबक्सियोस्।

(२) भाषांश उही भए पनि सन्दर्भ अनुसार अर्थमा फरक पर्न सक्छ।
ध्वनि शब्द : विज्ञान- सबै आबाज, भाषाविज्ञान - मान्छेका उच्चारण अवयवद्वारा उच्चरित अर्थपूर्ण ध्वनि, साहित्य - व्यङ्ग्यार्थ

### ४.२. २ पाठका प्रयोजनपरक भेद (रजिस्टर ) र विधा (जान)

सामाजिक प्रयोजनका सन्दर्भमा प्रयोग हुने भाषिक भेदलाई प्रयोजनपरक भेद भनिन्छ । यसमा प्रकार्य नै मुख्य हुन्छ । प्रयोजनपरक भेदलाई प्रयोग अनुसार परिभाषित गरिन्छ। प्रत्येक व्यक्तिले भाषाको प्रयोग गर्दा समाजमा आफ्नो भूमिकाको निर्धारण गर्दछ । विषयक्षेत्र अनुसार भाषाको प्रयोगमा भिन्नता हुन्छ । यसलाई विषयगत प्रयुक्ति पनि भनिन्छ । विषय क्षेत्रको विशिष्टता अनुसार भाषिक शब्द, वाक्यढाँचा आदिमा पाइने भेद वा भिन्नता नै भाषाको विषयक्षेत्र गत भेद हो। विज्ञान तथा प्रवृत्ति, कानुन, वाणिज्य, आमसंचार, साहित्य आदि क्षेत्रमा फरक-फरक भाषिक प्रयोग पाइन्छ। जस्तैः

**(क) विषय क्षेत्र अनुसार**

१. **विज्ञान तथा प्रविधि क्षेत्र** – कम्प्युटर, ओजन, हाइट्रोजन, अक्सिजन,

२. **आमसञ्चार वा पत्रकारिता** – पत्रिका, समाचार, सम्पादक, सम्वाददाता,

३. **कानुनी क्षेत्र** – वादी, प्रतिवादी, मुद्दा, अदालत, वकिल, (कानुनी क्षेत्रमा वाक्यमा पनि भेद पाइन्छ ।) मुद्दामामिलाको भाषा अलग्गै हुन्छ । सामान्य निवेदन भन्दा अड्डा, अदालतमा दिने निवेदन फरक हुन्छ।

४. **वाणिज्यक्षेत्र** – नाफा, नोक्सान, आयात, निर्यात, उद्योग, पारवहन, बिल, भौचर, खाता, लेखापरीक्षण, पेस्की आदि ।

५. **साहित्यिक क्षेत्र** – कथा, कथाकार, कवि, कविता, श्लोक, चरित्र, दृष्टिबिन्दु, कथानक, पात्र, परिवेश ।

६. **प्रशासनिक क्षेत्र** – काज, बढुवा, सरुवा, नियुक्ति, अवकाश, पेन्सन, उपदान।

७. **धार्मिक क्षेत्र** – मन्दिर, भजन, अनुष्ठान, स्वर्ग, नर्क, अवतार, परमात्मा,

यसैगरी समाजशास्त्र, मानवशास्त्र, भूगोल, गणित, अर्थशास्त्र, आदि अलग-अलग विषयक्षेत्रमा भाषिक प्रयोगमा भेद पाइन्छ । यस प्रकारको भेदलाई विषय क्षेत्रका आधारमा प्रयोजनपरक भेद भनिन्छ।

**(ख) माध्यमपरक :**

विषयवस्तुको प्रस्तुतिको माध्यमका आधारमा पनि भाषाको प्रयोजनमा भेद पाइन्छ। यसलाई माध्यमगत भेद वा प्रकारगत भेद भनिन्छ। यसका मुख्य दुई ओटा भेद रहेका छन् : कथ्य र लेख्य। वक्ताले आफ्ना उच्चारण अवयवद्वारा उच्चारण गरेर भाषिक सम्प्रेषण गर्ने प्रकार वा माध्यम भाषाको कथ्य भेद हो । यसलाई मौखिक भाषा पनि भनिन्छ। यो व्याकरणिक रूपले त्यति सचेत हुँदैन। एउटा व्यक्ति र अर्को व्यक्तिमा फरक-फरक उच्चारण, शैली हुने गर्छ । यो सरलतातर्फ उन्मुख र परिवर्तनशील हुन्छ । जस्तै : बहिनी - बुइनी, आएको - आको । लिखित रूपमा भाषाको सम्प्रेषण गरिने कार्य भाषाको लेख्य कार्य हो। भाषाको लेख्य रूप कतिपय अवस्थामा कथ्यभन्दा फरक हुन्छ । कथ्यभाषाका तुलनामा लेख्य भाषा कम परिवर्तनशील हुन्छ। लेख्य भाषामा व्याकरणका नियमलाई अनुसरण गरिन्छ। जस्तै :

**कथ्य** **लेख्य**

राम्   राम
उँधेर्को   उनीहरूको

### ४.२.३ पाठका सन्दर्भगत आयाम : क्षेत्र, सहभागी र पद्धति

पाठको सन्दर्भ विषय क्षेत्र, सहभागी र पद्धति अनुसार विशिष्ट हुने गर्दछ।

विषयक्षेत्र अनुसार भाषाको प्रयोगमा भिन्नता हुन्छ। यसलाई विषयगत प्रयुक्ति पनि भनिन्छ। विषय क्षेत्रको विशिष्टता अनुसार भाषिक शब्द, वाक्यढाँचा आदिमा भेद वा भिन्नता पाइनु क्षेत्रगत भेद हो । यस बारेमा अघिल्लो पाठमा चर्चा गरिसकिएको छ।

**सहभागी (प्रयोक्ता)**

भाषाका वक्ता र स्रोतालाई सहभागी भनिन्छ। सहभागीको स्तर, पेसा, वक्ता र स्रोताको सम्बन्ध, उनीहरूको सामाजिक हैसियत आदिका आधारमा पनि पाठमा भेद देखा पर्छ। यस प्रकारको भेदलाई सहभागी वा प्रयोक्ताका आधारको सन्दर्भ भनिन्छ। नेपालमा उच्चकुलीन वर्गको भाषा, मध्यम वर्गको भाषा र निम्न वर्गको भाषामा पाइने भेद यस प्रकारको भेद हो। यसैगरी शिक्षित मानिस र अशिक्षित मानिसको भाषा पाइने भेद, पुरुष र महिलाको भाषामा पाइने भेद, केटाकेटी, युवा र बुढाको भाषामा पाइने भेद, पेसा अनुसार डाक्टर, इन्जिनियर, खेलाडी, शिक्षक, नेता, व्यपारी आदिको भाषामा पाइने भेद पनि सहभागी वा वक्ता र श्रोताका आधारमा रहेको भाषिक भेद हो।

**प्रक्रिया वा पद्धति**

व्यवस्थावादीहरूले भाषाका अनुभाविक, तार्किक, अन्तर्वैयक्तिक र पाठात्मक कार्यमूलक घटक वा प्रकार्यको चर्चा गरेका छन्। यिनै प्रकार्यका आधारमा भाषाका भौतिक, मानसिक र सम्बन्धात्मक प्रक्रियाहरू हुन्छन् भन्ने व्यवस्थावादीको मत रहेको छ।

(क) **भौतिक प्रक्रिया :** स्पष्ट देख्न सकिने भाषिक प्रक्रियालाई व्यवस्थावादीहरूले भौतिक प्रक्रिया भनेका छन्। वाक्यमा खायो र चुद्यो भौतिक प्रक्रिया हुन्। खाएको वा चुठेको क्रियाकलाप आँखाले प्रत्यक्ष देख्न सकिने प्रक्रियालाई व्यवस्थावादीहरूले भौतिक प्रक्रिया मानेका छन्।

(ख) **मानसिक प्रक्रिया :** प्रत्यक्ष आँखाले देख्न नसकिने, वक्ताको मनभित्र हुने र अनुभव मात्र गर्न सकिने प्रक्रियालाई मानसिक प्रक्रिया भनिन्छ। जस्तै: उसले सोच्यो। रामले श्यामलाई माया गर्‍यो। यी वाक्यमा सोच्यो र माया अभौतिक प्रक्रिया हुन्। सोच्ने र माया गर्ने प्रक्रिया आँखाले देख्नेभन्दा पनि अनुभूति गरिने विषय हुन्। यस प्रकारका प्रक्रियालाई व्यवस्थावादीहरूले मानसिक प्रक्रिया भनेका छन्।

(ग) **सम्बन्धात्मक प्रक्रिया :** व्यवस्थावादीहरूले वाक्यमा आएको कर्तालाई चिनाउने र पूरकको प्रयोग भएको अवस्थालाई सम्बन्धात्मक प्रक्रिया भनेका छन्। जस्तै : राम विद्यार्थी हो। ऊ असल छ। सीता बदमास थिई। यी

वाक्यमा आएको हो, छ, थिई क्रियाले कर्तासँगको सम्बन्ध देखाएका छन्। यी क्रियाले वक्ताको परिचय दिएका छन्। व्यवस्थावादीहरूले यस प्रकारको प्रक्रियालाई सम्बन्धात्मक प्रक्रिया भनेका छन्।

### ४.२. ४ पाठका अधिप्रकार्य

व्यवस्थापरक व्याकरणका आधारभूत मान्यता वा धारणा अन्तर्गत चारकोटि, चारआयाम र चारकार्यमूलक घटक पर्दछन्। व्यवस्थावादीहरूले चारकार्यमूलक घटकहरूका बारेमा चर्चा गरेका छन्। भाषाले विचारहरूको सम्प्रेषण (पठाउन) गर्ने सम्प्रेषित विचारलाई सामाजिक सम्बन्धमा हेर्ने र अन्ततः वक्ताका चार ओटा अवस्था नै भाषाका चार कार्यमूलक घटक हुन्। भाषाका यी कार्यमूलक घटकलाई जोड दिने हुनाले व्यवस्थापरक सिद्धान्तलाई प्रकार्यपरक व्याकरण वा प्रकार्यपरक भाषा विज्ञान पनि भनिएको हो। भाषाका चार कार्यमूलक घटकलाई ह्यालिडेले निम्नानुसार प्रस्तुत गरेका छन्।

१. आनुभाविक /उद्‌भावनात्मक
२. तार्किक
३. अन्तरवैयक्तिक
४. पाठात्मक

उपर्युक्त चार कार्यमूलक घटकलाई पाठका अधिप्रकार्य पनि भनिन्छ।

**१. उद्‌भावनात्मक**

मानिसका इन्द्रियहरूद्वारा उत्पन्न हुने मानसिक अन्तर्क्रियालाई उद्‌भावनात्मक घटक भनिन्छ। भाषिक उच्चारणको मूलभूत प्रक्रिया नै उद्‌भावनात्मता हो। भाषाले जनाउने वास्तविक वा काल्पनिक व्यक्ति, वस्तु, कर्म, घटना, अवस्था आदि उद्‌भावनात्मक घटक हुन्। 'दुःखी मानिस रुँदैरुँदै घर गयो'। यस वाक्यमा 'दुःखी' अनुभव, 'मानिस' व्यक्ति, 'रुँदैरुँदै' घटना, 'घर' वस्तु र 'गयो' कार्य हो। एउटा वाक्यमा यस प्रकारका सबै एकाइहरू नहुन सक्छन्। जस्तै : 'राम घर गयो' भन्ने वाक्यमा 'राम' व्यक्ति, 'घर' वस्तु र 'गयो' कार्य हो। 'ऊ निदायो' भन्ने वाक्यमा 'ऊ' व्यक्ति, र 'निदायो' कार्य हो।

यस प्रकार भाषामा कार्य (क्रियापद), घटना, अवस्था (क्रियापद), व्यक्ति ( कर्ता, कर्म), विषय (कर्म : गीत, कविता, उपन्यास, नेपाली आदि), स्थान (ठाउँ ), काल (विहान, बेलुका, आइतबार, सबेरै) जस्ता प्रक्रियाहरू आएका हुन्छन्। यी घटकहरू नै आनुभविक वा उद्‌भावनात्मक घटकहरू हुन्। यी घटकहरूको संयोजन (मेल) बाट विचारको सम्प्रेषण हुन्छ। यसरी विचारको सम्प्रेषण गर्ने कार्य नै पाठको अधिप्रकार्य हो। यस प्रकार भाषामा पाठमा विचारको सम्प्रेषण गर्ने व्यक्ति, वस्तु, कार्य जस्ता घटकहरूलाई उद्‌भावनात्मक भनिएको पाइन्छ।

**२. तार्किक घटक**

उद्भावनात्मक घटकबाट आएका विचारलाई जोड्ने घटक तार्किक घटक हो। तार्किक घटकले वाक्यमा रहेका संयोजन, मिश्रण, समानाधिकरण जस्ता सम्बन्धहरूलाई हेर्दछ। तार्किक घटक वाक्यका तहमा मात्र नभएर शब्दका तहमा पनि हुन्छ। वाक्यमा संयोजक पदहरूले तार्किक घटकको काम गरेका हुन्छन्। मिश्र तथा संयुक्त वाक्यहरूमा तार्किक घटकहरू छुट्याउन सकिन्छ। शब्दका तहमा समस्त ( समास भएर बनेका शब्द, जस्तै : दालभात, आगोपानी) शब्दमा तार्किक घटक छुटिन्छन्।

तार्किक घटकले वाक्यगत सम्बन्धहरूलाई दुई प्रकारले छुट्याएको पाइन्छ :

(क) **समान सम्बन्ध :** दुई समान वाक्यहरूको सम्बन्धलाई समान सम्बन्ध भनिन्छ। जस्तै : हरिले मादल बजायो र श्याम नाच्यो। उसले रुपैयाँ कि त हरायो कि त खर्च गऱ्यो।

यी वाक्यमा संयोजकले जोडेका दुईओटा उपवाक्यहरू समान स्तरका छन्। यस प्रकारको समानता देखाउने 'र', 'कि', 'त' जस्ता संयोजकले तार्किक घटकको काम गरेका छन्।

(ख) **आश्रित सम्बन्ध :** वाक्यका आएका उपवाक्यहरू एक अर्कामा आश्रित पनि हुने गर्दछन्। जस्तै : जसले मह काढ्छ, उसले हात चाट्छ। यो वाक्यमा एउटा वाक्य घटक अर्को वाक्यमा आश्रित भएको पाइन्छ। यो वाक्यमा जसले, उसले जस्ता संयोजकले उपवाक्यहरूका बिचको आश्रित सम्बन्धलाई देखाएका छन्। यी घटक पनि तार्किक घटक हुन्। तर्कद्वारा अर्थबोध गर्न सकिने भएकाले यी घटकलाई तार्किक घटक भनिएको हो।

३. **अन्तर्वैयक्तिक घटक**

भाषामा वक्तासँग सम्बन्ध सूचनाहरू मात्रै र वक्ता र स्रोता दुबैसँग सम्बन्धित सूचना वा विषय दुवै हुन सक्छन्। यस प्रकार भाषाले वक्ताका बारेमा मात्र भनेको छ कि वक्ता वा स्रोता दुवैसँग सम्बन्धित विषय आएको छ भनेर हेर्ने कार्य अन्तर्वैयक्तिक घटकले गर्दछन्। भाषाद्वारा सम्प्रेषित विचारलाई सामाजिक रूपमा हेर्ने कार्य अन्तरवैयक्तिक घटकले गर्दछन्।

अन्तवैयक्तिक घटक अन्तर्गत दुईओटा उपघटक छन् :

(क) **अन्तर्क्रियात्मक घटक :** वक्ता र स्रोताका बिचमा अन्तर्क्रिया हुन्छ भने त्यस प्रकारको कार्य अन्तर्क्रियात्मक कार्य हो। यसमा वक्ता र स्रोता अन्तर्क्रियात्मक घटकका अवयवहरू (अङ्ग) हुन्। यो भाषाको व्यावहारिक कार्य हो। यो प्रयोगबाट हेर्न सकिन्छ। वादविवाद, संवाद, प्रश्नोत्तर प्रकारका भाषिक व्यवहार अन्तर्क्रियात्मक व्यवहार हो र यसमा सहभागी घटकहरू अन्तर्क्रियात्मक घटकहरू हुन्छन्। जस्तै : संवाद, वादविवादमा प्रयोग हुने वाक्य।

(ख) **वैयक्तिक घटक :** वक्ता स्वयम्ले आफ्नो प्रतिक्रिया टिप्पणी व्यक्त गरेको अवस्था वैयक्तिक अवस्था हो। जस्तै : राम आयो कि

## ४.२. ५ पाठगत संसक्ति : सन्दर्भन, प्रतिस्थापन, विलोपन, संयोजन, पुनः कथन र साहचर्य

पाठभित्र भएका तत्त्वहरूको बोध र व्याख्याका लागि एक अर्का तत्त्वहरूको सहयोग पर्ने अवस्थालाई पाठगत संसक्ति वा संसजन भनिन्छ । पाठगत संसक्ति प्रक्रियामा सन्दर्भन (Reference), प्रतिस्थापन (substitution), विलोपन (ellipsis), संयोजन (Conjunction), पुनः कथन र साहचर्य जस्ता प्रक्रिया हुने गर्दछन् ।

### १. सन्दर्भन

पाठभित्रका पूर्ण शब्द वा भाषिक एकाइलाई सर्वनाम जस्ता शब्दहरूबाट सम्बन्ध देखाउने प्रक्रिया सन्दर्भन हो । सन्दर्भनलाई अग्रअन्दर्भन र पश्चसन्दर्भन गरी वर्गीकरण गर्न सकिन्छ । अघिल्लो वाक्यको आधारमा पछिल्लो वाक्यको अर्थ खुल्ने अग्र सन्दर्भ हो भने पछिल्लों वाक्यको आधारमा अघिल्लो वाक्यको अर्थ स्पष्ट हुनु पश्च सन्दर्भ हो ।

जस्तै : अग्र सन्दर्भ – काठमाडौँमा जाडो छ । ज्याकेट किन्नु पऱ्यो
राम पास भएछ । त्यो खुसीको कुरा हो ।
पश्च सन्दर्भ : यो खुसीको कुरा हो । राम प्रथम भएछ ।
रामले ज्याकेट किन्न पऱ्यो । काठमाडौँमा जाडो छ ।

### २. प्रतिस्थापन

सन्दर्भद्वारा स्पष्ट हुने अर्थको सम्बन्धलाई प्रतिस्थापन प्रक्रियाले सहयोग पुऱ्याउँछ । यस प्रक्रिया अन्तर्गत अघि भनिएको वा पछि आउने पद, पदसमूह, उपवाक्य वा वाक्यका ठाउँमा सर्वनाम जस्ता अन्य पदहरू प्रतिस्थापन भई काम गर्दछन् । प्रतिस्थापन भनेको शब्द वा भाषिक एकाइको स्वाभाविक स्थानमा आउने परिवर्तन तथा एउटाको सट्टामा अर्को प्रयोग गर्ने अवस्था हो ।

जस्तै : विद्यार्थीहरू धेरै पास भएछन् । यो खुसीको कुरा हो ।
कृष्णप्रसाद भट्टराईको स्वर्गारोहण भयो । यो दुःखको कुरा हो ।
यस वाक्यमा कृष्णप्रसाद भट्टराईको स्वर्गारोहण भयो भन्ने वाक्यको सट्टा यो सर्वनामको स्थानापति भएको छ ।
यसरी एउटाको ठाउँमा अर्को आएर काम गर्नु प्रतिस्थापन हो ।

### ३. विलोपन

पाठभित्रको भाषिक एकाइहरू दोहोरिएमा त्यसलाई हटाउने प्रक्रिया विलोपन हो । जस्तै :

१. आज केटाहरू आएनन् । कता गए ?
२. ऊ घर गयो । किन गयो ?
३. तिम्रो नाम के हो? – राम ।

पहिलो उदाहरणको दोस्रो वाक्यमा 'आज केटाहरू' लोप भएको छ। दोस्रो उदाहरणमा 'ऊ घर' लोप भएको छ। तेस्रो उदाहरणमा 'मेरो नाम हो' लोप भएको छ।

४. **संयोजन**

ह्यालिडेले वाक्यहरूलाई संयोजक, विरुद्धार्थक, कारणबोधक र कालबोधक तत्त्वले जोड्ने गर्दछन् भनेका छन्। यसरी वाक्यहरू जोड्ने प्रक्रियालाई उनले संयोजन भनेका छन्।

**संयोजक :** एउटा सूचनामा नयाँ सूचना थप गर्ने पदलाई संयोजक भनिन्छ। र पनि साथै वा, अथवा आदि संयोजक हुन्। जस्तै :- राम घर जान्छ र खाना खान्छ।

**विरुद्धार्थक :** पहिलेको सूचनामा विरोध जनाउने वा विपरीत अर्थ दिने कार्यलाई विरुद्धार्थक भनिन्छ। तर, तथापि, बरु, तैपनि, जस्ता शब्दले विरुद्धार्थको काम गर्दछन्। जस्तै : राम पढ्छ तर पास गर्दैन्।

म पढ्दिन बरु हलो जोत्छु।

राम सीतालाई सहयोग गर्छ तथापि सीता गुण सम्झिन्छे।

भाषाविज्ञान कठिन विषय हो तैपनि हामी पढ्छौँ।

**कारणबोधक :** आपसमा जोडिन आउने पाठका एकाइहरू बिचमा कारण, परिणाम आदि देखाउने शब्दलाई कारणबोधक भनिन्छ। यसैले, यसरी, यसो हुँदा, परिणामस्वरूप, त्यसर्थ, यस उसले , किनभने जस्ता पदले (शब्दले) कारणबोधकको काम गर्दछन्। जस्तैः- राम मिहिनेत गरेर पढेछ त्यसैले उसले प्रथम श्रेणीमा पास गऱ्यो।

**कालबोधक :** वाक्यहरूका बिचमा समयगत वा कालगत सम्बन्ध देखाउने शब्दलाई कालबोधक भनिन्छ। अघि, पछि, पहिले, अघिल्लो, पछिल्लो, अन्तमा जस्ता शब्दले कालबोधकको काम गर्दछन्। जस्तैः- खानु अघि हात धुनुपर्छ।

पढिसकेपछि जागिरको चिन्ता हुन्छ।

अधिकार खोज्नुभन्दा पहिले कर्तव्य पुरा गर्नुपर्छ।

अघिल्लो पटक पढेको भन्दा पछिल्लो पटक पढेको बुझियो।

अघिल्लाले गीत गाए, पछिल्लाले नाँचे।

५. **पुनः कथन :** कुनै विषयलाई अरु स्पष्ट पार्न अगाडि भनिएको कुरालाई पुनः दोहोऱ्याउने प्रक्रिया पुनः कथन हो।

६. **साहचर्य :** एउटा वस्तुसँग सहचारी भएर आउने अर्को वस्तुका बिचको सम्बन्ध साहचर्य हो। गोलो र पृथ्वी, बाटुलो र घरका बिचको सम्बन्ध साहचर्य हो।

□□

परिच्छेद ५

# रूपान्तरण व्याकरणको भाषिक विश्लेषण पद्धति

## ५.१ क्लासिकल सिद्धान्त

चम्स्कीले सन् १९५७ मा 'सिन्टयाक्टिक स्ट्रक्चर्स' अथवा 'वाक्यात्मक संरचना' कृति मार्फत प्रस्तुत गरेको व्याकरण सिद्धान्तलाई क्लासिकल (शास्त्रीय) सिद्धान्त भनिन्छ। यस सिद्धान्त अनुसार भाषामा आन्तरिक संरचना र बहिः संरचना हुन्छ। आन्तरिक संरचना अमूर्त हुन्छ। यसलाई प्रयोगसम्मत वाक्य बनाउँदा बाह्य संरचना बन्दछ। आन्तरिक संरचनाबाट बाह्य संरचनामा रूपान्तरण गर्दा रूपान्तरण नियमहरू लाग्दछन्। आन्तरिक संरचना रूपान्तरण नियम लाग्नु पूर्वको संरचना हो। यस संरचनामा प्रश्नार्थक, वाच्यान्तरण, अकरण, आज्ञार्थक जस्ता रूपान्तरण नियम लागेर बाह्य संरचना बन्दछ। क्लासिक सिद्धान्त अनुसार सकारात्मक, कर्तृवाच्य र आधारभूत वाक्य (सरल वाक्य) आन्तरिक संरचनामा रहन्छ। अकरण, भाव तथा कर्मवाच्य, प्रश्नार्थक, विध्यर्थक, सम्भावनार्थक आदि बाह्य संरचनामा बदल्ने नियम हुन्। यस प्रकारले वाक्यलाई बदल्ने सिद्धान्त नै क्लासिक सिद्धान्त हो।

क्लासिकल सिद्धान्तमा पदावली संरचना महत्त्वपूर्ण विषय हो। पदावली संरचनामा रूपान्तरण नियम लगाएर वाक्यको रूपान्तरण गरिन्छ। यसर्थ क्लासिकल सिद्धान्तमा पदावली संरचना नियम मूलभूत नियमका रूपमा रहेको पाइन्छ।

### ५.१.१ पदावली संरचना नियम

क्लासिकल सिद्धान्तमा वाक्यको अवयवका रूपमा पदावली रहने उल्लेख छ। पदावली भनेको दुई वा दुईभन्दा बढी पद मिलेर बनेको संरचना हो। रूपान्तरण व्याकरणमा वाक्यलाई नामपदावली र क्रिया पदावली दुईओटा पदावलीमा वर्गीकरण गरिएको पाइन्छ। क्रियापदावलीभित्र पनि एक वा एकभन्दा बढी नामपदावली हुनसक्छन्। तिनलाई नाप$_१$ नाप$_२$ ... गरी सङ्केत गरिने प्रचलन छ।

वाक्यमा मूलतः एउटा नाम पदावली र एउटा क्रियापदावली हुन्छ तर ती नामपदावली र क्रियापदावलीलाई पुनः टुक्र्याउन सकिन्छ भन्ने रूपान्तरण सिद्धान्तको मान्यता रहेको छ। यस प्रकार वाक्य बन्नका लागि मुख्यतः नाम पदावली र क्रिया पदावली आवश्यक हुन्छ।

**नामपदावली :**

वाक्यमा नामको रूपमा आउने एक वा एकभन्दा बढी पद वा पदावलीलाई नामपदावली भनिन्छ। वाक्यमा नामपदावली कर्ता र कर्मका रूपमा आउँछन्। यस आधारमा नामपदावलीलाई (क) कर्ता नाम पदावली र (ख) कर्म नाम पदावलीका रूपमा पनि विभाजन गर्न सकिन्छ।

**क्रियापदावली :**

वाक्यमा क्रियापदावली महत्त्वपूर्ण पदावलीका रूपमा रहन्छ। सामान्यतः कर्ता पछिका वाक्यात्मक तत्त्वहरू क्रियापदावलीका रूपमा रहन्छन्। तर क्रियापदावलीको पुनर्लेखन गर्दा त्यसभित्र नामपदावलीहरू पनि हुन्छन्। र रूपका तहसम्म पुग्दा क्रियापदावलीमा मुख्य क्रिया र सहायक क्रिया मात्र बाँकी रहन्छन्। क्रियापदावलीभित्र कर्म र पूरक जस्ता नामपदावली पनि रहने हुनाले पुनर्लेखन गर्दै जाँदा कर्म र पूरकलाई नामपदावली अन्तर्गत राखिने र अन्तिम तहमा क्रियापदावलीभित्र मुख्य क्रिया र सहायक क्रिया मात्र रहने गर्दछ। नेपाली क्रियामा मिलित क्रिया पनि हुने गरेको पाइन्छ। यस्तो अवस्थामा मुख्य क्रियालाई एकभन्दा बढी एकाइमा विभाजन गर्न सकिन्छ। यस्तो मिलित क्रियामा आउने सहायक क्रियामा काल, पक्ष, वाच्य आदिका सङ्गति जनाउने संरचना पनि हुने गर्दछ।

पदावली संरचनालाई क्लासिकल सिद्धान्तमा रेखाचित्रद्वारा देखाउने गरिएको पाइन्छ। क्लासिक सिद्धान्त अनुसार व्याकरणको रूपरेखा निम्नानुसार हुन्छ (गौतम, २०५८ : ३७) :




माथिको आरेखमा 'Σ' ले प्रारम्भ बिन्दुको सङ्केत गरेको छ। यस अनुसार व्याकरणको प्रारम्भबिन्दु वाक्य हो। वाक्यबाटै रूपान्तरणको आरम्भ सुरु हुन्छ।

यसमा 'F' ले फङ्सन अथवा कार्यलाई देखाएको छ । यसमा 'क', 'ख' ले पदावलीका एकाइलाई सङ्केत गरेका छन् । यसमा क१ बाट ख१ मा परिवर्तन हुँदै क१ र ख१ को अन्तिम तहसम्म पुग्ने गर्दछन् । यसमा क, ख केवल सङ्केत हुन् । कुनै पदावली संरचनामा रहेको पहिलो अवस्था क१ हो । त्यो परिवर्तन भएर अन्तिम अवस्थालाई सङ्केत गरिएको सङ्केत कa र खa हो । यो एउटा प्रस्तावित नमुना हो । (यसको बारेमा विस्तृत व्याख्या नेपाली भाषाका सन्दर्भबाट गरिएको पाइँदैन) ।

यसमा 'रु' भनेको रूपान्तरण हो । 'ग' र 'घ' ले रूपध्वनि अथवा वर्ण, रूप जस्ता भाषाका तल्ला एकाइलाई सङ्केत गरेको छ । यसरी उपर्युक्त रूपरेखाले वाक्यबाट पदावलीमा र पदावलीबाट पनि रूपान्तरित भएर रूप, ध्वनि जस्ता भाषाका तल्ला एकाइमा जाने कुराको सङ्केत गर्दछ । यसलाई नेपाली ढाँचामा हेर्दा निम्नानुसार प्रस्तुत गर्न सकिन्छ : उसको भाइ त्यो घरमा डेरा बस्छ ।




**सङ्केत सूची**

वा - वाक्य
नाप - नाम पदावली
क्रिया - क्रिया पदावली
नि - निर्धारक (विशेषण, क्रिया, विशेषण आदि)
ना - नाम (यो, त्यो, त्यही, राम्रो )
मुक्रि - मुख्य क्रिया (बस्, खा आदि)
सक्रि - सहायक क्रिया (छ, यो आदि)

माथिकै ढाँचा अनुसार हरेक वाक्यको संरचना हुँदैन। नेपालीमा निम्नानुसारको वाक्य ढाँचा पनि हुन सक्छ, जस्तै : राम खान्छ।




वाक्यलाई विभिन्न तहमा विश्लेषण गर्दै अन्तिम तहसम्म पुग्ने रूपरेखा रूपान्तरण सिद्धान्तमा प्रस्तुत गरिएको पाइन्छ। यस प्रकारको संरचनालाई नै क्लासिकल सिद्धान्तमा पदावली संरचना नियम भनिन्छ। यस सिद्धान्त अनुसार पदावलीका संरचनामा विभिन्न शाखाहरू हुने गर्दछन्। त्यस्ता शाखाहरू निम्नानुसार छन् :

(क) उच्च शाखा (सबै भन्दा माथिल्लो शाखा)
(ख) ऊर्ध्वशाखा (ठिक माथिल्लो शाखा, छुट्टिने शाखा)
(ग) अधः शाखा (तल्लो शाखा)
(घ) समशाखा (एउटै शाखा) – सिधा शाखा
(ङ) अन्तःशाखा (पुछारको शाखा, अन्त्यशाखा)



माथिको लेखा चित्रमा 'वा' उच्च शाखा हो। नाप भन्दा माथिको वा अथवा ना भन्दा माथिको नाप ऊर्ध्व शाखा हो। 'वा' भन्दा तलका 'नाप' र 'क्रिप' अध शाखा हुन्। 'नाप' र 'क्रिप' सम शाखा हुन्। 'ना', 'मुक्रि' र 'सक्रि' अन्तः शाखा हुन्।

## ५.१.२ रूपान्तरण नियम र यसका प्रकारहरू

नोम चम्स्कीको क्लासिकल सिद्धान्त अनुसार भाषामा आन्तरिक र बाह्य संरचना हुन्छन्। आन्तरिक संरचना बाह्य संरचनामा ल्याउँदा त्यहाँ केही नियमहरू लाग्दछन्। यस प्रकार आन्तरिक संरचनालाई बाह्य संरचनामा बदल्दा आवश्यक पर्ने नियमलाई रूपान्तरण नियम भनिन्छ। रूपान्तरण नियम मुख्यतः निम्नलिखित छन् :

१. लोप नियम
२. आगम नियम
३. आदेश नियम
४. क्रम परिवर्तन नियम

(आन्तरिक संरचनालाई बाह्य संरचनामा लाँदा एकैसाथ बढी नियम लाग्न सक्छन्।)

**१. लोप नियम**

आन्तरिक संरचनामा दोहोरिएको पद बाह्य संरचनामा आउँदा लोप हुने वा हटाउने प्रक्रियालाई लोप नियम भनिन्छ। लोप नियम अन्तर्गत पनि (क) समानपद लोप नियम र (ख) सहायक क्रिया लोप नियम गरी वर्गीकरण गर्न सकिन्छ।

**(क) समानपद लोप नियम :** समानपद लोप नियम भनेको आन्तरिक संरचनामा उस्तै खालका पद दोहोरिएका छन् भने बाह्य संरचनामा आउँदा दोहोरिएका पद लोप हुने नियम समानपद लोपनियम हो।

जस्तै :

श्याम घर जान्छ। श्याम आराम गर्छ। (आन्तरिक संरचना)

श्याम घर गएर आराम गर्छ। (बाह्य संरचना)

यस उदाहरणमा आन्तरिक संरचनामा दोहोरिएको उही पद वा समान पद 'श्याम' बाह्य संरचनामा रूपान्तरण हुँदा लोप भएको छ। यस प्रकारको लोपनियम समानपद लोपनियम हो।

**(ख) सहायक क्रिया लोप नियम :** आन्तरिक संरचनामा रहेको मुख्य क्रियामा जोडिएर आएको सहायक क्रिया बाह्य संरचनामा लैजाँदा लोप हुने प्रक्रियालाई सहायक क्रिया लोपनियम भनिन्छ।

**जस्तै :**

(अ) श्याम घर जान्छ। श्याम आराम गर्छ। ⟹ (सहायक क्रिया लोपनियम)

(आ) श्याम घर जा। श्याम आराम गर्छ। ⇒ (आगम नियम)

(इ) श्याम घर गएर श्याम आराम गर्छ। ⇒ (समानपद लोपनियम)

(ई) श्याम घर गएर आराम गर्छ।

यस उदाहरणमा (अ) आन्तरिक संरचना हो। (आ) सहायक क्रिया लोप नियम हो। यसमा 'जान्छ' क्रियाको सहायक क्रिया 'छ' लोप भएको छ। यस्तो लोपनियम सहायक क्रिया लोपनियम हो। सहायक क्रिया लोप भएर मात्र बाह्य संरचना पूर्ण भने हुँदैन। त्यसलाई पूर्णता दिन आगम नियम अन्तर्गत कृदन्त स्थापना गर्नुपर्ने हुन्छ। माथिको उदाहरणमा (इ) आगम नियम हो। यसमा 'जा' धातुमा 'एर' आगम भएको छ। 'जा' धातुमा 'एर' लगाउँदा परिवर्तन हुँदा 'गएर' भएको छ। यसपछि समानपद 'श्याम' लोप भएर बाह्य संरचना (ई) बनेको छ।

**अर्को उदाहरण हेरौं :**

राम खान्छ। राम जान्छ। ⇒ सहायक क्रिया लोप नियम

राम खा राम जान्छ। ⇒ आगम नियम

राम खाएर राम जान्छ। ⇒ समान पद लोप नियम

राम खाएर जान्छ

यस उदाहरणमा समान पद 'राम' र सहायक क्रिया 'छ' ('खान्छ' को) लोप हुनाका साथै 'एर' आगम पनि भएको छ। चम्स्कीका अनुसार एकपटकमा एउटा नियम मात्र देखाउनु उचित हुने हुनाले यस प्रकारको रूपान्तरण प्रक्रियामा एकपटकमा एउटा नियम मात्र देखाइने गरिन्छ। माथिको उदाहरणलाई यसरी पनि देखाउन सकिन्छ :

राम खान्छ। राम जान्छ ⇒ सहायकक्रिया लोप

राम खा राम जान्छ। ⇒ समानपद लोप

राम खा जान्छ। ⇒ कृदन्त स्थापन (आगम) नियम

राम खाएर जान्छ। (बाह्य संरचना)

## २. आगम नियम

आन्तरिक संरचनामा पद थपेर बाह्य संरचनामा रूपान्तरण गर्ने नियम आगम नियम हो। आगम नियम अन्तर्गत कृदन्त स्थापन, सहायक क्रिया स्थापन, सम्बन्ध स्थापन जस्ता नियम आउँछन्।

(क) **कृदन्त स्थापन :** आन्तरिक संरचनालाई बाह्य संरचनामा बदल्दा कुनै क्रियापदको सहायक क्रिया लोप गरी त्यसमा कृत् प्रत्ययको आगम हुन्छ भने त्यसलाई कृदन्त स्थापन नियम भनिन्छ। जस्तै :

हरि पढ्छ। हरि विद्वान् बन्छ। ⇒ कृदन्त स्थापन नियम।

हरि पढेर विद्वान् बन्छ।

यस उदाहरणमा पढ्छ क्रियाको सहायकक्रिया 'छ' लोप भइ 'एर' प्रत्यय लागेको छ। यस प्रकार धातुमा प्रत्यय आगम भएर बाह्य संरचनामा जाने नियम कृदन्त स्थापन नियम हो। यस उदाहरणमा कृदन्त स्थापन नियमका साथसाथै समानपद लोपनियम तथा सहायकक्रिया लोप नियम पनि लागेको छ।

**(ख) सहायक क्रिया स्थापन नियम**

आन्तरिक संरचना, बाह्यसंरचनामा बदलिंदा सहायक क्रियामा आगम हुने वा थपिने अवस्था पनि हुन्छ। यस्तो आगम प्रक्रियालाई सहायक क्रिया स्थापन नियम भनिन्छ। जस्तै :

(आन्तरिक संरचना) राम भात खा ⟹ सहायक क्रिया स्थापन
राम भात खान्छ।

(ग) **सम्बन्धस्थापन नियम :** आन्तरिक संरचनामा रहेका दुई वा दुईभन्दा बढी वाक्यहरू संश्लेषित भई एउटै वाक्यका रूपमा वाक्य संरचनामा जाँदा जब, तब, जहिले, तहिले, जसले, जुन चाँहि, जो, जसलाई जस्ता सम्बन्धवाचक संयोजक पद आगम हुने नियमलाई सम्बन्ध स्थापन नियम भनिन्छ। जस्तै :-

राम घर जान्छ। राम आराम गर्छ ⟹ सम्बन्ध स्थापन
जब राम घर जान्छ तब आराम गर्छ।

**३. आदेश नियम**

आन्तरिक संरचना बाह्य संरचनामा लैजाँदा कुनै पदका सट्टा अर्को पद ल्याउने प्रक्रियालाई आदेश नियम भनिन्छ।

(क) **सर्वनामीकरण :** आन्तरिक संरचनामा रहेको नामपद बाह्यसंरचनामा लैजाँदा सर्वनामका रूपमा रूपान्तरण हुने प्रक्रिया सर्वनामीकरण हो। जस्तै :

राम पढ्छ। राम लेख्छ। ⟹ सर्वनामीकरण
राम पढ्छ, ऊ लेख्छ।

रामले सीतालाई बोलायो । रामले सीतालाई कलम दियो । ⟹ सर्वनामीकरण
रामले सीतालाई बोलायो, उसले सीतालाई कलम दियो।

(ख) **आत्मवाचीकरण :** आन्तरिक संरचना बाह्य संरचनामा लैजाँदा आन्तरिक संरचनामा भएको नामपद, आफू, आफै, आफ्ना जस्ता आत्मवाचक वा निजवाचक सर्वनाममा परिवर्तन हुने प्रक्रियालाई आत्मवाचीकरण भनिन्छ। जस्तै :

हरिले हरिलाई धिकार्‍यो ⟹ आत्मवाचीकरण
हरिले आफूलाई धिकार्‍यो।

४. क्रमपरिवर्तन नियम

आन्तरिक संरचनामा रहेको कुनै पद बाह्य संरचनामा आउँदा क्रमपरिवर्तन भएर आउने प्रक्रियालाई क्रम परिवर्तन नियम भनिन्छ।

जस्तै :

राम भात खान्छ। ⇒ क्रमपरिवर्तन
भात राम खान्छ।

रूपान्तरण नियमलाई अनिवार्य रूपान्तरण नियम ऐच्छिक रूपान्तरण नियम अर्थ अपरिवर्तन र अर्थपरिवर्तक नियमका आधारमा पनि वर्गीकरण गरिएको पाइन्छ।

(क) अनिवार्य रूपान्तरण नियम

जुन रूपान्तरण नियमको प्रयोग नगर्दा प्रयोगयोग्य वाक्य बन्न सक्दैन त्यस्तो रूपान्तरण नियमलाई अनिवार्य रूपान्तरण नियम भनिन्छ। नेपाली भाषामा कर्ता र क्रिया बिचको सङगतिको नियम, कर्म र क्रिया बिचको सङगतिको नियम, विभक्ति सङगतिको नियम आदि अनिवार्य रूपान्तरण नियम हुन्। जस्तै :

राम भात खा ⇒ वर्तमानकाल (कर्ता, क्रिया सङ्गति)
राम भात खान्छ।

राम पुस्तक पढ् ⇒ (कर्म, क्रिया सङगति)
राम पुस्तक पढ्छ (खान्छ, दगुर्छ, हुँदैन)।

राम पुस्तक पढ्छ। ⇒ (भूतकाल विभक्ति प्रयोग)
रामले पुस्तक पढ्यो।

(ख) ऐच्छिक रूपान्तरण नियम

कुनै नियमहरूको प्रयोग नगरेरै पनि अथवा विकल्पका रूपमा एकभन्दा बढी नियमको प्रयोग गर्न सकिने अवस्थालाई ऐच्छिक रूपान्तरण नियम भनिन्छ। नेपालीमा वर्तमान कालका कर्ता, कर्म र क्रिया बिचको सङ्गतिमा ऐच्छिक रूपान्तरण नियम प्रयोग भएको पाइन्छ। जस्तै :

(अ) तिमी जानुपर्छ। तिमीले जानुपर्छ।
(आ) ऊ बाघ मार्छ। ऊ बाघलाई मार्छ।
(इ) रामले भात खान्छ। राम भात खान्छ।

माथिका उदाहरणमा एक अर्काको विकल्पमा कम्तीमा दुई वटा वाक्य आएका छन्। यसरी कुनै एउटा विकल्प छनोट गर्ने अवसर मिल्ने हुनाले यस प्रकारको रूपान्तरण नियमलाई ऐच्छिक रूपान्तरण नियम भनिन्छ।

(ग) अर्थअपरिवर्तक नियम

आन्तरिक संरचनालाई बाह्य संरचनामा लाँदा अर्थमा परिवर्तन हुँदैन अथवा रूपान्तरण प्रक्रियाबाट अर्थमा फरक पर्दैन भने त्यसलाई अर्थ

अपरिवर्तक रूपान्तरण नियम भनिन्छ। नेपालीमा विभक्तिको प्रयोग (विभक्ति सन्निवेश) कर्ता, कर्म, क्रिया बिचको सङ्गति जस्ता नियम अर्थ अपरिवर्तक नियम हुन्। जस्तै :

राम खान्छ।

रामले खान्छ। (सङ्गति)

यस उदाहरणमा आएका दुई वाक्यले अर्थमा फरक पारेका छैनन्।

**(घ) अर्थपरिवर्तक रूपान्तरण नियम**

रूपान्तरण नियमबाट अर्थमा परिवर्तन आउँछ अथवा आन्तरिक संरचना बाह्य संरचनामा लाँदा अर्थमा परिवर्तन हुन्छ भने त्यसलाई अर्थपरिवर्तक रूपान्तरण नियम भनिन्छ। नेपालीमा सामान्य रूपमा आउने वाक्यबाट प्रश्नार्थक, अकरण, विध्यर्थक, आज्ञार्थक जस्ता रूपान्तरण नियम अर्थपरिवर्तक रूपान्तरण नियम हो। जस्तै :

(अ) राम खा ⇒ (प्रश्नार्थक नियम)
राम खान्छ ?

(आ) राम खा ⇒ (अकरण नियम)
राम भात खाँदैन।

(इ) राम खा ⇒ (सम्भावनार्थक)
राम भात खाला।

(ई) राम खा ⇒ (आज्ञार्थक)
राम भात खाऊ।

(उ) राम खा ⇒ (इच्छार्थक)
राम भात खाओस्।

## ५.१.३ आधार वाक्यबाट अन्य वाक्यमा रूपान्तरण

नोम चम्स्कीका अनुसार वाक्यको मुख्य रूप अथवा कर्तृवाच्य, करण, निश्चयार्थक र विशेषण आदि नजोडिएको वाक्य आधारभूत वाक्य हो। आधारभूत वाक्यमा केही थपघट भएर रूपान्तरित हुँदा अन्य प्रकारका वाक्यहरू बन्दछन्। आधार वाक्यमा रूपान्तरण भई बन्ने वाक्यलाई अन्य वाक्य वा रूपान्तरित वाक्य भनिन्छ। यस अनुसार आधार वाक्य र अन्य अथवा रूपान्तरित वाक्यका बिचमा निम्न लिखित भिन्नता पाइन्छ :

| | आधारभूत वाक्य | अन्यवाक्य (रूपान्तरित वाक्य) |
|---|---|---|
| १. | कर्तृवाच्यका वाक्य आधारभूत वाक्य हुन्। | कर्म र भाव वाच्यका वाक्य अन्य वाक्य हुन्। |

| | | |
|---|---|---|
| २. | करण वाक्य | अकरण वाक्य |
| ३. | निश्चयार्थक/सामान्यार्थक वाक्य | अनिश्चयार्थक वाक्य वा प्रश्नार्थक, सम्भावनार्थक वाक्य। |
| ४. | असन्निवेश (केही नजोडिएका) वाक्य | सन्निवेश भएका वाक्य |

यस प्रकार आधारभूत वाक्यलाई अन्य वाक्यमा रूपान्तरण गर्न सकिन्छ। कर्तृवाच्य, करण, निश्चयार्थक र असन्निवेश वाक्यलाई कर्मवाच्य, भाववाच्य, अकरण, प्रश्नार्थक, सम्भावनार्थक, आज्ञार्थक, इच्छार्थक तथा सन्निवेश वाक्यमा रूपान्तरण गर्नु नै आधारभूत वाक्यको अन्य वाक्यमा रूपान्तरण हो। उदाहरणहरू :

**(१) कर्तृवाच्यबाट कर्म तथा भाववाच्यमा रूपान्तरण**

कर्तृवाच्य (आधारवाक्य) ⇒ भाव/कर्म वाच्य

राम भात खान्छ। ⇒ रामद्वारा भात खाइन्छ

राम हाँस्छ । ⇒ (रामद्वारा) हासिन्छ।

**(२) करणबाट अकरणमा रूपान्तरण**

करण — अकरण

राम खान्छ। — राम खाँदैन।

**(३) निश्चयार्थकबाट अनिश्चयार्थक**

राम खान्छ (आधारभूत वाक्य)

राम खा (आज्ञार्थक)

राम खान्छ ? (प्रश्नार्थक)

राम खाओस् (इच्छार्थक)

राम खाला (सम्भावनार्थक)

**(४) असन्निवेशबाट सन्निवेशमा**

झोला नयाँ छ किन्नुपर्छ ⇒

नयाँ झोला किन्नुपर्छ।

श्यामको भाइ राम हो। राम असल छ। ⇒

श्यामको भाइ राम असल छ।

## ५.२ मानक सिद्धान्त

रूपान्तरण व्याकरणको विकास क्रमशः भइरहेको पाइन्छ। अमेरिकी भाषाशास्त्री नोम चम्स्कीले सन् १९५७ मा प्रस्ताव गरेको भाषाको रूपान्तरण सिद्धान्तलाई उनी र उनका चेलाहरूले समयक्रममा आवश्यक संशोधन र विकास गर्दै

आएका छन् । यस सिद्धान्तको विकासलाई मूलतः तिन चरणमा हेर्ने गरिएको छ। क्लासिक सिद्धान्त (१९५७) पहिलो चरणमा विकास भएको सिद्धान्त हो भने यस पछि मानक सिद्धान्त (१९६५) र विस्तारित मानक सिद्धान्त (१९७०) आएको पाइन्छ। यसपछि पनि चम्स्कीले आफ्नो रूपान्तरण व्याकरणको सिद्धान्तलाई विकास र विस्तार गर्ने काम गरिरहेको पाइन्छ।

मानक सिद्धान्त रूपान्तरण व्याकरणको विकासका क्रममा सन् १९६५ मा आएको सिद्धान्त हो । यस सिद्धान्तले क्लासिकल सिद्धान्तका कतिपय मान्यताहरूलाई परिमार्जन गरेको छ । यसमा भाषाको वाक्यात्मक घटकको विश्लेषणका आधारहरूको चर्चा गरिएको छ । यस सिद्धान्तमा वाक्यात्मक अध्ययनलाई जोड दिइएको छ। क्लासिकल सिद्धान्तमा आधार वाक्य र रूपान्तरित वाक्यको अवधारणा आएको थियो। मानक सिद्धान्तमा पदावली संरचना नियम र शब्दकोशबाट वाक्यात्मक घटक बन्ने र आन्तरिक संरचनामा रूपान्तरण नियम लागेर बाह्य संरचना बन्ने सैद्धान्तिक ढाँचा प्रस्तुत गरिएको छ । मानक सिद्धान्तको सैद्धान्तिक ढाँचा निम्नानुसार छ :



### ५.२.१ वाक्यात्मक घटक, कोटीकरण र शब्दसमूह

मानक सिद्धान्त अनुसार वाक्यात्मक घटक भाषाको आधार हो। वाक्यात्मक घटक अन्तर्गत कोटीकरण र शब्दसमूह पर्दछन् । वाक्यात्मक घटकमा पदावली संरचना नियम र शब्दकोश समाविष्ट हुन्छन्। पदावलीको संरचना कोटिगत नियम अनुसार रहेको हुन्छ। यसलाई पदावली संरचना नियम अथवा कोटीकरण संरचना नियम पनि भनिन्छ । क्लासिकल सिद्धान्तमा रहेको पदावली संरचना नियमको परिमार्जित रूप नै कोटीकरण नियम हो । कोटि अन्तर्गत वाक्य, नाम, पदावली, क्रियापदावली, निर्धारक, विशेषण आउँछन् । मानक सिद्धान्तमा संयुक्त, मिश्र, लगायतका वाक्यलाई पनि आधार संरचना मानिएको छ। क्लासिकल सिद्धान्तमा आधारभूत वाक्यको अवधारणा थियो । त्यसमा सामान्यतः सरल वाक्य पर्दथ्यो । मानक सिद्धान्तमा आधारभूत वाक्यका साथै मिश्रवाक्य, संयुक्त वाक्य समेतलाई वाक्यात्मक संरचनामा हेरेको हुनाले सबै प्रकारका वाक्यको संरचनाको नियमलाई कोटीकरण भनिएको पाइन्छ।

कोटीकरण नियमले वाक्यात्मक संरचनाको अध्ययन गर्दछ । वाक्यमा पदावलीहरूको संरचना के-कस्तो छ ?. यसमा निर्धारक, विशेषण, नाम, क्रियाविशेषण, क्रिया आदि घटकहरू के-कसरी आएका छन् भन्ने कुराको अध्ययन कोटीकरण नियमले गर्दछ। मानक सिद्धान्तमा पनि आन्तरिक संरचना र बाह्य संरचनाको अवधारणा रहेको छ। आन्तरिक संरचना अमूर्त र विचारको तहमा रहेको हुन्छ। आन्तरिक संरचनामा रूपान्तरण नियम लागेर बाह्य संरचना बन्दछ। बाह्य संरचनाको व्याख्या वार्णिक घटकले गर्दछ।

कोटीकरण अन्तर्गत नामपदावली, क्रियापदावली र यसका घटकहरू पर्दछन्। मानक सिद्धान्तमा मिश्रवाक्य तथा संयुक्त वाक्यमा रहेका नामपदावली र क्रियापदावलीको अध्ययन समेत हुने गर्दछ। कोटीकरण यी सबै घटकको समष्टि नाम हो।

शब्दसमूह वाक्यात्मक संरचनामा आएका शब्दहरूको समष्टि हो। शब्दसमूह अन्तर्गत वाक्यात्मक, आर्थी तथा वार्णिक सूचना पर्दछन्। वाक्यात्मक सूचनामा नाप, क्रिप, नाम, विशेषण, क्रिया, क्रिया विशेषण आदि पर्दछन्। आर्थी सूचनामा शब्दको अर्थ आउँछ । अर्थलाई प्रकार्यात्मक (प्रयोगका आधारको अर्थ) र कोशीय ( शब्दकोशमा) हुने गरी वर्गीकरण गर्न सकिन्छ। मानवीय, अमानवीय, सजीव, निर्जीव, गणनीय, अगणनीय, मूर्त, अमूर्त आदि अर्थ कोशीय अर्थ हुन्। यस्तो अर्थ भाषाको आन्तरिक संरचनाको व्याख्यामा आउँछ। वार्णिक घटकमा भाषाको ध्वनि व्यवस्था, वर्णव्यवस्था आदिको अध्ययन हुन्छ। रूपान्तरण सिद्धान्त अनुसार भाषाका वर्गको अध्ययन गर्ने सिद्धान्तलाई उत्पादक वर्णविज्ञान भनिन्छ।

**यसरी मानक सिद्धान्तमा निम्न लिखित तिन ओटा घटकको चर्चा गरिएको छ :**

१.　आर्थी घटक

२.　वार्णिक घटक

३.　वाक्यात्मक घटक

आर्थी घटक र वार्णिक घटकलाई मिलाएर व्याख्यात्मक घटक पनि भनिएको पाइन्छ। यी तिनओटा घटकमध्ये वाक्यात्मक घटक आधार हो। वाक्यात्मक घटक पदावली संरचना र शब्दकोश मिलेर बन्छ। पदावली संरचनाभित्र नामपदावली, क्रियापदावली पर्दछन्। नामपदावली, क्रियापदावलीलाई पनि विशेषण, नाम, क्रियाविशेषण, क्रिया जस्ता घटकमा विश्लेषण गर्न सकिन्छ। चम्स्कीले आर्थी घटकले आन्तरिक संरचनामा अर्थको व्याख्या गर्ने र वार्णिक घटकले बाह्य संरचनामा वर्णको व्याख्या गर्ने बताएका छन्। उनले अर्थको व्याख्यालाई व्याख्यात्मक अर्थविज्ञान र वर्णको व्याख्यालाई उत्पादक वर्णविज्ञान भनेका छन्।

मानक सिद्धान्तले मिश्र र संयुक्त वाक्यलाई पनि वाक्यात्मक घटक भित्र राखेको छ। यस अनुसार नामपदावलीभित्र सिङ्गै वाक्य पनि आउन सक्ने देखिन्छ। जस्तै : 'राम पुस्तक पढ्छ र घर जान्छ।' वाक्यलाई तलको वृक्षरेखमा हेर्दा :




जस्तै : राम मेहनती छ, राम पढ्छ → मेहनती राम पढ्छ। जसले मह काढ्छ, उसले हात चाट्छ →मह काढ्नेले हात चाट्छ।

यसमा 'राम मेहनती छ' भन्ने वाक्यले नाप पदावलीको काम गरेको छ।

मिश्र वाक्यबाट एउटा उदाहरण हेरौं :




संयुक्त वाक्यबाट एउटा उदाहरण हेरौं :




## ५.२.२ पदावलीका प्रकारहरू

चम्स्कीको क्लासिकल सिद्धान्तमा नाम पदावली र क्रियापदावली गरी पदावलीलाई दुई प्रकारमा वर्गीकरण गरिएकोमा मानक सिद्धान्तमा भने पदावलीलाई नाम पदावली, विशेषण पदावली, क्रियाविशेषण पदावली र क्रियापदावली गरी चार प्रकारका वर्गीकरण गरिएको छ।

१. **नाम पदावली :** वाक्यमा कर्ताको रूपमा रहेर निर्धारक अथवा विशेषणसँग नाम आउने पदहरूको समूहलाई नामपदावली भनिन्छ। नाम पदावलीमा नाम शब्द शीर्ष वा मुख्य हुन्छ। यसमा विशेषण जोडिन आउँछ।

जस्तै : कालो केटो, राम्रो मान्छे

२. **विशेषण पदावली :** पदावलीको शीर्ष वा मुख्य पद विशेषण हुन्छ र त्यसमा अन्य पद जोडिन आउँछन् भने त्यस्तो पदावलीलाई विशेषण पदावली भनिन्छ। विशेषण पदावलीले नामको विशेषणका रूपमा काम गरेको हुन्छ। अथवा विशेषण पदावलीले कर्ताको विशेषण जनाइरहेको हुन्छ। क्लासिकल सिद्धान्तमा यसलाई नामपदावली अन्तर्गत राखिएको थियो।

जस्तै : धेरै राम्रो, ज्यादै थोरै, अत्यन्त असल

३. **क्रियाविशेषण पदावली :** क्रियाविशेषण पद शीर्ष वा मुख्य हुने र त्यसमा धेरै, बेस्सरी, अझै, सुस्तरी जस्ता तीव्रक जोडिने पदको समूहलाई क्रिया विशेषण पदावली भनिन्छ। क्लासिकल सिद्धान्तमा यसलाई क्रिया पदावली अन्तर्गत नै राखिएको थियो।

जस्तै : साह्रै सुस्तरी, अति राम्ररी, धेरै छिटो, एकदमै हतारमा

४. **क्रियापदावली** – क्रियापद शीर्ष वा मुख्य हुने र त्यसमा क्रियाविशेषण पद जोडिएर पदावली बन्ने अवस्था क्रियापलावली हो।

जस्तै : छिटो गयो, खपाखप खायो, थपक्क दिन्छ, ढकमक्क फुल्छ, आदि।

यी पदावलीहरू मध्ये नामपदावली र क्रियापदावली मुख्य हुन्। विशेषण पदावली, नाम पदावली अन्तर्गत र क्रियाविशेषण पदावली क्रियापदावली अन्तर्गत राखेर हेरिएको पनि पाइन्छ। जस्तै :



अर्को उदाहरण हेरौं :




एउटा वाक्यमा ४ वटै पदावली हुनु पर्छ भन्ने छैन। कुनै वाक्यमा नामपदावली र क्रियापदावली मात्र हुन्छन्। कुनैमा विशेषण पदावली थपिन आउँछ, कुनैमा क्रियाविशेषण पदावली आउँछ। तर एउटा वाक्यमा कम्तीमा एउटा नामपदावली र एउटा क्रियापदावली भने हुन्छ।

## ५.२.३ आर्थी घटक र व्याख्यात्मक अर्थविज्ञान

मानक सिद्धान्तमा अर्थ सम्बन्धी अध्ययन गर्ने व्याख्यात्मक अर्थविज्ञानको विकास गरिएको छ। यस सिद्धान्त अनुसार पदावली संरचना नियमलाई शब्दकोशको नियमका आधारमा हेर्न सकिन्छ र वाक्यात्मक घटक बन्दछ। वाक्यात्मक घटक आन्तरिक संरचनामा रहँदा आर्थी घटकले त्यसको व्याख्या गर्दछ। आर्थी घटकले अर्थको व्याख्या गर्ने भएकाले यसलाई व्याख्यात्मक अर्थ विज्ञान भनिएको हो। आन्तरिक संरचनामा रहेका पदावलीलाई कर्ता, कर्म, क्रिया जस्ता घटकमा वर्गीकरण गर्न सकिन्छ। तिनलाई सङ्ख्य, असङ्ख्य, सजीव, निर्जीव, मानवीय, अमानवीय आदि सूचकमा हेर्न सकिन्छ। आन्तरिक संरचनाका घटकहरूको अर्थ खोज्ने र त्यसको व्याख्या गर्ने सिद्धान्तलाई व्याख्यात्मक अर्थविज्ञान भनिन्छ। जस्तै :




यसरी पदावली संरचनामा आएका शब्दहरूमा मानवीय, सङ्ख्यीय, सजीव आदि अर्थ खोज्ने सिद्धान्त नै व्याख्यात्मक अर्थविज्ञान हो। मानक सिद्धान्तमा यसरी अर्थको व्याख्या आन्तरिक संरचनामा मात्र हुने उल्लेख गरिएको छ। यस प्रकार अर्थ सुरुमा शब्दका तहमा रहने, त्यसपछि पदावली हुँदै वाक्यका तहमा पुग्ने र वाक्यको अर्थ स्पष्ट हुने गर्दछ भनिएको पाइन्छ।

### ५.२.४ उत्पादक वर्णविज्ञान

संरचनावादी भाषावैज्ञानिक त्रुबेत्स्कोय, रोमन याकोब्सन आदिले प्रस्ताव गरेको विभेदक अभिलक्षणलाई आधार मानेर नोम चम्स्कीले वर्णविज्ञानका क्षेत्रमा उत्पादक वर्णविज्ञनको प्रतिपादन गरेका छन्। रोमन याकोब्सनले वर्णहरूमा निश्चित अभिलक्षण हुने र ती अभिलक्षण भएमा धन चिह्न (+) र अभिलक्षण नभएमा ऋणचिह्न (–) दिने प्रचलन सुरु गरेका थिए। उनले वर्णका अभिलक्षणलाई विभिन्न १२ प्रकारमा वर्गीकरण गरेका थिए। चम्स्कीले यस्ता अभिलक्षणलाई संशोधन तथा परिमार्जन गरी २७ वटा अभिलक्षण बताएका छन्। यस्ता अभिलक्षण स्वर, व्यञ्जन, अग्र, पश्च, उच्च, निम्न, गोलित, अगोलित, अनुनाशिक पाश्विक आदि छन्। यी अभिलक्षणको उपस्थिति हुँदा + चिह्न र यी अभिलक्षणहरू अनुपस्थित भएमा – चिह्न दिने गरिएको पाइन्छ। यसरी निश्चित अभिलक्षण, जोड र घटाउ चिह्नका आधारमा संसारका जुनसुकै भाषाका वर्णहरूको अध्ययन गर्न सकिने भएकाले चम्स्कीले प्रस्ताव गरेको वर्ण विज्ञानलाई उत्पादन वर्णविज्ञान भनिएको हो। उत्पादक

वर्णविज्ञानमा वर्णहरूका निश्चित अभिलक्षण तोकिने, ती अभिलक्षणको स्पष्ट विश्लेषण गर्ने र अभिलक्षण छुट्याउन धन चिह्न वा ऋण चिह्नको प्रयोग गर्ने हुनाले यसमा निश्चित सूत्रमा थोरैमा धेरै भन्न सकिने गुण हुन्छ। यही गुणका आधारमा यस सिद्धान्तको नाम उत्पादन वर्णविज्ञान भनिएको हो।

उत्पादक वर्णविज्ञानले संसारका जुनसुकै भाषामा वर्णको पनि अध्ययन गर्न सकिने लक्ष्य लिएकाले सबै अभिलक्ष्यणहरू एउटै भाषामा पाइँदैनन। नेपालीमा जम्मा २७ वटा अभिलक्ष्यणमध्ये १५ वटा मात्र उपयोगमा रहेका देखिन्छन्।

चम्कीले ह्यालेसँग मिलेर प्रतिपादन गरेको उत्पादक वर्णविज्ञानका मुख्य विशेषता निम्नानुसार छन् :-

१) मितव्ययिता – कम अभिलक्षणबाट वर्णलाई विश्लेषण गर्ने।

२) स्पष्टता –स्पष्ट रूपमा वर्णको विश्लेषण गर्न सकिने।

३) सरलता – यो सरल हुन्छ। निश्चित अभिलक्षणबारे थाहा पाएपछि अभिलक्षण रहनेलाई धनचिह्न (+) र अभिलक्षणको अभावलाई ऋण (–) चिह्न सजिलैसँग वर्णको अध्ययन गर्न सकिन्छ।

उत्पादक वर्णविज्ञानका आधारमा नेपाली वर्णको विभेदक अभिलक्षण (केही उदाहरण)

| | इ | ए | आ | अ | ओ | ए | य् | व् | ह | र् | ल् | म् | न् | ङ् | प् |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मुखर | + | + | + | + | + | + | + | + | + | + | + | + | + | + | – |
| स्वरात्मक | + | + | + | + | + | + | – | – | – | – | – | – | – | – | – |
| व्यञ्जनात्मक | – | – | – | – | – | – | – | – | – | + | + | + | + | + | + |
| उत्थित | | | | | | | | | | + | + | – | + | – | – |
| अग्र | | | | | | | | | | + | + | + | + | – | + |
| उच्च | + | – | – | – | – | + | + | + | – | | | | | | |
| निम्न | – | – | + | – | – | – | – | – | + | | | | | | |
| पश्च | – | – | + | + | + | + | – | + | + | | | | | | |
| गोलित | – | – | – | – | + | + | – | + | – | | | | | | |
| वितरित | | | | | | | | | | – | – | + | – | + | + |
| अनुनासिक | – | – | – | – | – | – | – | – | – | – | – | + | + | + | – |
| पार्श्विक | | | | | | | | | | – | + | | | | |
| प्रवाही | | | | | | | | | | + | + | – | – | – | – |
| तात्कालिक मोचन | | | | | | | | | | | | | | | + |
| घोष | + | + | + | + | + | + | + | + | + | + | + | + | + | + | – |
| महाप्राण | | | | | | | | | | | | | | | – |

## ५.३ विस्तारित मानक सिद्धान्त

नोम चम्स्कीले आफ्नो सिद्धान्तलाई निरन्तर विकास र विस्तार गर्दै लगेको पाइन्छ। उनले सन १९७० मा आफ्नो पूर्ववर्ती सिद्धान्त मानक सिद्धान्तलाई परिमार्जन गरी विस्तारित मानक सिद्धान्तको अवधारणा प्रस्तुत गरे। मानक सिद्धान्तमा अर्थ सम्बन्धी अध्ययन आन्तरिक संरचनामा मात्र हुन्छ भनेकामा विस्तारित मानक सिद्धान्तमा त्यसलाई संशोधन गरी अर्थको सम्बन्ध आन्तरिक र बाह्य दुवै संरचनामा हुन्छ भन्ने मान्यता स्थापित गरे। मानक सिद्धान्तमा रूपान्तरण नियमलाई सकेसम्म कम गर्ने, वाक्यात्मक संरचना भित्र राखिएका पद वा शब्दलाई स्वतन्त्र शब्द वर्गका रूपमा स्वीकार गर्ने वा एउटा वाक्यभित्र नामपदावली र क्रियापदावली मात्र हुन्छन् भन्ने मान्यतालाई विस्तार गरी वाक्यभित्रका पदहरू नाम, सर्वनाम, विशेषण, क्रियाविशेषण, क्रिया, नामयोगी, निपात जस्ता शब्दवर्गहरू पनि आएका हुन्छन् भन्ने मान्यतालाई विस्तारित मानक सिद्धान्तले स्वीकार गरेको छ।

विस्तारित मानक सिद्धान्त रूपान्तरण नियममा सरलता खोज्दै रूपान्तरण प्रक्रियालाई सहज बनाउने सिद्धान्त हो। यसमा 'क' बार सिद्धान्त, अवशेष सिद्धान्त जस्ता सिद्धान्तहरू प्रस्ताव गरिएका छन्। वाक्यात्मक संरचनामा लाग्ने रूपान्तरण नियमलाई कम गर्ने र सरल बनाउने सिद्धान्तका रूपमा विस्तारित मानक सिद्धान्त रहेको छ। चम्स्कीले यस अघि पदावली संरचना अमूर्त हुने र बाहिरी तहमा आएपछि वा वाक्य संरचनामा आएपछि मात्र मूर्त हुने भन्ने मान्यता स्थापित गरेका थिए। विस्तारित मानक सिद्धान्तमा आइपुग्दा पदावली संरचना पनि अमूर्त हुँदैन। बाहिरी तहमा पदावली संरचनाको बनोट जस्तो छ, आन्तरिक संरचनामा पनि त्यही अनुसार नै हुन्छ भन्ने मान्यता अगाडि सारे।

### ५.३.१ शब्दवादी अवधारणा

विस्तारित मानक सिद्धान्तलाई शब्दवादी आधारणा भनिन्छ। यस सिद्धान्तको प्रतिपादन भएपछि भाषामा वाक्यात्मक संरचनालाई जोड दिइने पूर्ववर्ती मान्यतामा परिवर्तन भएको छ। पूर्ववर्ती सिद्धान्तमा वाक्यात्मक संरचनामा जोड दिएको थियो। शब्दलाई महत्त्व दिइएको थिएन। वाक्यात्मक संरचनामा नाम पदावली तथा क्रियापदावली गरी पदावलीको तहसम्म मात्र चर्चा गरिएको पाइन्छ। विस्तारित मानक सिद्धान्तमा आइपुग्दा भने शब्दवर्गका तहसम्म आइपुगिएको पाइन्छ। क्लासिकल सिद्धान्तमा नामपदावली र क्रिया पदावली तथा ती पदावलीका निर्धारक र नाम, मुक्रि र सक्रि जस्ता संरचनाको चर्चा गरिएको थियो। मानक सिद्धान्तमा नामपदावली र क्रियापदावलीलाई विशेषण र नाम, क्रियाविशेषण र क्रिया जस्ता एकाइमा हेर्ने गरिएको थियो। विस्तारित मानक सिद्धान्तमा आइपुग्दा भने पदावलीभित्र नाम, सर्वनाम, विशेषण, क्रिया विशेषण जस्ता शब्दवर्गको अस्तित्वलाई पनि स्वीकार गरियो। यस प्रकार शब्दवर्गको तहसम्म झरेर भाषाको अध्ययन गर्ने सिद्धान्तका रूपमा विस्तारित मानक सिद्धान्त रहेकाले यस सिद्धान्तलाई शब्दवादी अवधारणा भनिन्छ।

रूपान्तरण सिद्धान्तको विकास हने क्रममा चम्स्की र उनका विरोधीका दुईओटा धार देखा परेका छन्। चम्स्की र उनका अनुयायीको धारलाई चम्स्की स्वयम्ले शब्दवादी धार र अर्को धारलाई अर्थवादी धार मानेका छन्। त्यसैले विस्तारित मानक सिद्धान्तलाई शाब्दिक अवधारणा वा शब्दवादी अवधारणा भनिन्छ।

## ५.३.२ 'क' बार सिद्धान्त र नेपाली पदावलीका बारहरू

'क' बार सिद्धान्तलाई अङ्ग्रेजीमा x bar वा x bar theory भनिन्छ। विस्तारित मानक सिद्धान्त (२०७०) मा यो ('क' बार) सिद्धान्तको प्रस्ताव गरिएको छ। पदावली कसरी बन्दछ ? पदावलीका संरचकहरू के–के हुन सक्छन् ? पदावली कति प्रकारको हुन्छ र पदावलीका तहगत सम्बन्ध के–कस्तो हुन्छ भन्ने विषय 'क' बार सिद्धान्तको मुख्य विषय हो।

पदावली शब्दले पदहरूको समूह भन्ने अर्थ दिन्छ। यसर्थ पदावलीका घटक वा संरचक भनेको पद हो। पदहरू मिलेर पदावली बन्दछ। पदावलीभित्र आउने पदहरूका बिचमा अर्थतात्विक सम्बन्ध रहन्छ। 'क' बार सिद्धान्तले पदावलीमा आएका पदहरूको सम्बन्धको अध्ययन गर्दछ।

'क' बार सिद्धान्त अनुसार वाक्यमा आएका पदावलीहरू पनि तल्लो तहका र माथिल्लो तहका हुने गर्दछन्। हरेक पदावलीमा शीर्ष (मुख्य) र विशेषक (सहायक) पदहरू रहन्छन्। 'क' बार सिद्धान्त अनुसार तल्लो तहको पदावली र माथिल्लो तहको पदावलीका विशेषकहरू फरक–फरक हुन्छन्। 'क' बार सिद्धान्तले यस किसिमको तहका सम्बन्धको व्याख्या गर्दछ। 'क' बार सिद्धान्त पदावलीको द्विस्तरीय बारलाई दुइटा बार चिह्न(=) वा दोहोरो उद्धरण चिह्न ('') र एकल स्तरीय बारलाई एकल बार (–) वा एकल उद्धरण चिह्न (') द्वारा प्रस्तुत गरिन्छ।

**पदावलीलाई सामान्यतः चार प्रकारका विभक्त गरिएको पाइन्छ :**

(क) नामपदावली
(ख) विशेषण पदावली
(ग) क्रियाविशेषण पदावली र
(घ) क्रियापदावली

यी पदावलीको संरचना दुई तहको हुन्छ। माथिल्लो तहको पदावली दुईओटा बार चिह्नद्वारा सङ्केत गरिन्छ र तल्लो पदावली एउटा बार चिह्नद्वारा सङ्केत गरिन्छ। वाक्यमा नामपदावली र क्रियापदावली रहेको अवस्थामा वाक्य माथिल्लो तहको पदावली र नाम र क्रिप तल्लो तहका पदावली हुन्छन्। नापलाई विप र नाप गरी वर्गीकरण गरिएमा त्यस्तै क्रिपलाई क्रिविप र क्रिप गरी वर्गीकरण गरिएका तल्ला पदावलीहरू एक बार लागेका पदावली हुन्छन्। जस्तै :



माथिको उदाहरणमा सुरुका नाप-१ र क्रिप-१ दुई बार लागेका पदावली हुन्। त्यसपछिका विप, नाप-२, क्रिविप र क्रिया-२ एक बार लागेका पदावली हुन्।

'क' बार सिद्धान्त अनुसार नाम पदावली अन्तर्गत विशेषण पदावली वा नाम पदावली नै रहेमा अघिल्लो पदावली माथिल्लो वा दुई बारयुक्त पदावली हो। नाप र विप तल्लो तहका एकबार युक्त पदावली हुन्। त्यसरी नै क्रिप-२ जस्ता पदावली रहन सक्छन्। यसमा सुरुको क्रिप माथिल्लो तहको दुईबारयुक्त पदावली हो। यस अन्तर्गत रहेका नाप, क्रिविप, क्रिप दुई जस्ता पदावली १ बार युक्त पदावली हुन्।

पदावलीका बारहरू कति हुन्छन् भन्ने विषयमा भाषाशास्त्रीहरूका विभिन्न मत मतान्तर रहेका छन्। चम्स्कीले नाप पदावली, विशेषण पदावली, क्रिया विशेषण पदावली र क्रियापदावलीले दुई-दुई वटा बार लिन्छन् भन्ने बताएका छन्। अन्य विद्वान्हरू कसैले तिन बार, कसैले दुई बार, कसैले छ बार सम्मको चर्चा गरेका छन्। नेपालीमा नाम पदावली, क्रिया पदावली, विशेषण पदावली, क्रिया विशेषण पदावली गरी चारप्रकारका पदावलीहरू रहेका छन्। यी चारवटा पदावली मध्ये सामान्यतः नाम पदावली र क्रियापदावली माथिल्लो र तल्लो दुवै तहको पदावलीको रूपमा आउँछन्। विशेषण र क्रियाविशेषण पदावली भने सामान्यतः तल्लो तहको पदावलीका रूपमा आउँछन्। नाम पदावलीभित्र अर्को नाम पदावली र विशेषण पदावली आउने गर्दछ। क्रिया पदावलीभित्र नामपदावली, क्रिया विशेषण पदावली र क्रियापदावली आउने गर्दछन्।

'क' बार सिद्धान्त अनुसार नेपालीमा नाम पदावली तल्लो र माथिल्लो दुवै तहमा आउँछ। क्रिया पदावली पनि माथिल्लो र तल्लो दुवै तहमा आउँछ। माथिल्लो तहको नाम पदावलीको संरचना नि+ ना, हो। तल्लो तहको नाम पदावलीमा विशेषण पदावली र नामपदावली दुवै पर्दछन्।

माथिल्लो तहको क्रियापदावलीमा पूरक+ क्रिया, वा क्रिवि + क्रिया आउँछ। यसमा पूरकका रूपमा नाम विशेषण आदि पद आउँछ। जस्तै : असल छ (पूरक विशेषण), चोर हो (पूरक नाम)। तल्लो तहको क्रियापदावलीमा क्रियाविशेषण पदावली, नाम पदावली र क्रियापदावली आउने गर्दछ। नेपालीमा क्रियापदावली अन्तर्गत पूरक पदावली पनि आउन सक्छ। जस्तै : राम असल नेता हो। यहाँ 'असल' पूरक पदावली हो।

### ५.३.३ अवशेष सिद्धान्त : शीर्षकीकरण, जोड, उद्देश्य उत्थापन तथा स्थानान्तरण

#### अवशेष सिद्धान्त

विस्तारित मानक सिद्धान्तमा अवशेष सिद्धान्त महत्त्वपूर्ण अवधारणा हो। मानक सिद्धान्तमा रूपान्तरण नियमका चारओटा प्रकार लोप, आगम, आदेश र क्रमपरिवर्तन उल्लेख भएकोमा विस्तारित मानक सिद्धान्तमा क्रम परिवर्तन नियमलाई

थपी प्रस्तुत गरिएको अवधारणा अवशेष सिद्धान्त हो । यसलाई अवशेष र सञ्चलन पनि भनेको पाइन्छ।

वाक्यमा पदहरूको क्रम फरक-फरक हुनसक्छ । सामान्य नियम अनुसार वाक्यमा पदहरूको निश्चित क्रम हुन्छ । तर विशेष प्रयोगमा सामान्य पदक्रममा फेरबदल अथवा सञ्चलन हुने गर्दछ । यसरी सञ्चलन हुँदा वाक्यमा प्रयोग भएका पद वा पदावलीहरू आफ्नो ठाउँ छोडी अर्को ठाउँमा सर्दछन् । यसरी सर्ने प्रक्रियालाई सञ्चलन भनिन्छ र सञ्चलन हुनु अगाडिको संरचनामा रहेको ठाउँलाई अवशेष भनिन्छ। कुनै पद वा पदावली एक ठाउँबाट सञ्चलन हुँदा तिनले आफ्नो पुर्ख्यौली थलोमा केही न केही अवशेष छोडेका हुन्छन् भन्ने सिद्धान्त नै अवशेष सिद्धान्त हो।

अवशेष सिद्धान्तमा कुनै पद वा पदावली अन्यत्र सरेर गए पनि तिनको पुर्ख्यौली थलोसँग कुनै न कुनै सम्बन्ध रहेको हुन्छ भन्ने मानिन्छ । त्यही ठाउँलाई अङ्ग्रेजीको t अक्षर ले सङ्केत गर्ने प्रचलन छ। अङ्ग्रेजीमा अवशेष शब्द अथवा Trace (ट्रेस) को छोटकरी रूप t लाई यसको सङ्केत मानिन्छ।

अवशेष सिद्धान्त अनुसार वाक्य भित्रको कुनै पद, पदावली वा वाक्यांश बायाँ तथा माथि सरेर बस्न सक्दछ भने त्यसलाई सञ्चलन र दायाँ तथा तल सरेर बस्दछ भने त्यसलाई स्थानान्तरण भनिन्छ। धेरै जसो भाषामा बायाँ तथा माथितिर सर्ने अथवा सञ्चालित हुने प्रक्रिया पाइन्छ। दायाँ तथा तलतिर स्थानान्तरण हुने स्थिति भने ज्यादै कम हुने गरेको छ।

अवशेष सिद्धान्तमा सामान्यतः निम्न लिखित आधार हुने गर्दछन् :

१. वाक्यभित्र एक ठाउँमा खाली र अर्को ठाउँमा अतिरिक्त घटक आउँछ।

२. वाक्यमा खाली ठाउँ बन्ने र अर्को ठाउँमा अतिरिक्त घटक आउने अवस्था हुँदा पनि अर्थमा भने परिवर्तन हुँदैन । अर्थ परिवर्तन हुनेगरी सञ्चलन गर्न मिल्दैन।

३. खाली ठाउँमा सञ्चलन हुनुअघि कुनै घटक रहेको हुनुपर्दछ।

४. अतिरिक्त घटकको आफ्नो ठाउँ पनि अन्यत्र कुनै रहने प्रमाण देखाउनु पर्दछ।

जस्तै : हरिले आँप खायो। (सञ्चलन हुनु अघिको वाक्य)

आँप t हरिले खायो।

यहाँ आँप अतिरिक्त घटक हो । t ले अवशेष सङ्केत गरेको छ । नेपाली वाक्य ढाँचा अनुसार कर्ता + कर्म + क्रिया को संरचनाबाट वाक्य बन्दछ । यो संरचनामा 'हरिले आँप खायो' हुनुपर्थ्यो यसमा सञ्चलन भई आँप बायाँ तर्फ आयो नेपालीमा कर्ताभन्दा अगाडि कर्म आउनु अतिरिक्त अवस्था हो। यहाँ हरिले र खायोका बिचमा खाली ठाउँ रहन गयो। त्यहाँ कर्म हुन सक्थ्यो। त्यसर्थ त्यो खाली ठाउँमा कुनै घटकको अवशेष रहेको छ, जसलाई t सङ्केत गरिएको हो। त्यो अवशेष अतिरिक्त घटक वा आँपको ठाउँ हो।

अवशेष सिद्धान्तमा निम्न लिखित विषय पर्दछन् :

(क) शीर्षीकरण (ख) जोड (ग) उद्देश्य उत्थापन (घ) स्थानान्तरण

(क) शीर्षीकरण

वाक्यभित्रको कुनै घटकलाई त्यस त्यस वाक्यको सुरुमा ल्याएर त्यसलाई शीर्ष वा मुख्य बनाउने प्रक्रियालाई शीर्षीकरण भनिन्छ । वाक्यमा जुन विषयका बारेमा भन्न खोजिएको हो, त्यो विषयलाई अगाडि ल्याउँदा शीर्षीकरण हुन्छ । यसमा अगाडि आएको अंशलाई शीर्ष अंश र बाँकी अंशलाई 'कथन अंश' भनिन्छ । शीर्षीकरण प्रक्रियालाई विषयीकरण वा कथ्यीकरण पनि भनिन्छ । शीर्षीकरण (आन्तरिक तह र बाह्य तह) अथवा स्थानीय तह र बाह्य तह दुवैमा हुने गर्दछ । शब्दका तहमा हुने शीर्षीकरण स्थानीय तहको शीर्षीकरण हो । वाक्यको तहमा हुने शीर्षीकरण बाह्य तहको शीर्षीकरण हो ।

जस्तै : राम भात खान्छ । a⟹ सञ्चलन (स्थानीय तहमा शीर्षीकरण)

**खान्छ** भात राम t, t (१)

**भात** राम t खान्छ । (२)

यस उदाहरणमा उदाहरण (१) को सञ्चलनमा 'खान्छ' शीर्ष अंश र बाँकी अंश कथनअंश हो । उदाहरण (२) मा 'भात' शीर्ष अंश र बाँकी कथन अंश हो ।

मलाई राम सफल हुन्छ जस्तो लाग्छ । a⟹ सञ्चलन (बाह्य तहमा शीर्षीकरण)

**सफल** मलाई राम t हुन्छ जस्तो लाग्छ ।

यस सञ्चलनमा 'सफल' वाक्यांश वाक्यात्मक सीमा नाघेर सुरुमा आएको वा शीर्षीकरण भएको छ ।

शिवले देख्यो, गीताले सीतालाई कुट्दै थिई । a⟹ सञ्चलन

सीतालाई शिवले देख्यो गीताले t कुट्दै थिई ।

यहाँ पनि वाक्यको सीमा नाघेर शीर्षीकरण भएको छ ।

(ख) जोड :

वाक्यमा वक्ताले जोड दिन खोजिएको पद वा पदावलीलाई वाक्यमा शीर्षपछि ल्याएर राख्ने प्रक्रियालाई जोड भनिन्छ । जस्तै :

हरि घर जान्छ । a⟹ सञ्चलन

जान्छ घर हरि t, t ।

यस सञ्चलनमा 'जान्छ' शीर्ष र 'घर' जोड हो ।

उसले रामलाई पुस्तक दियो ।

रामलाई पुस्तक उसले t दियो ।

यहाँ, रामलाई – शीर्ष
पुस्तक – जोड
दियो रामलाई पुस्तक उसले t, t ।
यहाँ 'दियो' शीर्ष, 'रामलाई' जोड हो।

(ग) **उद्देश्य उत्थापन :** एउटा उपवाक्यको उद्देश्य त्यसभन्दा माथिल्लो तहको वाक्यको उद्देश्यका स्थानामा सञ्चलन भएर आउने प्रक्रिया उद्देश्य उत्थापन प्रक्रिया हो । नेपालीमा यसको उदाहरण पनि पाइँदैन । अन्य भाषाको उदाहरणका आधारमा हेर्दा निम्नानुसार बनाउन सकिन्छ :
राम, t राम पढ्छ।

यहाँ राम पछि केही लोप भएको वा शून्य अवस्था हुन्छ र यसको उद्देश्य दोस्रो उपवाक्यमा सञ्चालित भएको छ भन्ने मानिन्छ। (नेपालीमा राम छुटै उपवाक्य मानिँदैन र उद्देश्य उत्थापनलाई देखाउन गाह्रो भएको हो।)

(घ) **स्थानान्तरण :** वाक्यात्मक संरचनामा दायाँ तर्फ सञ्चलन हुने प्रक्रियालाई स्थानान्तरण भनिन्छ।
जस्तै :
हरिले राम पढ्छ भन्यो। a⟹ सञ्चलन
हरिले t भन्यो राम पढ्छ t ।
यहाँ 'राम पढ्छ' वाक्यात्मक संरचना दायाँतर्फ सरेको छ। यो स्थानान्तरण हो।

## ५.४ अधिशासन तथा आबद्धता सिद्धान्त

अधिशासन तथा आबद्धता सिद्धान्त मानक सिद्धान्त (१९६५) को विकसित रूप हो। मानक सिद्धान्तमा शब्दसमूह र कोटीकरणको चर्चा गरिएको पाइन्छ। यही शब्द समूह र कोटीकरण सिद्धान्तलाई फरक ढङगमा विश्लेषण गर्ने सिद्धान्तका रूपमा अधिशासन र आबद्धता सिद्धान्त आएको पाइन्छ। रूपान्तरण व्याकरणमा पदावली संरचना नियमका बारेमा विस्तृत अध्ययन हुँदै आएको पाइन्छ। अधिशासन सिद्धान्तमा आइपुग्दा पदावली संरचनालाई अधिशासन र अधिशासकका रूपमा विश्लेषण गर्न थालिएको पाइन्छ । यस प्रकार रूपान्तरण सिद्धान्तका पूर्ववर्ती मान्यताहरूलाई परिष्कृत र परिमार्जित गरी विस्तार गर्ने क्रममा अधिशासन र आबद्धता सिद्धान्तको विकास भएको देखिन्छ।

चम्स्कीले आफ्नो सिद्धान्तलाई अझ विकसित तुल्याउने क्रममा सन् १९८० मा प्रस्ताव गरेको अधिशासन (गभरमेन्ट–Grovenment) तथा आबद्धता ( बाइन्डिङ– Binding) को सिद्धान्तलाई जिबी सिद्धान्त (GB therory ) पनि भनिएको पाइन्छ। साथै आबद्धता सिद्धान्तलाई मापाङ्क (मोड्युलर : Modular)

सिद्धान्त पनि भनिएको पाइन्छ। यो सिद्धान्त जुनसुकै भाषाका वाक्यमा प्रायः प्रयोग गर्न सकिन्छ भन्ने चम्स्कीको मान्यता रहेको छ।

## ५.४.१ अधिशासन सम्बन्ध

रूपान्तरण सिद्धान्तमा पदावली संरचनाका बारेमा सुरुदेखि नै चर्चा परिचर्चा गरिएको पाइन्छ। पदावलीमा मुख्य पदलाई शीर्ष र सहायक पदालाई विशेषक भन्ने गरिएको पाइन्छ। जस्तै : 'राम्रो केटो' पदावलीमा 'केटो' शीर्ष र 'राम्रो' विशेषक हो। पदावलीमा रहेको यही शीर्ष र विशेषकलाई अधिशासन सिद्धान्तमा अधिशासक र अधिशासित भनिएको पाइन्छ। माथिको उदाहरणमा 'केटो' अधिशासक र 'राम्रो' अधिशासित हो।

अधिशासन सम्बन्धको मान्यता अनुसार पदावलीमा आउने पदहरूमध्ये मुख्यपद 'अधिशासक' हुन्छ र सहायक पद अधिशासित हुन्छ। यसको अर्थ मुख्य पदले अरु पदमाथि शासन गर्छ भन्ने हो। माथिको उदाहरणमा 'केटो' पदले 'राम्रो' पदमाथि शासन गरेको मानिन्छ। यस प्रकार पदावलीमा आएका पदहरूको सम्बन्ध अधिशासनको सम्बन्ध हुन्छ। यसमा अधिशासक पदले अधिशासित पदलाई नियन्त्रण गर्दछ।

नाम पदावलीको नामपद, विशेषण पदावलीको विशेषणपद, क्रियाविशेषण पदावलीको क्रियाविशेषण पद र क्रिया पदावलीमा क्रियापद अधिशासक हुन्।

वाक्यमा क्रियापद मुख्य हुनाले क्रियापद अधिशासक र अन्य पद अधिशासित हुन् भन्ने भनाइ पनि केही भाषाशास्त्रीले अगाडि सारेका छन् तर यो मान्यता स्थापित भने भएको छैन।

अधिशासन सिद्धान्तमा वाक्यको सही विश्लेषण गर्न पदावलीमा रहेका पदहरू मध्ये कुन पद अधिशासक र कुन पद अधिशासित हो भन्ने पत्ता लगाउन आवश्यक मानिन्छ। अधिशासन सिद्धान्तको व्याख्या रेखाचित्रमा सूत्रबद्ध गरेर गर्नुपर्दछ भन्ने मान्यता रहेको छ। यो सिद्धान्त राजनीतिक शासक र शासितका अवधारणासँग मिल्दोजुल्दो छ। भाषामा पनि कुनै पद शासकका रूपमा र कुनै पद शासितका रूपमा रहने अवधारणा अधिशासन सिद्धान्तको नामकरण गरिएको हो। यसलाई रेखाचित्रमा निम्नानुसार देखाउने गरिएको छ :



यसमा A अथवा पदावली अन्तर्गत B र C अथवा अधिशासक र अधिशासित पद रहेका हुन्छन् । यसमा C अथवा अधिशासकको नियन्त्रणमा B अथवा अधिशासित रहेको हुन्छ । वाक्य संरचनामा आउँदा अधिशासित (B) मात्रै आएर कुनै काम गर्न सक्दैन । तर अधिशासन (C) मात्रै ले भने काम गर्न सक्छ । जस्तै :







यहाँ पदावली १ को 'c' र पदावली दुईको c मिलेर वाक्य बन्न सक्छ, जस्तै : केटो पढ्छ । तर पदावली १ 'B' र पदावली २ को 'B' मिलेर भने वाक्य बन्न सक्दैन । यसैले माथिको उदाहरणमा 'C' पदको नियन्त्रणमा 'B' पद रहेको देखिन्छ । यसैलाई अधिशासन सम्बन्ध भनिन्छ ।

### ५.४.२ आबद्धता (बाइन्डिङ) र आत्मवाचीकरण

आबद्धता सिद्धान्तले कुनै वाक्यात्मक संरचनामा आएका संरचक घटकहरू एक अर्कामा आबद्ध छन् वा छैनन भन्ने विषयको अध्ययन गर्दछ । अधिशासन सम्बन्धले पदावलीमा कुन पद अधिशासक र कुन पद अधिशासित हो भनेर छुट्याउँछ भने आबद्धता सिद्धान्तले पदावली संरचनाका पदहरूको सबै प्रकारको सम्बन्धको अध्ययन गर्दछ । यस संरचनामा आएका कुन-कुन कोटिसँग कुन कोटि सम्बन्धित वा आबद्ध छन् ? र कुन कोटि असम्बन्धित वा मुक्त छन् भन्ने विषयको अध्ययन गर्दछ । यस सिद्धान्तमा नाम र सर्वनाम, पूर्वपद र पश्चपद आदिको सम्बन्ध वा आबद्धताको अध्ययन गरिन्छ । यस सिद्धान्तमा सामान्य सर्वनाम (ऊ,म, हामी), आत्मवाची सर्वनाम (आफू, स्वयम, आफ्नै), पारस्पारिक (जो, जसलाई, जुनचाँहि), अदृश्य सर्वनाम (खोई, ...गए जस्ता लुकेको सर्वनाम), प्रश्नवाची सर्वनामसँग सामान्य नामको आबद्धता र मुक्तताको निर्क्योल गर्ने गरिन्छ । वाक्यात्मक संरचनामा आएका यस्ता सर्वनाम र अन्य पदहरूका बिचको सम्बन्ध आबद्धपूर्ण छ वा मुक्त छ भन्ने विषयको अध्ययन नै आबद्धता सिद्धान्तको विषयक्षेत्र हो । यस सिद्धान्तका आधारमा नेपाली भाषाको अध्ययन भने खासै भएको पाइँदैन ।

आबद्धता सिद्धान्तमा आत्मवाचीकरणको विशेष चर्चा गरिएको पाइन्छ । आत्मवाचीकरण जनाउने कुनै नामपद स्वयम् वा आफैँलाई जनाउने बनाउनु हो । नेपालीमा आफू, आफैँ, स्वयम् जस्ता सर्वनामले आत्मवाचीकरणको काम गरेका हुन्छन् । आबद्धता सिद्धान्त अनुसार आत्मवाचक सर्वनाम सम्बन्धित नामसँग

पूर्णरूपमा आबद्ध हुन्छ। जस्तै : रामले आफूलाई धिकाऱ्यो। यहाँ राम र आफू आबद्ध छन्। मुक्त छैनन्।

### ५.४.३ अवधारणा (थिटा) भूमिकाको परिचय

अधिशासन र आबद्धता सिद्धान्त संरचनानिष्ट छन्, थिटा सिद्धान्त भने अर्थ पक्षसँग सम्बन्धित छ। यस सिद्धान्त अनुसार वाक्यात्मक संरचनामा आएका उद्देश्य ( कर्ता) तथा कर्मको (प्रत्यक्ष र अप्रत्यक्ष) आर्थी भूमिका हुन्छ । यस सिद्धान्तले अकर्मक क्रिया भएको वाक्यमा एउटा थिटा भूमिका हुन्छ, सकर्मक वाक्यमा दुईओटा थिटा भूमिका हुन्छ र द्विकर्मक वाक्यमा तिन ओटा थिटा भूमिका हुन्छ भन्ने मान्यता राख्दछ । थिटा भूमिकालाई अभिकर्ता, लक्ष्य र उदासीन गरी तिन प्रकारमा हेर्ने गरिएको पाइन्छ।

कर्तृवाच्यमा थिटा भूमिका अभिकर्ता, लक्ष्य र उदासीन तिनै ओटा हुनसक्छन् (तिनभन्दा घटी २ वा १)। कर्मवाच्यमा थिटा भूमिका लक्ष्य र उदासीन हुनसक्छ। भाववाच्यमा भने थिटा भूमिका शून्य हुन्छ। थिटा भूमिका नाम वा सर्वनाम शब्दमा मात्र हेर्न सकिन्छ। कर्तामा रहने थिटा भूमिकालाई अभिकर्ता, वस्तुमा रहने ठिय भूमिकालाई उदासीन र यी बाहेकका अरु थिटा भूमिकालाई लक्ष्य भनिन्छ।

**कर्तृवाच्य**

१. राम हाँस्यो।
थिटा भूमिका – अभिकर्ता (राम)

२. राम | पुस्तक किन्छ।
अभिकर्ता | उदासीन

३. रामले | हरिलाई | पैसा दियो।
अभिकर्ता | लक्ष्य | उदासीन

**कर्मवाच्य**

रामद्वारा पढिन्छ (–o )

१. रामद्वारा | पुस्तक किनिन्छ।
o | उदासीन

२. रामद्वारा | हरिलाई | पैसा दिइयो।
o | लक्ष्य | उदासीन

भाववाच्य

रामद्वारा हाँसिन्छ।

– ० (थिया)

## ५.५ पाणिनि र फिलमोरको कारकीय दृष्टिकोणले तुलना

पाणिनि संसारकै पुराना भाषाशास्त्री हुन्। उनले संस्कृत भाषाका बारेमा गरेको अध्ययन आधुनिक भाषाविज्ञानका लागि महत्त्वपूर्ण आधार मानिन्छ। पाणिनिले संस्कृत भाषाको पदरचना र वाक्यरचनाका बारेमा विस्तृत विवेचना गरेका छन्। यस क्रममा उनले कारकको पनि चर्चा गरेका छन्। यस क्रममा उनले विभक्तिका बारेमा पनि महत्त्वपूर्ण चर्चा गरेका छन्। उनले कारक र विभक्तिलाई अन्योन्याश्रित सम्बन्धका आधारमा हेरेका छन्। पाणिनिले संस्कृत भाषाका सन्दर्भमा कारकको चर्चा गरेका छन्। पाणिनिले कर्ता, कर्म, करण, सम्प्रदान, अपादान, अधिकरण र सम्बन्ध कारकको चर्चा गरेका छन्।

पाणिनिले क्रियापदसँग नामपदको सम्बन्धलाई कारक मानेका छन्। यो मान्यता फिलमोरको मान्यतासँग मिल्दोजुल्दो छ। वाक्यमा कारकको भूमिकालाई महत्त्व दिएर व्याख्या गर्ने पहिलो व्याकरणकार पाणिनि हुन् र व्याकरणका क्षेत्रमा कारकलाई स्थापित गर्ने फिलमोर हुन्। फिलमोर पाणिनिबाट प्रभावित देखिन्छन्। कतिपय कारकहरूको निर्धारणमा यी दुवै विद्वान् बिच केही समानता पाइन्छ। यस्ता केही समानता हुँदाहुँदै पनि पाणिनि र फिलमोरको कारकीय दृष्टिकोणमा भिन्नता रहेको छ। पाणिनिले संस्कृत भाषाका कारकको अध्ययन गरेका छन्। फिलमोरले संसारका सबै भाषामा कारकको उपस्थिति हुन्छ भन्ने सार्वभौम सिद्धान्तको प्रस्ताव गरेका छन्। पाणिनिले कारकको सामान्य चर्चा गरेका छन्। फिलमोरले कारकको सूक्ष्म र विस्तृत अध्ययन गरेका छन्।

❑❑

## परिच्छेद ६ प्रकरणार्थविज्ञान/प्रयोगार्थविज्ञान

### ६.१ परिचय

भाषाको प्रयोगपरक अर्थको अध्ययन गर्ने विज्ञान प्रकरणार्थविज्ञान हो । यसलाई प्रयोगार्थ विज्ञान पनि भनिन्छ । यो अर्थ विज्ञानको शाखा हो तर भाषाको प्रयोग समाजमा हुने हुनाले प्रकरणार्थ विज्ञानलाई समाज भाषा विज्ञानको शाखाका रूपमा समेत अध्ययन गर्न थालिएको छ। भाषाको संरचनागत अर्थको अध्ययन अर्थविज्ञान गर्दछ भने प्रकरणार्थविज्ञानले भाषाको प्रयोगको अर्थको अध्ययन गर्दछ।

प्रकरणार्थविज्ञानलाई अङ्ग्रेजीमा pragmatics भनिन्छ। यसको चर्चा गर्ने पहिला विद्वान् चार्ल्स मोरिस (Charrse Morris) हुन्। उनले सन् १९३८ मा यो शब्दको प्रयोग गरेका थिए। उनले सङ्केतविज्ञानका तिन शाखाहरू (वाक्यविज्ञान, अर्थविज्ञान र प्रकरणार्थविज्ञान) मध्ये एउटा शाखाका रूपमा यसलाई लिएका छन्। प्रकरणार्थविज्ञान सङ्केत र व्याख्याताका बिचको सम्बन्धको अध्ययन हो भन्ने मोरिसको धारणा देखिन्छ। यस सिद्धान्तलाई अगाडि बढाउने काममा अस्टिन, सर्ले, ग्राइस, डिवे, सिलर, जेम्स जस्ता विद्वान्हरूको महत्त्वपूर्ण योगदान रहेको छ।

प्रकरणार्थविज्ञानले भाषाको प्रयोग कुन प्रसङ्गमा भयो ? वक्ताले के बुझाउन खोजेको हो ? स्रोताले के बुझेको छ र कसरी बुझ्छ ? जस्ता विषयको अध्ययन गर्दछ । निर्देशन, व्यञ्जन, पूर्वधारणा, वाक्क्रिया र सङ्कथन संरचना प्रकरणार्थविज्ञानका क्षेत्र हुन्। यसको प्रकृति भौतिक, रासायनिक वा गणित जस्ता शुद्ध विज्ञान जस्तो हुँदैन । यो एउटा सामाजिक विज्ञान भएकाले यसको प्रकृति सामाजिकविज्ञानको जस्तो छ। यसको प्रकृति निरपेक्ष नभएर सापेक्ष हुन्छ।

### ६.२ सन्दर्भ र निर्देशन

सन्दर्भ

निर्देशक कोटिलाई कुनै निश्चित वस्तुसँग सम्बद्ध गर्ने कार्यलाई सन्दर्भ भनिन्छ। जस्तो "यो" ले कुनैबेला एउटा अर्थ दिन्छ भने अरूबेला अर्को प्रसङ्गमा अर्कै अर्थ दिन्छ। यसरी निर्देशकले अर्थ दिने अवस्था सिर्जना गर्नु सन्दर्भ हो । सन्दर्भ दुई किसिमका हुन्छन् :- १) भाषगत सन्दर्भ र २) वक्तागत सन्दर्भ ।

भाषगत सन्दर्भ अर्थविज्ञान अन्तर्गत पर्दछ । यसका दुई भेद छन् : शब्दमूलक र पाठमूलक । वक्तागत सन्दर्भ अग्र, पश्च, बाह्य र सह गरी चार प्रकारका भेद रहेका छन्।

**सन्दर्भबिन्दु**

निर्देशनको आधार सन्दर्भबिन्दु हो । सन्दर्भ बिन्दु वक्ता हुन्छ र स्रोता पनि हुनसक्छ। निर्देशन गर्ने बिन्दुदेखि अघिपछि, टाढानजिक, तलमाथिको समय, व्यक्ति वा स्थानतर्फ सन्दर्भ रहन्छ।

**निर्देशन**

कुनै कुरा देखाउने कार्य निर्देशन हो । भाषामा निर्देशन कोटिद्वारा वस्तुलाई देखाइन्छ। प्रयोग हेरेर मात्र निर्देशक कोटिका अर्थबोध हुन्छ। यो, त्यो, यता, त्यता जस्ता सर्वनामले निर्देशक कोटिको काम गर्दछन । निर्देशकको कार्यलाई निर्देशन भनिन्छ। निर्देशन ३ प्रकारका हुन्छन् :- वैयक्तिक, स्थानबोधक र समयबोधक ।

वैयक्तिक :- पुरुषवाचक सर्वनाम, म, हामी (प्रथम पुरुष), तिमी, तपाईं ( द्वितीय पुरुष), उनी, उहाँ ( तृतीय पुरुष) ।

स्थानबोधक :- यो, त्यो, यता, त्यता, उता, तल, माथि आदि ।

समयबोधक :- हिजो, आज, भोलि,

**निर्देशनका प्रकार**

स्थानवाची, व्यक्तिवाची, समयवाची, सङ्कथन, सामाजिक आदि निर्देशनका प्रकारहरू हुन् ।

## ६.३ निहितार्थ र पूर्वधारणा

**निहितार्थ**

एउटा वाक्यको अर्थभित्र अर्को वाक्यको अर्थ समाविष्ट हुनु निहितार्थ हो । जस्तै : 'ऊ भात खाएर अघायो' भन्ने वाक्यमा 'भात खानुअघि ऊ भोको थियो' भन्ने वाक्यको अर्थ निहित छ । यस प्रकार एउटा वाक्यमा अर्को वाक्यको अर्थसमेत समाविष्ट हुनु नै निहितार्थ हो ।

**पूर्वधारणा**

वक्ता र स्रोताबिचको साझा विश्वास वा साझा पूर्वानुमान नै पूर्वधारणा हो । यसमा एउटा सत्य भए पनि नभए पनि अर्को सत्य हुने सम्बन्ध पूर्वधारणा हो । जस्तो मार्नु भनियो भने मार्नुअघि त्यो मारिने वस्तु जीवित हुनु त्यसको पूर्वधारणा हो ।

## ६.४ वाक्क्रिया

वाक्क्रियाबारे अस्टिन (J.L. Austin) र उनका चेला सर्लेले विशेष चर्चा गरेका छन् । अस्टिनले वाक्क्रियाका लागि सम्पादनकारी क्रिया र सुहाउँदो शर्तको चर्चा गरेका छन्। उनका अनुसार क्रिया कि त सम्पादनकारी हुन्छ कि त सूचनामूलक हुन्छ । सम्पादनकारी क्रियासँग व्यक्ति र सूचनामूलक क्रियासँग सूचना हुन्छ । सम्पादनकारी क्रियासँग व्यक्ति र स्थानको उपयुक्ततता, कर्मको पूर्णता र उपयुक्तता तथा आशयको उपयुक्तता भएपछि वाक्क्रिया बन्दछ।

वाक्क्रिया हुनलाई निम्नानुसारका शर्त आवश्यक पर्दछ :-

(१) अर्थयुक्त वाक्यको उच्चारण हुनुपर्दछ ।

(२) उच्चारित वाक्यबाट वक्ताले स्रोतालाई केही काम गर्न प्रेरित गर्छ।

(३) स्रोतालाई प्रभाव पर्छ।

**वाक्क्रियाका प्रकार**

(१) निश्चयार्थक - समर्थन, निर्णय, निष्कर्ष आदि भाव व्यक्त गरिने अवस्था।

(२) निर्देशनात्मक - आज्ञा दिने, अनुरोध गर्ने आदि भाव व्यक्त गरिने अवस्था।

(३) प्रतिज्ञामूलक - प्रतिज्ञा, कबोल, कसम, सपथ आदि भाव व्यक्त गरिने अवस्था।

(४) अभिव्यक्तिमूलक - बधाई दिने, स्वागत गर्ने, समवेदना दिने आदि भाव व्यक्त गरिने अवस्था।

(५) घोषणात्मक - राजीनामा, विज्ञप्ति, नियुक्ति, घोषणा आदि भाव व्यक्त गरिने अवस्था।

## ६. ५ संवादात्मक तथा सहकार्यात्मक सिद्धान्त

वातचितमा सहभागी हुने वक्ता र स्रोताबिचको सम्बन्ध र संवादको अध्ययन गरेर अर्थबोध गर्नुपर्दछ भन्ने सिद्धान्त संवादात्मक सिद्धान्त हो । संवादलाई सरल बनाउन संवादमा सहभागीहरूको परस्पर सहयोग आवश्यक हुन्छ भन्ने सिद्धान्त सहकार्यात्मक सिद्धान्त हो। वातचितमा सहभागी हुने वक्ता र स्रोताबिचको संवाद र सहकार्य दुवैका आधारमा अर्थको अध्ययन यर्ने सिद्धान्त संवादात्मक तथा सहकार्यात्मक सिद्धान्त हो। भाषाशास्त्री एच.पी. ग्राइसले यस सिद्धान्तको सूत्रपात गरेका हुन्। यस सिद्धान्तले सहभागीहरूको पालो, क्रमबद्धता, पारस्परिक सहयोग र तात्कालिन परिस्थिति समेतलाई हेरेर उनीहरूबिच प्रयोग भएको भाषाको अर्थको अध्ययन गर्दछ।

यस सिद्धान्तअनुसार संवादमा आवश्यक पर्ने उक्तिलाई निम्नानुसार वर्गीकरण गरिएको छ :-

(१) गुणोक्ति : सत्य र प्रभाव भएको कुरा मात्र भन्ने प्रकारको उक्तिलाई गुणोक्ति भनिन्छ।

(२) परिमाणोक्ति : आवश्यक पर्नेजति सबै सूचना दिन चाहने उक्तिलाई परिमाणोक्ति भनिन्छ।

(३) सम्बन्धोक्ति : सम्बन्धित कुरा मात्र बोल्ने उक्तिको तरिकालाई परिणामोक्ति भनिन्छ।

(४) व्यावहारोक्ति : व्यावहारिक, स्पष्ट, सन्देहमुक्त, सङ्क्षेप र क्रमबद्ध उक्तिलाई व्यावहारोक्ति भनिन्छ।

यिनै उक्तिका आधारमा यस संवादात्मक तथा सहकार्यात्मक सिद्धान्तअन्तर्गत निम्नानुसारका ४ वटा सिद्धान्त रहेका छन्:-

(१) गुणात्मकताको सिद्धान्त : सत्य र प्रभाव भएको कुरा मात्र भन्नु पर्दछ भन्ने सिद्धान्तलाई गुणात्मकताको सिद्धान्त भनिन्छ।

(२) परिमाणात्मकताको सिद्धान्त : आवश्यक पर्नेजति सबै सूचना दिनु पर्दछ भन्ने सिद्धान्त परिमाणात्मकताको सिद्धान्त भनिन्छ।

(३) सम्बन्धको सिद्धान्त : सम्बन्धित कुरा मात्र बोल्नु पर्दछ भन्ने सिद्धान्त सम्बन्धको सिद्धान्त भनिन्छ।

(४) व्यवहार र आचारको सिद्धान्त : संवाद व्यावहारिक, स्पष्ट, सन्देहमुक्त, सङ्क्षेप र क्रमबद्ध हुनुपर्दछ भन्ने सिद्धान्त व्यवहार र आचारको सिद्धान्त भनिन्छ।

ग्राइसले प्रतिपादन गरेका हुनाले यसलाई गाइसका चार सिद्धान्त पनि भनिन्छ।

## ६.६ सन्निधान सिद्धान्त

यस सिद्धान्तका प्रवर्तक फर्थ (Firth) हुन्। यस सिद्धान्तलाई सहप्रयोग पनि भनिन्छ। सन्निधान भनेको भाषिक प्रसङ्ग हो। यस सिद्धान्तले एउटा भाषिक एकाइको अर्थ अर्को भाषिक एकाइबाट खुल्दछ भन्ने मान्यता राख्दछ। यसलाई सहकार्यात्मक अर्थका रूपमा पनि लिइन्छ। जस्तै : (क) मलाई अर्थको अभाव छ। (ख) मलाई जिन्दगीको अर्थ खोज्न मन लाग्या छ।

यी भिन्न वाक्यमा प्रयोग भएको अर्थ शब्दको अर्थ सँगैका अरूशब्दको सानिध्यताबाट खुलेको छ। यसप्रकारको अर्थसम्बन्धी सिद्धान्तको सन्निधान सिद्धान्त हो।



# परिशिष्ट : पाठ्यक्रम

## स्नातकोत्तर तह द्वितीय वर्ष भाषिक अध्ययन परम्परा र प्रमुख भाषिक सम्प्रदाय (Nep- 539-1) को पाठ्यक्रम

**१. पाठ्यांश परिचय**

भाषिक चिन्तनका प्राचीन परम्पराका साथै आधुनिक वर्णनात्मक भाषाविज्ञानका प्रमुख सम्प्रदायको अध्ययन

**२. पाठ्यांशको उद्देश्य**

यस पाठ्यांशको अध्ययनबाट विद्यार्थीहरू निम्न लिखित ज्ञान र क्षमताको विकास गर्न समर्थ हुनेछन् ।

(क) भाषिक चिन्तनको पूर्वीय परम्पराको जानकारी प्राप्त गर्न
(ख) युरोपली भाषिक चिन्तन परम्परा र ऐतिहासिक भाषा विज्ञानबारे जानकारी प्राप्त गर्न
(ग) आधुनिक भाषा विज्ञानको विकास प्रक्रिया र भाषा सम्बन्धी प्रमुख मान्यताबाट परिचित हुन
(घ) व्यवस्थापरक –प्रकार्यपरक व्याकरणका भाषिक विश्लेषण पद्धतिसँग अवगत हुन
(ङ) रूपान्तरण व्याकरणका भाषिक विश्लेषण पद्धतिको ज्ञान प्राप्त गर्न

**३. एकाइ विभाजन**

एकाइ – क भाषिक चिन्तनको पूर्वीय परम्परा (वार्षिक कक्षा २५)
एकाइ – ख युरोपेली भाषिक चिन्तन परम्परा र ऐतिहासिक भाषा विज्ञान (वार्षिक कक्षा २५)
एकाइ – ग आधुनिक भाषा विज्ञानको विकास प्रक्रिया र भाषा सम्बन्धी प्रमुख मान्यता (वार्षिक कक्षा ३०)
एकाइ – घ व्यवस्थापरक – प्रकार्यपरक व्याकरण (भाषिक कक्षा ३०)
एकाइ – ङ रूपान्तरण व्याकरण (वार्षिक कक्षा ४०)

**४. पाठ्यवस्तु विवरण**

एकाइ –क

भाषिक चिन्तनको पूर्वीय परम्परा

(१) वैदिक भाषिक चिन्तन

(क) वेद, ब्राह्मण र उपनिषद्मा भाषा सम्बन्धी चर्चा

(ख निघण्टु र यास्कको निरुक्त ग्रन्थको भाषावैज्ञानिक विवेचना
(ग) शिक्षा ग्रन्थहरूमा प्रतिपादित वर्णोच्चण प्रक्रिया
(घ) पूर्वपाणिनीय व्याकरण परम्परा

(२) पाणिनीय भाषिक चिन्तन
(क) व्याकरणकार पाणिनि र उनका व्याकरण ग्रन्थ
(ख) पाणिनिको व्याकरणमा सूत्र, शैली, प्रत्याहार व्यवस्था र संज्ञाकरण
(ग) पाणिनिको व्याकरणमा अधिकार र अन्तरालम्बन सम्बन्धी धारणाहरू
(घ) पाणिनीय व्याकरणमा वर्ण व्यवस्था, सन्धि प्रक्रिया, पदरचना र कारक प्रक्रिया
(ङ) पाणिनीय व्याकारण परम्परमा कात्यायन र पतञ्जलिको योगदान
(च) पाणिनीय व्याकरणका टीका, वृत्ति र कौमुदी परम्परा

(३) उत्तर पाणिनीय व्याकरण चिन्तन
(क) मौलिक व्याकरण गंन्थ परम्परा
(ख) भर्तृहरिको व्याकरणमा पद तथा वाक्य सम्बन्धी मान्यता
(ग) प्राकृत र अपभ्रंशको विकास प्रक्रिया
(घ) हेमन्द्रको शब्दानुशासनमा वर्ण परिवर्तनसम्बन्धी व्यवस्था

(४) पूर्वीय अर्थ चिन्तन
(क) शब्दार्थ सम्बन्धी स्फोटवादी र अपोहवादी मान्यता
(ख) वाक्यार्थ सम्बन्धी अभिहितान्वयवादी तथा अन्विताभिधानवादी मान्यता

**एकाइ –ख**

युरोपेली भाषिक चिन्तन परम्परा र ऐतिहासिक भाषा विज्ञान
(१) ग्रिसेली भाषिक चिन्तन परम्परा र यसका प्रमुख उपलब्धि
(२) रोमेली भाषिक चिन्तन परम्परा र यसका प्रमुख उपलब्धि
(३) पोर्ट रोयल व्याकरण र त्यसपछिका अन्य व्याकरण परम्परा ल्याटिन व्याकरणको प्रभाव
(४) ऐतिहासिक भाषा विज्ञानका भाषा सम्बन्धी मान्यता
(क) ऐतिहासिक भाषा विज्ञानको प्रवर्तन, विकास प्रक्रिया र प्रमुख अध्येता
(ख) ऐतिहासिक भाषा विज्ञानका प्रमुख मान्यता र उपलब्धि
(ग) नव्य वैयाकरणहरूको भाषिक चिन्तनमा विकासवाद र इतिहासवादको प्रभाव

**एकाइ –ग**

आधुनिक भाषा विज्ञानको विकास प्रक्रिया र भाषा सम्बन्धी प्रमुख मान्यता
(१) युरोपेली तथा अमेरिकाली संरचनावादको विकास र यसका आधारभूत मान्यता
(२) रूपार्थपरक व्याकरणको विकास र यसका आधारभूत मान्यता

(३) व्यवस्थापक / प्रकार्य परक भाषा विज्ञानको विकास र यसका आधारभूत मान्यता

(४) कारक व्याकरणको विकास र यसका आधारभूत मान्यता

(५) रूपान्तरण व्याकरणको विकास र यसका आधारभूत मान्यता

**एकाइ –घ**

व्यवस्थापरक प्रकार्यपरक व्याकरणको भाषिक विश्लेषण पद्धति

(१) **व्यवस्थापरक विश्लेषण पद्धति**

(अ) भाषाका तह र अन्तर्तहको पहिचान

(आ) भाषामा शृङ्खला र छनोट सम्बन्ध

(इ) भाषिक एकाइ र श्रेणी

(ई) भाषिक सूक्ष्मता

(२) **प्रकार्यपरक विश्लेषण पद्धति**

(अ) भाषांश / पाठ र परिस्थितिगत सन्दर्भ

(आ) पाठका प्रयोजनपरक भेद (रजिस्टर) र विधा (जान्र)

(इ) पाठका अधिप्रकार्य : उद्भावनात्मक, अन्तर्वैयक्तिक र पाठपरक

(ई) पाठगत संसक्ति : सन्दर्भन, प्रतिस्थापन, विलोपन, संयोजन, पुनः कथन र साहचर्य

(उ) पाठगत संयुक्ति : सांस्कृतिक सन्दर्भ (संस्थागत र वैचारिक,) अन्तर पाठात्मकता

(ए) पाठका सन्दर्भगत आयाम : क्षेत्र, सहभागी र पद्धति

**एकाइ –ङ**

रूपान्तरण व्याकरणको भाषिक विश्लेषण पद्धति

(१) **क्लासिकल सिद्धान्त**

(क) पदावली संरचना नियम सम्बन्धी प्रयोग र अभ्यास

(ख) रूपान्तरण नियम र यसका प्रकारहरूको परिचय तथा अभ्यास

(ग) आधार वाक्यबाट अन्य वाक्यमा रूपान्तरण सम्बन्धी प्रयोग र अभ्यास

(२) **मानक सिद्धान्त**

(क) वाक्यात्मक घटक : कोटीकरण र शब्दसमूहन

(ख) पदावलीका प्रकारहरूको प्रयोग र अभ्यास

(ग) आर्थी घटक र व्याख्यात्मक प्रयोग र अभ्यास

(घ) रूपान्तरण प्रक्रिया (लोप, आगम, आदेश र क्रमपरिवर्तन) को परिचय र अभ्यास

(ङ) उत्पादक अर्थविज्ञान

(३) **विस्तारित मानक सिद्धान्त**

(क) अधिशासन सम्बन्ध

(ख) "क" बार सिद्धान्त र नेपाली पदावलीका बारहरू

(ग) अवशेष सिद्धान्त र शीर्षीकरण, जोड, उद्देश्य, उत्थापन तथा स्थानान्तरणको परिचय र अभ्यास

(४) अधिशासन र आबद्धता सिद्धान्त

(क) अधिशासन सम्बन्ध

(ख) आबद्धता (बाइन्डिङ) र आत्मवाचीकरण प्रक्रिया

(ग) अवधारण (थिटा) भूमिकाको परिचय

(घ) सीमान्त अवस्थाको परिचय

(ङ) कारकीय सम्बन्ध

(५) कारक सिद्धान्त र फिलमोर तथा पाणिनिका कारकीय दृष्टिकोणको तुलना

□□

